गोरक्षग्रन्थमालायामष्टाशीतितमं पुष्पम् ८८

# देवमाला वंशावली



गोरक्षराष्ट्र-नेपाल-सिद्धाचलमृगस्थली ।
यत्र गोरक्षनाथेन मेघमालाऽऽसनीकृता ॥

प्रकाशकः—
श्रीपीरमहन्त क्षिप्रानाथ योगिराज
गोरक्षराष्ट्र नेपाल सिद्धाचलमृगस्थली

ॐ

# परिचय

यो देवमाला वंशावली नेपालका वंशावलीहरुका र देखे सुनेका भरमा सं० १९९० पछि लेखेको हो। काठमाडौं लगनटोल निवासी डी० भैरवबहादुर अधिकारीका सौजन्यबाट प्राप्त भयो। यसमा नेपालका प्रसिद्ध २ देवता र मुख्य २ स्थलहरुको यथादृष्टश्रुत इतिवृत्त छ। यसबाट आज सम्म प्रकाशमा नआएका धेरै कुराहरु जानिन्छन् र सबैले नेपालको परिचय पाउन सक्ने छन्। यद्यपि यस भन्दा धेरै ज्ञातव्य अरु शेष छ उपलब्ध छ र प्रकाश गरी प्रचार गर्ने विचार पनि छ। तर राष्ट्रका सर्वाङ्गीण इतिहास प्रकाशबाट अवकाश नपाउँदा यो यत्तिकै यथालब्ध प्रकाशित हुन गएको छ। यस्ता कृतिबाट सबैमा चेतना आयो र सहयोग पाईयो भने यस्ता पचासौं भाग अरु प्रकासमा आउनेछन्। जो अनेक कारणबाट यसभन्दा विशिष्ट हुने छन्। हिमाल ऐतिहासिक सामग्रीको अखण्ड भण्डार हो। हिमवत्खण्डको सम्पादन भै सकेको छ। केवल अर्थाभावमा रोकिएको छ। सूचित गरिएका धेरै देवस्थल अर्का खण्डमा छन्।

यस देवमालाका प्रकाशनमा अर्थसहयोग कमाण्डिङ् जनरल गेहेन्द्र-शम्सेर ज० बा० रा० का सुपुत्र ज० सूरशम्सेर ज० बा० रा० द्वारा भएको छ। यहाँका अरु धार्मिक कृत्यहरू-गौरीघाटमा विजुलीवत्ति २ र हिउँद (मीन ५० ) स्नाता यात्रीहरुलाई आगो तापना निम्ति पराल गुठी, थानकोटमा सदावर्त पौवा, कलकत्तामा आतुरालय र का. माई. कालेजलाई अर्थ सहयोग इत्यादि।

पूर्वं किरातनृपलिच्छविमल्लसाहैः
संस्थापितानि कुलदेवकुलानि यानि।
अन्यच्च कालकवलीकृतशेषवृत्तं
चित्वा जनेषु वितरिष्यति देवमाला ॥१॥
नेपालमण्डलसरोवरपद्ममाला
सिद्धर्षिदेवगणलुब्धमधुव्रताली ।
प्राचीनपूरुषयशःसुरभिर्गुणाढ्या
कण्ठेषु तिष्ठतु सतां प्रियदेवमाला ॥२॥

योगी नरहरिनाथः मृगस्थली गोरक्षपीठ २०१३।४।६।२

# देवमालापरिचय ( द्वितीयावृत्ति )

यो देवमाला वंशावली वाग्वतीप्रदेशका प्रमुखकतिपय देवीदेवताहरुको परिचय हो । राजा प्रजाको चर्चा पनि छ । काठमाँडुमा बसेर काठमाँडुकै मानिसले लेखेको हो । तर लेखकको नाम छैन । लेखनशैली पौराणिक छ । विक्रमसंवत् १९९० सालको महाभूकम्प भै सके पछि लेखियेको हो । पौराणिक दृष्टिकोणले हेर्नेहरुलाइ रमाइलो छ ।

परन्तु ऐतिहासिक अनुसन्धाता र पुरातात्त्विक तत्त्ववेत्ताहरुका लागी उत्तिको उपयोगी छैन । धेरै कुरा भ्रामक पनि छन् । जस्तो समसुद्दीनका ठाउँमा अमर बाडाको नाउँ लेखियेको छ । यस्तै प्रायः सबै तथ्य तिरोहित छन् । अतिरञ्जित अतिशयोक्ति प्रशस्त छन् । नब्बे सालका महाभूकम्पको प्रलयङ्कर दृश्य देखेर पुराना वंशावलीका आडमा काठमाँडु पाटन भातगाउँ तीनै सहर घूमेर केही स्वयं देखेको र सुनेको भरमा पनि लेखियेको छ । ब्रह्मसंसेरले लेखेका सचित्र महाभूकम्प पुस्तकबाट पनि कतिपय कुरा लिइयेका छन् । जे होस् , न हुनु मामा चाँहीं कानै मामा भनेझैं आंशिक काम यसले पनि गर्छ । यत्ति पनि न जानेका धेरै छन् । रजहाँसका चुच्चाले काम लिने हो भने, कतिपय ऐतिहासिक तथ्य पनि फेला पर्ने छन् । पौराणिक प्रणालीमा अर्थवाद प्रधान छ । इतिहासमा भूतार्थवाद प्रधान हुन्छ ।

समय एव करोति बलाबलम् । असमये मतिरुन्मिषति ध्रुवम् । उम्केको माछो ठूलो । मोरेको माञ्छे निको, भन्छन् । मौका चुकी सके पछि झल्याँस्स ब्युँझने माञ्छेको चाला छ । स्वर्णमय लङ्का भस्मसात् भै सके पछि सुन्दर-काण्ड लेखियो । अयोध्या ध्वस्त भै सके पछि अयोध्याकाण्ड लेखियो । कुरुक्षेत्रका संग्राममा ज्ञान विज्ञान कला कौशल शौर्य वीर्य निर्मूल भै सके पछि महाभारत लेखियो । ने० सं० ४७० मार्ग शुदि १० बृहस्पेति वारका दिन—'सुरत्राणसमस्दीनो बङ्गालबहुलैर्बलैः । सहागत्य च नेपालो भग्नो दग्धश्च सर्वशः ।' 'सुल्तानसामसदिनो यवनाधिराजो नेपालसर्वनगरं भस्मीकरोति ।' यसरी सुल्तान समसुद्दीनले नेपाल ध्वस्त पारी सके पछि जयस्थितिमल्ल ( स्थितिराजमल्ल ) ले इतिहासको विउ मासिन आँट्यो भनेर नष्ट भ्रष्ट कीटकिट्ट दग्ध जग्ध ऐतिहासिक सामग्रीसङ्ग्रह गरेर गोपाल वंशावली लेखाये । तेस्तै १९९० माघका महाभूकम्पले ऐतिहासिक सामग्री-समेत प्राचीन वास्तुकलाको खण्ड-प्रलय गरी सके पछि बल्ल लेखेको यो देवमाला वंशावली हो ।

योगी नरहरिनाथः ।

# सूची-पत्र


| विषय | | | पृष्ठ |
|---|---|---|---|
| ओं श्री पशुपतिनाथ | १ | ,, शिखरनारायण फर्पिङ | ३८ |
| ,, गुह्येश्वरी | १५ | श्री कोटीश्वर महादेव पाटन | ,, |
| देवपाटन | १७ | ,, गोकर्णेश्वर महादेव देउपाटन | ३९ |
| ,, उग्रतारा वज्रयोगिनी | ,, | ,, सेतो मत्स्येन्द्रनाथ काठमाडौं | ,, |
| ,, नारायणहिटि धारा | १८ | ,, काशिसिम्बु | ,, |
| ,, स्वयम्भूलिंग चैत्य | १९ | ,, भद्रकाली | ४० |
| ,, बुढानीलकण्ठ | २१ | ,, कङ्केश्वरी | ,, |
| ,, चाँगु नारायण | २२ | ,, मत्येश्वरी नवदुर्गा काठमाडौं | ४१ |
| ,, चण्डेश्वरी वनेपा | २३ | ,, विद्येश्वरी काठमाडौं | ४२ |
| ,, खास्तिबौद्धचैत्य | २४ | ,, इन्द्रायनी लुटि ऐ | ,, |
| ,, मत्स्येन्द्रनाथ पाटन | २५ | ,, मनमैजु फुसिंखेल | ,, |
| ,, पञ्चलिङ्ग पचली | २९ | ,, भीमसेन काठमाडौं | ४३ |
| ,, किरातेश्वर मृगस्थली | ३० | ,, तुलजा भवानी भक्तपुर | ,, |
| ,, कुम्भेश्व पाटन | ३१ | ,, बालकुमारी ललितपुर | ४८ |
| ,, भीमसेन पाटन | ३२ | ,, बासुकि देउपाटन | ४८ |
| ,, जयवागीश्वरी देउपाटन | ३३ | ,, भैरवनाथ इन्द्रचोक | ४९ |
| ,, प्रयागभैरव पाटन | ३४ | ,, कान्तीश्वर इन्द्रचोक | ,, |
| ,, मीननाथ पाटन | ३५ | ,, महालक्ष्मी ऐ | ५० |
| ,, गोदावरी कुण्ड पाटन | ,, | ,, मृगरूप आर्यघाट | ,, |
| ,, वनकाली देउपाटन | ३६ | ,, माहाकाल भैरव टुडीखेल | ,, |
| ,, वच्छला देवी देउपाटन | ,, | ,, शंकटा टेबहाल | ५१ |
| ,, राजराजेश्वरी देउपाटन | ३७ | ,, भैरवनाथ भक्तपुर | ५२ |
| ,, इङ्गुनारायण | ,, | ,, तुलजा भवानी कान्तिपुर | ५३ |

विषय पृष्ठ


| विषय | पृष्ठ |
|---|---|
| श्री दिगुतले कान्तिपुर | ५४ |
| ,, दिगुतुलजाभवानी ललितपुर | ५५ |
| ,, तुलजा भवानी ललितपुर | ,, |
| ,, कृष्णमन्दिर ललितपुर | ५७ |
| ,, वज्रवाराही चापागाउँ | ५८ |
| ,, चन्द्रविनायक चोभार | ,, |
| ,, मन्कोबहाल पाटन् | ५९ |
| ,, ज्यावला पोखरी ल. पु. | ,, |
| ,, रानीपोखरी कान्तिपुर | ६० |
| ,, हयग्रीव भैरव बुग्मती | ६१ |
| ,, विशंखुनारायण ललितपुर | ,, |
| ,, दक्षिणकाली फरपीङ | ,, |
| ,, कालभैरव कान्तिपुर | ६२ |
| ,, हनुमानढोका दरवार कान्तिपुर | ,, |
| ,, जापा ईनार कान्तिपुर | ६३ |
| ,, नृत्यनाथ काठमाडौं | ,, |
| ,, श्वेतकाली कान्तिपुर | ,, |
| ,, रक्तकाली ,, | ६४ |
| ,, भाटभटेनी हाडीगाउँ | ,, |
| ,, गोपालेश्वर फरपीङ | ६५ |
| ,, उग्रतारा नीलसरस्वती कान्तिपुर | ,, |
| ,, लुचुमड्डी कान्तिपुर | ६६ |
| ,, छायाछत्रपीठ कान्तिपुर | ,, |
| श्री अशोक विनायक गणेश कान्तिपुर | ,, |
| ,, मीनतीर्थ मत्स्यगाउँ | ,, |
| ,, चावहील गणेश | ६७ |
| ,, हारतीमाई स्वयम्भू | ,, |
| ,, नवदुर्गा भक्तपुर | ६८ |
| ,, हरसिद्धिदेवी | ,, |
| ,, कोटिलिङ्ग कान्तिपुर | ७० |
| ,, वाघभैरव कीर्तिपुर | ,, |
| ,, नीलवाराही बोडेगा | ,, |
| ,, ज्ञानेश्वर धोबीखोला | ७१ |
| ,, ४ चैत्यहरू ललितपुर | ,, |
| ,, काबाहा बौद्ध मन्दीर ललितपुर | ,, |
| ,, पूर्णचण्डी ललितपुर | ७२ |
| ,, ५ तले देवल भक्तपुर | ,, |
| ,, पशुपतिनाथ काठमाडौं मेखन | , |
| ,, वज्रयोगिनी चीकँमुगल | ७३ |
| ,, धन्वन्तरी बाराही ललितपुर | ,, |
| ,, ठूलोघण्टा पाटन | ,, |
| ,, अग्निमठ पाटन | ७४ |
| ,, वैष्णवीयप्या पाटन | ,, |
| ,, सिद्ध पोखरी भक्तपुर | ७५ |
| ,, जगन्नाथ दरवार अगाडी का. पु. | ,, |
| ,, माहालक्ष्मी थछे ल. पु. | ७६ |
| श्री दत्तात्रयनाथ भक्तपुर | ७७ |
| श्री कुमारीयात्रा कान्तिपुर | ७७ |
| ,, ठूलोभैरव देगुतलेसँघि कान्तिपुर | ७८ |

विषय पृष्ठ


| विषय | पृष्ठ | विषय | पृष्ठ |
|---|---|---|---|
| श्रीठूलोघण्टाठूलो नगरा कान्तिपुर | ,, | श्री ललितपट्टन सहर पाटन | ८६ |
| ,, विश्वरूप मृगस्थली | ७६ | ,, भक्तपुर, फरपीङ सहर | ६२ |
| ,, रणमुक्तेश्वर कान्तिपुर | ,, | ,, साँखु ठवहील, देउपाटन, पनौती, | ,, |
| ,, त्रिपुरेश्वर कालमोचनघाट | ,, | ,, वनेपा सहर चाँगु, पुलचोक, सहर | ६१ |
| ,, सत्यनारायण थापाथली | ८० | ,, ठीमी, नकदेश, घोडे सहर, | ,, |
| ,, सुनधारा टुडीखेल | ,, | ,, पाँगा, खोकना सहर सुनागुठी लेले महर | ६४ |
| ,, धरहरा काठमाडौं | ,, | ,, चापागाउँ, | ,, |
| ,, भीममुक्तेश्वर कान्तिपुर | ८१ | ,, बुगमती सहरखानानाउँ, हरसिद्धि, ठेचो, थानकोट सहर | ६५ |
| ,, थापाथली बाग्मतीपुल | ,, | ,, ठैव, सतुङ्गल सहर | ६६ |
| ,, पुलहरु ठाउँ ठाउँको | ८२ | ,, वलंबु, धर्मथली,, तोखा सहर | ,, |
| ,, टुडीखेल कान्तिपुर | ८३ | ,, फुटगाउँ, | ,, |
| ,, छाउनी शिलखाना | ८४ | ,, बुढानिलकण्ठ, गोकर्ण, लुभु सहर बुल्हु सहर, | ६७ |
| ,, नारायणहिटी माथिल्ला दरवार | ,, | ,, गुह्येश्वरीघाट देउपाटन | ,, |
| ,, नारायण हीटी तल्लो दरवार | ,, | ,, गौरीघाट देउपाटन | ६८ |
| ,, थापाथली दरवार कान्तिपुर | ,, | ,, आर्यघाट देउपाटन | ,, |
| ,, सिंहदरवार कान्तिपुर | ,, | ,, राजराजेश्वरी देउपाटन | ६६ |
| ,, कोतघर सिखामहल | ८५ | ,, शान्तिपुर कान्तिपुर | ,, |
| ,, ठूलोघण्टा भक्तपुर | ,, | ,, चावहील बौद्ध मन्दिर | १०० |
| ,, कीर्तिपुर सहर | ८६ | ,, मैतिदेवी डिल्लीबजार | १०१ |
| ,, नन्दिकेश्वर नक्साल | ,, | | |
| ,, नवसागर भगवती नक्साल | ८७ | | |
| ,, शोभाभगवती कान्तिपुर | ८७ | | |
| ,, मदुसतल ( काठमाडु गोरखनाथ मन्दिर ) कान्तिपुर | ८८ | | |
| ,, कान्तिपुर काठमाडौं सहर | ,, | | |

| विषय | | | पृष्ठ |
|---|---|---|---|
| श्री आदिनाथ लोकेश्वर चोभार | ,, | श्री अष्टमातृकापीठ भक्तपुर | १०४ |
| ,, बाडागाउँ बौद्धचैत्य | १०१ | ,, धूमावती सुकुलढोका भक्तपुर | १०५ |
| ,, मदुटोलमा बाडायात्रा | १०२ | ,, भक्तपुर दरबार | ,, |
| ,, त्रिशूलयात्रा देउपाटन | ,, | ,, शङ्करेश्वर माहादेव ४ दुगे | १०६ |
| ,, तुनालदेवी हाँडीगाउँ | १०३ | ,, पाटन दरबार | १०६ |
| ,, जगन्नाथ मखनटोल काठमाडौं | ,, | ,, मत्स्येन्द्रनाथको कथा | १ |

———



*गोरक्षग्रन्थमालायां नवाशीतितमं पुष्पम् ८९*

# देवमाला वंशावली

## श्री पशुपतिनाथ

नमो गोरक्षकालीभ्याम् ॥ श्री गणेशाय नमः ॥ श्री गुरुवे नमः ॥ श्रीसरस्वत्यै नमः ॥ अव्यक्तेषु भवेत्सृष्टिर्व्यक्तश्चैव विनश्यति । अव्यक्तं ब्रह्मणः स्थानं सृष्टिसंहारवर्जितम् ॥ अव्यक्तदेखी सृष्टि हुन्छ अव्यक्तदेखि व्यक्त भनेको जो छ जसको नास हुन्छ अव्यक्त भन्नु तत्त्व ज्ञान हो। सृष्टि संहारदेखि वर्जित भएका यकै ब्रह्म सत्य हुन् ॥ तिनै अविनासी परब्रह्मदेखीका रानी भएकी प्रकृति माया र जगदम्बिका भगवती को प्रकाश हुँदा महत्तत्त्वको उदय भयो ती महत्तत्त्वबाट त्रिगुणको प्रकाश भै अन्धकारको नाश भै प्रकाश हुँदा आकाशदेखी बायु बायुदेखी तेज तेजदेखी जल जलदेखी पृथ्वी क्रमैसँग सृष्टि भयो र यसै पृथ्वीमा ब्रह्मा विष्णु महेश्वरहरु सृष्टि स्थिति संहार कर्ता भै ब्रह्माबाट पचास कोटि योजन बिस्तार भएकी पृथ्वी सृष्टि गरी त्यसमध्ये चौरासी हजार योजन उच्चा भएको सोह्र हजार योजन गडेको त्यस वरिपरि बिस हजार योजन बिस्तार भएको सुमेरु पर्वतमा सप्त स्वर्ग सप्त पाताल गम्मा १४ भुवन र यस पृथ्वीमा सप्त द्वीप सप्त सागर सृष्टि गरे यी सुमेरुलाई चन्द्र सूर्य आदि नव ग्रह ताराहरुले घुम्दछन् यी सप्तद्वीप मध्ये जम्बूद्वीप उत्तम कर्मभूमि छन् जम्बुदीपको मध्ये उत्तम बाराणसी क्षेत्र छ बाराणसी क्षेत्रभन्दा सहस्र

गुणाले श्रेष्ठ भुक्ति मुक्ति दिने पशुपतिक्षेत्र भनी हिमवत्खण्ड नेपालमहात्म्येमा कहिएको छ ।। यस नेपाल कान्तिपुर राजधानीमा विराजमान भएका ठूला ठूला देवताहरूको र अघि अघिका प्रतापी राजाहरूले धर्म किर्ति गरेकोमा देव देवता आवाहन गरी स्थापना गरेका र देश देश वनाएको समेत संक्षेपले लेखिन्छ ।। यस नेपालक्षेत्र विषे श्री पशुपतिनाथ मुख्य चुडामणि देवता विराजमान हुँदा यिनै ईश्वर श्रीं श्री पशुपतिनाथ ज्योतिर्मय लिग प्रकट हुनु भएको संक्षेपमा लेखिन्छ ।

आघ यो संसार जलामय भैरहेका बखत अन्धकार भएको हुँदा जगतको सृष्टि स्थिति संहार कर्ता मैं हुँ भन्ने कुरामा ब्रह्माको र बिष्णुको परस्पर विबाद हुँदा ती अभिमान तोडनाका निमित्त ब्रह्मा बिष्णु दुवैको बीचबाट अव्यक्त जोतिर्मय लिंग प्रकट भै बस्यो र मूलको अन्त गर्न बिष्णु र उर्द्धको अन्त गर्न ब्रह्मा गये र विष्णुले अन्त गर्न नसकी फर्कि आए ब्रह्माले उर्द्धको अन्त गर्न नसके तापनि अन्त गरो आएँ भनी असत्य कुरा बोली कामधेनु र केतकी पुष्प प्रमाण दिदा आकाशवाणीबाट ब्रम्हालाई अपुज्य १ केतकीलाई शिव अर्चनमा नलागोस १ कामधेनुलाई अर्द्धाङ्गि मुख तिर अपवित्रको जम्मा ३ श्राप पाय पछि बिष्णुले आलिङ्गन गर्दा ज्योतिर्लिङ्ग सम्म भए ब्रह्मा बिष्णुले स्तुति गर्दा शिव शक्ति स्वरूप दर्शनदी ब्रम्हा बिष्णु दुवैलाई आफ्नु शरीरमा लीन गराई फेरि प्रकट गरी ब्रम्हालाई सृष्टिको विष्णुलाई स्थितिको अधिकार दिए ।। त्यसपछि ज्योति लिङ्ग श्री पशुपति नाथकन दिव्य १००० वर्षसम्म देवताहरूले अर्चन गरी रहेका बखत यमराज आई पुजा गर्दा भुक्तिमुक्ति भैगयो र फेरि देवताहरूले अर्चन गरिरहेका बखत ज्योतिर्लिङ्ग गुप्त भै जादा देवताहरू स्वस्थानमा गए । यहापछि मृतिकाले छोपीराखेका थिए । देवताहरूले छाडिगएका १०००० वर्षपछी नित्य कामधेनु आई दुध चढाएको थाहापाई धेरै म्लेच्छहरू जमा भै खनीहेर्दा द्वापर युगशेष वर्ष ८४३ बाकी छँदा ज्योतिलिङ्गको दर्शन पाई धर्मले रहित भएका ति म्लेच्छहरू सबै लिन भैगयो र सो खबर ब्रम्हाले थाहा पाई । ईश्वरको ज्योतिर्लिङ्ग ढाकी

मणिमय लिङ्ग स्थापना गरी दिया। फेरि तेस्माथि, विष्णु भगवानले इन्द्रनील मणिको द्वितीयलिङ्ग स्थापना गरी दिए। तेसपछि इन्द्रले तृतीय, कुवेरले चतुर्थ, लिङ्ग स्थापना गरीं दिए॥ ॥ चतुःषष्टिलिङ्ग र भैरव भैरवी गरी। ५६ लाख गुप्तिका देवता २००० पीठ ३०० शमसान १४ दक्षिण मार्गले पुजा गर्ने पीठ् ८ वैदिक मार्गले पुजा गर्ने ४ र मुख्य पीठ् गुह्येश्वरी र अरू वछला, राजराज्येश्वरी अरू शिवलिङ्ग २२३ दश महा विद्या स्मेतले आवर्ण गराई श्री पशुपतिनाथ विराजमान, भएका छन्। यस्मा पशुपतिक्षेत्रको बयान काशीको राजाले सुनी आफ्ना छोरा वीरकेतु, अस्वकेतु मानकेतुहरूलाई राज्य तिलक दी। आफ्ना मंत्री बुद्धिसेनको उपदेश ली, नेपालक्षेत्रमा आई। नेमुनी ऋषीको आज्ञा मुताबिक मणिचुडवर्नत गै; तपस्या गरी श्री बज्रयोगिनीबाट वैशालाधिप भन्ने वर पाई वुढा नीलकंठदेखी कोटीश्वर सम्मको ६६००० को विशाल नगर भन्ने सहर बसाई बस्दा, एक दिन, शिवरात्रि को रात्रीमा देवताहरूले श्री पशुपतिनाथ पुजा गरेको वाजाको शब्दसुनी। हेर्न भनी राजा जादा ढोकामा रहेका दीगपाल भैरव देखि डराई फर्की आई। मार्कण्डे ऋषिछेउ शर्ण जादा मार्कण्डे ऋषीका उपदेशले, धर्मेश्वरको तपस्या गर्दा ईश्वर प्रशन्नभै, धर्मदत्त भन्ने नाउँको वर पाई। श्रों श्री गुह्येश्वरीको तपस्या गर भनी आज्ञा हुदा, सो आज्ञा शिरोपर गरी आफ्ना रक्त तर्पण गरी रहदा ईश्वरवाट खड्ग वर पाई देवतासँग युद्ध गरी जिती श्री पशुपतिनाथको दर्शन गरी १००० वर्षसम्म राज्ये गरिरहेका थिए। पछि इन्द्रवाट छलगरी रानीको सत्य डगेपछि देवताहरूले युद्ध गर्दा देवताहरूले मारीएपछि श्री पशुपतिनाथको हुकुम् मुताबिक प्रमथगणले, दिव्य विमानमा राखी धर्मदत्त राजालाई कैलाश लगे। उप्रान्त अघिका क्रमले देवताहरूले श्री पशुपतिनाथ पुजा गरी राजगर्दा भए। देवताहरूले राज्ये गरिरहेका बखत श्री श्रों पशुपतिनाथलाई नदेखी अलप हुदा ब्रह्मा विष्णु इन्द्रले खोज्दा नपाई श्रों श्री पार्वतीका आज्ञा मुतावीक मृगरूपभै मृगस्थली बनविहार गर्न लागेका मृगरूपलाई ब्रह्मा विष्णु इन्द्रले फेलापारी तिनै जनाले सिङ्मा समातदा सिङ् भाची तिनै जनाका

हातमा जनहि १।१ टुका सिङ् परेपछी तिनै जनाले स्तुतिगर्दा वनविहार गर्न पुगेको छैन भनी भन्दा ब्रह्माका हातको गोकर्णमा विष्णुका हातको पातालमा इन्द्रका हातको अमरावतिमा तिनै जनाले ३ ठाउँमा स्थापना गर्नु भनी आज्ञा मुताविक स्थापना गरे; यो सत्ये पुरी श्रीं श्री पशुपतिक्षेत्रमा पछि ब्रह्माबाट बर पाएका बाणासुर पुत्र महेन्द्र दमनले ३ हजार वर्षसम्म बागवतीलाई थुनी राज्य गर्ने छ। पछि प्रभावती हरण गर्ना खातिर श्रीं श्री कृष्ण पुत्र प्रद्युम्नले महेन्द्र दमनलाई र कच्छपासुर आदि दैत्यहरू बध गरी कृष्णका चक्रले सेतु षोलाए पछि बागमती कीनारामा मेरो चतुर्मुखी मूर्ति प्रगट भै किरातीले राज्य गर्ने छ। त्यसपछि सूर्यबंसी राजाले किराति-लाई जिती ब्रह्मद्वारा मेरो पुजा गर्ने छ। यसै कुलमा भक्त ( यक्ष ) ब्रह्मा भनी नाउ राखी शिशुपाल जन्मि ठूलो किर्ति गर्ने छ भन्ने पछि हुने कुरा आकाश वाणिबाट आज्ञा भया मुताविक ब्रह्माले गोकर्णमा विष्णुले पातालमा इन्द्रले अमराबतिमा स्थापना गरी स्वस्व स्थानमा गए ॥ पछि रावणले गोकर्णमा तपस्या गरी ब्रह्मबाट बरपाई तिनै लोक जिती अमराबतिमा स्थापना भैरहेका शिवलिङ्ग मृगको सिङ् लुटिलयाई लंका जादा बाटोमा संध्या गर्ना खातिर भुइमा राखेको उखेल्न नसक्दा त्यही छाडी गएको हुँदा त्यहाँ दक्षिण गोदा-वरी भनी नाउँ रह्यो ॥ सो मृग रूप श्री श्रीं पशुपतिनाथबाट आकाशवाणि भया बमोजिम महेन्द्र दमनले द्वापरका अन्त्यमा देवताहरूसंग युद्ध गरी जिति नेपाल लाई तलाउ गरी राज्य गरिरहेका बखत प्रद्युम्न आई महेन्द्र दमनकी बहिनी प्रभाबतिसंग गान्धर्व विवाह गरी प्रद्युम्नले महेन्द्र दमन र कच्छपासुर बध गरी कृष्णका चक्रले सेतो खोले पछि मृतिकाले पुरिरहेका ज्योतिर्लिङ्ग माथि हाल किर्तिपुर भनेको ठाउँमा बस्ने नेप गोपाल कसाईले रोज दुध चढा-उन गएको चिवा गरी खनी हेर्दा द्वापर युग शेष ८४३ मा श्रीं श्री पशुपति-नाथ प्रकट भै नेपगोपालले दर्शन पाए सो नेपगोपाललाई नेमुनि ऋषीले राज्याभिशेष दिएको र फेरि द्वापरका अन्त कलि प्राप्त हुन लागेका बखत नेपगोपाल राजालाई सूर्यवंशी राजा सुमंगडले लड़ाई गरी जिति श्रीं श्री

पशुपतिनाथलाई अधिका चतुर्थ मूर्ति माथि पञ्च मूर्ति सुप्रतिष्टा गरि अग्नी सर्मा ब्राह्मणलाई अर्चन गराई बैशाख शुक्ल ३ का दिन माहास्नानादि गर्ने रीत चलाइदिए ॥ ॥ यिनै राजा सुमांगडका सन्तान श्री राजा यस गुप्तले आफ्ना कुल धर्म छोडी बौधमत लिएका पापले सन्तान नभई राज्य छुट्न लाग्दा मध्यसवाट महीषपाललाई झिकाई धर्म पुत्र गरी राज्य थामे। यिनै राजा का पाला द्वापर अन्त्यमा पूर्व दिशाबाट माहाप्रतापि किराति राजा श्री यलम्ब आई महिषपालसंग लड़ाईमा जिति नेपालको राज्य गरिरहेका बखत श्रों श्री पशुपतिनाथ किराति रूप भै श्रों श्री पार्वती स्मेत साथमा लीं मृगस्थली बन बिहार गरी किराति राजा श्री यलम्बलाई बराबर दर्सन दिंदै आएका थिए। यिनै किराती राजाका २८ पुस्तका संतान श्री राजा गलिंजका पालामा दक्षिण देशबाट सूर्य बंशी राजा श्री निमिष्टाका राजाले घेरै सैन्य साथ ली नेपालमा आई किराति राजा गलिजसंग लड़ाई गरी जिति श्रों श्री पशुपतिनाथमा गै छैठौ लिङ्ग सुप्रतिष्टा गरी स्थापना गरीदिए ॥ ॥ फेरि राजा निमिष्टाकार बर्माका ४ पुस्ताका संतान श्रीपशुपुष्प बर्माले शास्त्रोक्त प्रमाणले श्रों श्री पशुपतिनाथको मन्दिर अति उच्च बनाई ३ तले छाना गरी तलै पिछे सुनले छापी दियो यिनै राजा पशुपुष्प बर्माको छोरा शिशुपाल अवतार जन्म लिएका श्री राजा भास्कर वर्माले महोदधि समुद्र सम्म जय गरी घेरै सुवर्ण रत्न ल्याई घेरै विद्वान ब्राह्मणहरू राखी श्री पशुपतिनाथलाई ३ मास पर्यंन्त सुवर्णाहुति यज्ञ गरी सुवर्णोदकले श्रों श्री पशुपतिनाथलाई स्नान गराई बागमतिमा बगाई श्री पशुपतिनाथमा शिलाका सातौं चतुरवक्रि मूर्ति सुप्रतिष्ठा गरिदिए। यो राजाका सन्तान नहुदा धर्म पुत्र राखेका श्री राजा भुमिवर्माका १६ पुस्ताका संतान् श्री राजा वृषभ देवले आफ्ना कुलको धर्म छोडी मारण मोहन उच्चाटनमा लागी बौध मत लिइ शिवमतलाई निषेद गरी अनेक चैत्य र बौद्धको देवता स्थापना गरी शाक्यसिंहको संमतले स्वयंभुलिङ्गलाई चैत्यकारले छोपिरहेका बखत काशीबाट अमरसिंह भाडा नेपाल आयो र तिनले शिवमतमा रहेकाब्राह्मण

लेति वैश्यहरूलाई बल जफत संग बौद्धमतमा प्रवेश गराई अहिंसा परमो धर्म भनी ज्ञान दीइ शिवमतको खण्डनगरी हाल नक्साल गौचरमा भैरव शिला स्थापना गरी बौद्धमतमा प्रवृत्त हुनालाई बेमंजूर गर्ने ब्राह्मणहरूसंग सास्त्रार्थ गरीं जिति तिनै भैरव शिलामा लगी ब्रह्मवध गरी आईरहेको र कुनै ब्राह्मण-हरूलाई बलजफतसंग पक्री तिनै भैरव शिलामा लगि बध गर्दै आएको जम्मा १००० ब्राह्मण बध गरी सकेको श्रीं श्री पशुपतिनाथको मन्दिर भित्र बौद्ध रूपको देवताहरू समेत स्थापना गरी श्रीं श्री पशुपतिनाथको नित्यार्चन समेत् बन्द गरीं भोज खाएको जुठोहरू फालि यस्तो कुकर्म गरे ॥ ॥ तस्तो बहुत अत्याचार गरेको हुँदा श्री पशुपतिनाथ कोपभै वाहाँकै अंशबाट दक्षिण माहाराष्ट्र सहरमा कोही भट्ट पुत्री बाल विधवा विना पुरुषबाट गर्भ रही दशमास पूर्ण भएपछि कोखाबाट पैदा भै शंकराचार्य भन्ने नाउ राखी दक्षिण देशदेखी सारा हिन्दुस्थानमा बौधमतलाई खण्डन गरी आई नेपाल पूरीमा प्राप्त भै अम्बरसिंह बाडासंग शास्त्रार्थ गर्दा अम्बरसिं बाडाले कलसमा श्री श्रीं नील सरस्वती स्थापना गरी उहाँबाट सिद्ध पाईरहेको र शंकराचार्यले शास्त्रार्थ गर्दा पनि अम्बरसिं वाडा पर्दा भित्र सुति रहने र शंकराचार्यबाट सवाल गरेका सास्त्रको कुरा कलशैबाट जवाफ दिने शंकराचार्यसंग पनि ति कलशैबाट शास्त्रको कुरा सवाल गर्ने हुदा अम्बरसिं बाडालाई सास्त्रार्थमा जित्न नशकीं हार मानि विचार गरिरहेका बखतमा ती अम्बरसिं बाडाकी अति रूपवति यौवनी एक पुत्री थिए। ती कन्या शंकराचार्यका रूप यौवनदेखी आशक्त भै रहेछ ती कन्याले ईसारा दिई र पर्दाका छेउ विस्तारै उचालि हेर्दा अम्बरसिं बाडा मजासंग सुतिरहेको आफूले सोधेको कुराको जवाफ आफूसंग सास्त्रको कुरा ती कलशैबाट सवाल गरी आएको देखि बुझी एउटा लामो लठ्ठि वा सिनको हातमा लिइ ती कलशलाई स्वस्थान गच्छ गच्छ भनी घचिटी दियो र कलशबाट सब्द सुन्य भयो अनि ती अम्बरसिं बाडालाई उठायो र अम्बरसिंह वाडा जागा भै हेर्दा कलशबाट शब्द सुन्य भै रहेको देखी आखिर संकराचार्यसंग सास्त्रार्थ गर्न नसकी लाचार हुदा कबुलियत

बमोजिम श्री स्वामी संकराचार्यबाट ती अम्बरसिं बाडालाई हाल नक्साल भगवती अगाडि दायाँ तर्फ बद गरी दाह कृया कर्म गर्न नदी त्यही लास गाडि सकेपछि अघि अम्बरसिंह बाडाले एक हजार ब्राह्मण भैरव शिलामा लगि बद गरेका रीसले बौधमतका मानिसहरूलाई निर्मूलगरी मर्छु भनी क्रोध गरी जति पाएका बौद्ध मतका मानिसलाई मार्दै गरी वज्रयोगिनीमा पुगी तहा पुजारीलाई मार्छु भनी तत्पर हुँदा जगदम्बिका माहारानी प्रकट भै मेरो नित्याचार आजा पूजा यिनै बाट गरेकोमा म प्रसन्न छु यी मेरो पुहाहारी नमार तिम्रो हातको खड्ग देउँ भनी आज्ञा हुँदा श्री स्वामी शंकराचार्यबाट आफूले हातमा लिइ राखेको खड्ग सोपि दिदा जगदम्बीकाबाट बज्र लिइ राखेको भूमिमा छोडी ति खड्ग लिएपछि शंकराचार्य ताहाँबाट फर्की आउनु भै बाकि रहेका बौद्ध-मतका मानिसहरूलाई आफ्नु चिन्ह खातिर शिखा काटि अम्बरसिंका शास्त्रमा अम्बरकोष १ बाकि गरी अरू गैह्र शास्त्र आगोमा पोली भस्म गरी बौद्धमतको बिध्वंस गरी सकेपछि ती अम्बरसिं बाडाले मारिएका एक हजार ब्राह्मण कैले उधार होला भनी ज्ञानि पण्डितहरूले सोद्वा ती ब्राह्मण मारिएका भैरव-शिलामा बुढानिलकण्ठ का जलशयन नारायणका जलमा डुबेपछि ती ब्राह्मण-हरू मुक्त हुने छ भनी आज्ञा भै अहिंसा धर्म बौद्धमतमा प्रवृत्त भैरहेका मानिसहरूलाई तंत्र मार्गले हिंसा गराई श्रीं श्री पशुपतिनाथलाई आफैले नित्यार्चन गरी अब प्रान्त श्रीं श्री पशुपतिनाथलाई दक्षिण भट्टले नित्यार्चन गराउनु भनी स्थिति बाधी शंकराचार्य मठ भनी श्रीं श्री पशुपतीनाथका समीपमा मठ समेत खडा गरी गया उप्रान्त दक्षिण भट्टले पुजा गरी आएका थिए पछि श्री ३ महाराज जङ्गबहादुर राणाबाट बुढानिलकण्ठका जल आफ्ना दरबार थापाथलीमा ल्याउने इच्छा गरी कुलो खनी सो जल ल्याउदा दैव इच्छाले सो भैरवसिला सो राजकुलोमा खर्भा जलमा डुबेकोले श्री स्वामी शंकराचार्यबाट भएका आज्ञा मुताबिक अम्बरसिं बाडाले मारिएका एक हजार ब्राह्मण उद्धार भयो भनी समझनु पर्ने भयो ॥ ॥ यो सूर्यवंस राजा वृषभदेवका छोरा श्री शंकर देव बर्माले श्रीं श्री पशुपतीनाथका उत्तर तर्फ

फलामको ठूलो डमरू समेतको त्रिशुल बनाइ चह्रायाको र तिन्का छोरा श्री घर्मागत देवले फेरी श्रों श्री पशुपतीनाथका पश्चिम भागमा बसाहा स्थापना गरी श्री पशुपतिनाथको श्रों श्री बज्रयोगिनीको तप गरी नित्य अर्द्ध रात्रिमा बज्रयोगिनीमा गै तैलपाक भएका कढाईमा कुडी पाक भएपछि देबीगणबाट भोजन गराई फेरी जीव बरदान पाई सुवर्ण द्रव्य ल्याई नित्य सुवर्ण तुला दान गरी आखिर उज्जयिनबाट आउने बिंक्रमसेन राजालाई राज्य तिलक दिई उद्धार भै गए ॥ ॥ यी बिक्रमशेन राजाले श्रों श्री पशुपती नाथमा केही किर्ति गरेन १२ वर्ष नेपालको राज्य गरि कलि गत वर्ष २९६० प्राप्त भएपछि राजा घर्माङ्गत कै सन्तान विश्वदेव राजालाई राजतिलक दि उजयन मै गयो ताहाँपछि ती विश्व देवराजाका संतान श्री राजा नरेन्द्र देबले देवपाटन शहर बनाई श्रों श्री पशुपतीनाथ कन चह्राइ सूर्यबंसी राजा विश्व देवका ८ पुस्ता-संम वर्ष जम्मा २६७ नेपालको राज्य भोग गरी सके—पछि गुप्त राजाहरूले नै राज्य चलाए पछि फेरि सूर्यबंसी राजा भयो र राजा शिवदेवले प्रेत चतुर्दसी का दिनको ८ दिन अगाडि श्री पशुपतिनाथलाई अष्टमात्रीका गणहरूलाई निमन्त्रणा गराई श्री बछ्लादेबीको यात्रा गर्ने स्थिति बाधि दिए ॥ सूर्यवंशी राजा नरेन्द्रदेबका सन्तान गुणकाम देवका पालामा कलिगत वर्ष ३९८० जादा सांख्वा भन्ने सुद्र जातिले धेरै सुवर्ण पाई नेपाल भरमा अरिणि गरी सम्बत-सर फिराई श्रों श्री पशुपतिनाथका दक्षिण दर्बाजाका सामुन्य आफ्ना शिला मूर्ति स्थापना गरी उद्धार मैगयो ॥ ॥ शाक्य सम्बत ८११ नेपाली सम्बत १० जाँदा श्री राजा नान्यदेवका संतान ५ पुस्ताका राजा रामसिंहदेबका पालामा कलिगत वर्ष ३४५६ जादा पश्चिम पाल्पाबाट सवालाख फौज ली श्रीराजा मुकुन्द सेन नेपाल प्राप्त भै श्री सूर्यबंशी राजा निर्मूल गरी श्रों श्री पशुपतिनाथका स्थानमा र अरू देब देवतामा धेरै अनाचार गर्दा श्रों श्री पशुपतिनाथका दक्षिण मूर्तिमा डाँढाँ निस्कि मुकुन्द सेनराजाका फौजमा मांहामारी प्रबेश भै एकै पक्षमा मुकुण्डसेन राजाका सबै सेना गैह्र भस्म् भै मुकुन्दसेन राजा फर्कि गयो र नुवाकोट बैश्य ठकुरीहरूले २२५ वर्ष राज्य

गरी सके पछि सूर्यवंसी राजा नान्यदेवका सन्तान हरिसिंह देवले शिमरौनगढबाट तुलजा भवानीलाई लिई नेपाल प्रवेश गरी राज्य गरेको ८ यिनका ४ पुस्ताका सन्तान श्री राजा श्यामसिंह देवको सन्तान नहुदा आफ्ना ज्वाई जयभद्रलाई राज तिलक दिई उद्धार भैगयो यिन जयभद्र मल्लका सातौ पुस्ताका सन्तान श्री राजा जयस्थिति मल्लका पालामा र यिनका छोरा श्री राजा यत्नमल्लका पालामा सम्म पनि श्री स्वामी संकराचार्यले बाधि गएका स्थिति बमोजम दक्षिण भट्ट बाटै श्री श्री पशुपतिनाथको पुजा गराई आएका थिये ती यत्न मल्लका माहिला छोरा रणमल्ल बनेपामा राज्य गरी रहेका बखत ताहाकै मोहसिंह भन्ने तैलकारलाई कुमारी कुण्डदेवीले सुनका गंगाका टाउको वर प्रसाद दिएका प्रभावले ती मोहनसिंह असंख्य धनी भएको र त्यसै बखतमा एक कोही जोगीले ती मोहन सिंहलाई श्री श्री पशुपतिनाथमा चढाउ भनी १ मुखी रूद्राक्ष दाना १ दिएकोले नेपाली सम्वत् २२ सालमा वरिपरि अनेक हिरारत्न बाचमा सोही १ मुखो रूद्राक्ष जडाउ गरी चाँदिको कवच बनाई श्री श्री पशुपतीनाथमा चढाई उद्धार भैगए ॥ ॥ यी सूर्यवंसी राजा यत्न मल्लका कान्छा छोरा रत्न मल्लले काठमाडौं सहरमा राज्य गरी-रहेका बखतमा सोमेश्वरानन्द भन्ने थोडा न्यासी स्वामी नेवाल प्राप्त हुँदा श्री श्री पशुपतीनाथ पुजक योग्य ठहराई अर्चन गरेका यिनै स्वामी बहुतै सुकुमार हुदा यिनलाई तकलीफ नहोस भन्ना खातिर बनेपाबाट २ थरी श्रेष्ठ झिकाई १ थरीलाई बिसेत भन्ने १ थरीलाई भण्डारी भन्ने पदवी दिई तलहवा राखिएको यिनै स्वामीले देश रक्षा खातिर नवग्रह समिपमा श्री श्री दक्षिणकाली स्थापना गरिदिए ॥ ॥ यी राजा रत्न मल्लले नुवाकोटका बैश्य ठकुरीसंग लडाई गरी नुवाकोटबाट फलफूल ल्याई श्री श्री पशुपतिनाथलाई चाहाएको हुदा अद्यापि सो रीत चलाएकै छ सो स्वामी सोमेश्वरानन्दले श्री श्री पशुपतिनाथको घेरै वर्ष पुजा गरी ब्रह्मद्वार खोलि सुन्ने भएपछि फेरि दक्षिण भट्टैबाट पुजा गराई आएका थिए पछि राजा शिवसिंह देव परलोक भएपछि तिनका पुत्र लक्ष्मीनरसिंह राजा भए सो राजा

लक्ष्मीनरसिंहका पालामा नेपाली सम्वत ७०४ सालमा नित्यानन्द भन्ने खोदा न्यासी ब्रह्मचारी स्वामि आउँदा रानी श्री गंगा रानीबाट जाची श्रों श्री पशुपतिनाथ पुजा हारी योग्य ठहराई ती स्वामीलाई पुजाहारी गरी दिदा पूजा गरी आएका थिए यसै वखत श्रों श्री पशुपतिनाथको मण्डिर भत्कन लाग्दा तो स्वामी नित्यानन्दका सहमतले त्रिकोण ईट बनाई भूमिमा छाई तिनतला भयेको मण्डोर मा बिचको तला छाना झिकी २ तला छाना गरी बनाई छानामा सुनले छाई नेपाली सम्वत् ७०५ सालमा श्री राजा लक्ष्मी नरसिंह मल्लका रानीगंगा देवीबाट जिर्णोद्धार गरी बनाइ दिए ॥ ॥ फेरि यिनै राजाको पालामा ललित पत्तनमा श्रों श्री पशुपति अघोरनाथको दृष्टि परेकाले संतान नरहेको भनी सो रक्षा खातिर दक्षिण भागमा काठको उन्मत्त भैरव वनाई पूजारी नित्यानन्द स्वामीले स्थापना गरी दिएपछि नित्यानन्द स्वामीले श्रों श्री पशुपतिनाथलाई ढोक दिंदैनन् भनी कोही दुष्टले राजा छेउ यस्तालाई पूजारी गरी राखदा बढिया हुँदैन भनी सिकायत गर्दा नित्यपूजाका बेलामा राजा आफै आई हेर्दाता सो कुरा स्वामीले थाहा पाई नित्य पुजा गरी सकी बाहिर आई चण्डेश्वरीको पुजा गरी सकेपछि फर्कि कामदेवलाई ढोक दिंदा खसेः फेरि धर्म शिलालाई ढोक दिदा दुई चिराभै फुट्यो र दक्षिण दरवाजा भित्र पसी हरहर भनी श्रों श्री पशुपतिनाथलाई घोक दिन लाग्दा उत्पात होला भनी ती स्वामीलाई बज्र जफतसंग समातिं हात जोरी बिंति गरी धेरै किसिमले प्रार्थना गरी चित्त बुझाई राजा फर्कि आएपछि गुप्त कुरा प्रकाश गर्नु पर्‍यो भनी मनमा वडो फिक्री मानी संसार त्याग गर्नाको ईच्छा गरी श्रों श्री पशुपतिनाथको नैऋत्य कोणमा वसी एक द्वी भनी तिन फेरा तिनदिनसम्म भनी समाधि लिई सुन्यमा गए ताहाँपछि फेरि दक्षिण भट्टले नै पुजा गरी आएको थिए ॥ ॥ श्री राजा शिवसिंह मल्लका कान्छा छोरा हरिसिंह मल्लले पाटनमा राज्य गरी वसेका थियो सन्तानको रक्षा हवस भन्ना खातिर लुभुग्राम बनाई तामापत्र गरी श्रों श्री पशुपतिनाथकन प्रीति गरी चढाए ॥ ॥ श्री राजा लक्ष्मीनरसिंह मल्लका पुत्र प्रताप मल्ल राजाले श्रों श्री बाग्मति

देखी जग खडा गरी ल्याई आर्यघाट बनाई श्रीं श्री पशुपतिनाथको चरणोदक जल जोगका बेलामा थिरामि काशिरमा परी मुक्त भै जावस भन्ने मतलबले ब्रह्मनाल त्यसका माथि शिवलिङ्ग समेत स्थापना गरि दिए ॥ ॥ यिनै राजाका छोरा श्री राजा प्रतापमल्लका पालामा चोभारका नागले बागमतीलाई बढाई आर्य घाटमा पानी थुनी सुक्ष्म रूपले नीर्माल्य जाने द्वारबाट पसी अघि मोहनसिंह तैलकारले चढाएका कवचमा जडी राखेका १ मुखी रुद्राक्ष चोरेको वासुकीले थाहा पाई अगाध जलमा फाल हालि ती चोर नागलाई समाति मारि १ मुखी रुद्राक्ष लिई श्रीं श्री पशुपतिनाथका जलहरीमा राखि आफ्ना स्वस्थानमा गए ताहाँ देखी श्रीं श्री पशुपतिनाथमा नागको भय निवारण भयो सो वाशुकिले मारेको लास राजराज्येश्वरीका अगाडि सबै दुनियालाई देखाई दिए ॥ ॥ श्रीं श्री पशुपतिनाथका मन्दिर भित्र अघिका राजाले स्थापना गरि राखेका तावाका बसाहा पुरानु भयो भनी चाँदिको ढलौट गरी बसाहा बनाई जीवन्यास दिई श्री राजा प्रतापमल्लले स्थापना गरी दिएको थियो । ति बसाहाले देउपाटन जग्गामा रात्री बिखे प्रजाका वालिखाई उपद्र गऱ्यो र तीबसाहालाई झिकी भण्डारमा राखी पुरानु तामाको बसाहालाई स्थापना गरिदिए ॥ ॥ श्री राजा प्रतापमल्लको छोरा नृपेन्द्रमल्लले नेपाली सम्बत ७९४ सालमा राजे तिलक पाई काठमाडौं सहरको राज्य गरी रहेका बखत पाटन सहरका प्रधानहरूले राजा बक्साई श्रीं श्री पसुपतिनाथको चारै दरबाजामा सुनको तोरण खंब राखि दिए ॥ ॥ फेरि यिनै राजाले आफ्ना पुर्खा गंगा रानीले बनाई गएका श्रीं श्री पशुपतिनाथको मन्दिर बिग्रेको हुँदा भत्काइ रमणीय एक मण्डिर बनाई २ तले छानामा सुनले छाई तयार गरी जिर्णो-द्धार गरी चण्डिका प्रमाणले गम्य अगम्य वस्तुले कैलाश कुसुमाह गर्ने र मैन्है पीछे पूर्णेमाका दिन महास्नान गर्ने गुठि राखि चलाई गए ॥ ॥ श्री राजा नृपेन्द्र मल्ल परलोक भएपछि तिनका छोरो भुपालेन्द्र मल्ल नेपाली सम्बत ८०७ सालमा राजा भए यिनैका पालामा राघवानन्द भन्ने खोढा

न्यासी स्वामी आउँदा तिनलाई पुजाहारी गरी बिमलानन्द स्वामी बिदा भै काशी गै उद्धार भयो र ताहाँपछि राघवानन्द स्वामीले पुजाहारी रहेका बखत श्रीं श्री पशुपतिमा दमनारोहण गर्ने रीत भुपालेन्द्र मल्लले गुठिसमेत राखि दिए ॥ श्री राजा भुपालेन्द्र मल्ल परलोक भए पछि तिनका छोरा भास्कर मल्ल राजा भयो र यिनले मुसलमानलाई मुख्य प्रधान मन्त्री बनाई हिन्दु धर्ममा विरोध पारेका ले नेपाली सम्वत् ८३६ सालमा श्रीं श्री पशुपतिनाथका मण्डिर दक्षिण मूर्तिमा दन्त प्रकाश भै नेपालमा मुसाहरू ताहाँपछि हाति घोडा लगायत चौपाया दोपायाहरू मरिसकेपछि मानिसमा महामारी प्राप्त भै दिनका १००।१२५ मानिस मरि हाहाकार भयो सोही महामारी रोगले नेपाली सम्वत् ८४२ सालमा मजकुर राजा भास्कर मल्ल परलोक भए ॥ ॥ सोही राजा भास्कर मल्लले श्रीं श्री पशुपतीनाथको पुजाहारी राघवानन्द स्वामीलाई हेला गरी संकष्ट दिएकाले राजराजेश्वरी समीपमा समाधि ली सुन्ने पद्वीमा गए उप्रान्त श्रीं श्री पशुपतिनाथ पुजा गर्ने योग्यको स्वामीहरू कोही नआउँदा अघि शंकराचार्यले स्थिति बाधि गएबमोजिम दक्षिण भट्ट ल्याई श्रीं श्री पशुपतिनाथको पुजा गरायो ताहापछि आजसम्म दक्षिण भट्टले पूजा गर्दछ ॥ ॥ श्री राजा जगत जय प्रकाश मल्लबाट श्रीं श्री पशुपतिनाथमा नित्य महाबलि भोग चढाउने गरी गुठी राखी दिया श्री ५ महाराजा पृथ्वीनारायणसाहाबाट नेपालको राज्य लिएपछि श्रीं श्री पशुपतिनाथमा बिना पंचामृतले पुजा हुन्छ भनी उजुर सुन्दा नित्य पंचामृतले स्नान गराई पुजा गर्नु भनी गुठी राखी घोबीखोलामा पुल समेत बनाइदिए ॥ ॥ शाक्य सम्वत् १८३१ साल मार्ग शुदि ४ का दिन सर्दार रामकृष्ण कवरले श्रीं श्री पशुपतिनाथदेखि मृगस्थली श्रीं श्री गोरखनाथ श्रीं श्री गुह्येश्वरीसम्म धुङ्गाको सिंढि गरी बाटो बनाई २६३ रोपनी खेत गुठी राखी दिए ॥ ॥ श्री ५ महाराज रणबहादुर साहबाट शाके सम्वत १७०० सालमा चाँदिको जलहरी बनाई श्रीं श्री पशुपतिनाथलाई चढाए फेरि कवच जिर्णोद्धार गरी पुर्णेमा पिछे महास्नान गर्दा त्रिकाल गुजराती

बाजा बजाउने गरी कुशलेहरूलाई खेत सेवा बिर्ता दिई धेरै खेत गुठि राखी दिई नेपाली सम्वत ९२६ साल वैसाख शुदि ६ रोज ७ का दिन स्वर्ग भएपछि श्री ५ महाराज ग्रीवाण युद्धविक्रम साहालाई राजगद्दि भयो यी श्री ५ महाराज ग्रिवाण युद्धविक्रम साहाबाट देउपाटन शहर नेपाली सम्वत् ९१८–३० सालमा प्रिती गरी श्रों श्री पशुपतिनाथकन चढाए ॥ ॥ श्री ३ महाराज रणद्वीप सिंहबाट १९३६ सालमा कलकत्ताबाट झीकाई सेतो ढुङ्गा राम्रो टलक भयाको श्रों श्री पशुपतीनाथका मन्दिरको गाह्रोमा टासी बहुतै मिहनतसंग बनाई दिई राम्रो गरायो ॥ ॥ फेरि यिनै राजा रणद्वीप सिंहबाट बिक्रम सम्वत् १९३४ सालमा आफना पुर्खा रामकृष्ण कवरले बनाएको मृगस्थली गोरषनाथ गुह्येश्वरी जाने बाटो ढुङ्गाको पुरानु भै बिग्रदा नयाँ ढुङ्गा ल्याई बहुत मेहनत गरी अकल पुऱ्याई बनाई पुर्खाको किर्ति थामि दियो ॥ ॥ श्री जनरल जगत जङ्गबहादुर राणाले सुन्को ठूलो भयानक वसाहा बनाई सम्वत् १९३६ साल वैशाख बदि १३।१ का दिन श्रों श्री पशुपतिनाथमा प्रिती गरी पश्चिम दरबाजाका अगाडि स्थापना गरीदिए ॥ ॥ श्री ३ महाराज चन्द्रशम्शेर जङ्गबाहादुर राणाबाट बिक्रम सम्वत् १९८० सालमा श्रों श्री पशुमतिनाथको मन्दिर भित्र जिविनमा कंपनि जस्तो आफ्नु मूर्ति भएको टक बनाई सेतो ढुङ्गाको माझमा टासि छापिदिए मन्दिर भित्र गाह्रोमा सेतो टायलले छाइ दिए ॥ फेरि यिनै चन्द्रशमशेर माहाराजबाट अघि राजा नृपेन्द्र मल्लबाट बनाई गएका श्रों श्री पशुपतिनाथका मन्दिरको छाना पुरानु भै ठाँउ ठाँउमा जिर्ण भै बिग्रेको हुँदा सम्वत १९८२ सालमा अति असल सुन्को मोलम्बा पाताले २ तला छाना जम्मै छाई सर्वाङ्ग मन्दिरमा रंग रोगन चित्रकारी गरी त्यस माथि ठाँउ ठाँउमा चन्द्रप्रकाश बिजुली बत्ती समेत राखिएकोले अति रमणीय कैलास भूमि भै रहेछ ॥ ॥ बिक्रम सम्वत् १९९० साल माघ बदी ३० रोज २ माघ २ गतेका दिनको २ बजेर १५ मिनेटका टायममा भुईचाल चल्यो पहिला पूर्व पश्चिम हिल्यो पछि दक्षिण उत्तर हिल्यो

अन्दाजी २।। मिनेट सम्म हिल्दा ३ सहरमा रहेका श्रों श्री पशुपतिनाथका देवल श्रों श्री गोरखनाथका देवल श्रों श्री गुह्येश्वरी माताका देवल बाहेक अरू जहाँ ताहाँको गाउँ घर देवल भत्की धेरै मानिस स्वर्ग प्राप्त भए बिक्रम सम्बत् १९९१ सालमा श्री ३ महाराज जुद्धसम्शेर जङ्गबहादुरले श्रों श्री पशुपतिनाथको देवल भित्र रूद्राक्षबाट श्रों श्री पशुपतिनाथका नाउको र आफ्ना नाउँको बुट्टाहरू बनाई दिए ।। ।। शिवपुराण तथा अरू अरू बेद पूराणादि सास्त्रानुसार श्री मत्पशुपति पुराण का पूर्वार्द्ध बिक्रम सम्बत् २०११ मा योगी नरहरिनाथले अनुवाद गरी सम्पादन गरेको ना. सुब्बा भीमप्रसाद उपाध्यायले छपाई प्रकाश गरेको बाट पनि उत्तरार्द्ध समेत भएको देखिन्छ सो पशुपति पुराणमा वर्णन अनुसार श्री पशुपतिनाथको सुक्ष्म वर्णन तथा मनुष्य नविनको सार समेत भएको सो पुस्तकको याद गर्नु भएमा विशेष ज्ञात हुनेछ !

## ( २ ) ।। श्रों श्री जगदम्बिका गुह्येश्वरी ।। २ ।।

आदि युगमा दक्ष प्रजापतिका अपमानले यज्ञ कुण्डमा फाल हाली प्राण मुक्त गरी बक्सीने श्रों श्री सतीदेवीको लाशलाई श्री महादेवबाट बोकी पृथ्वी भ्रमण गरेको देवतादेवी मनुष्य कीट पतङ्गले समेत सहन नसकी तेतीस कोटी देवताहरू श्रों श्री वैकुण्ठनाथ नारायण छेउ गई सो कुरा विन्ति गर्दा वैकुण्ठनाथ भगवानबाट आफ्ना मायाले माया झिंगा उत्पति गरी सतीदेवीका शरीर गलित गराई दिएपछि पनि ति गलित भै दुर्गन्धी भयाकी सतीदेवीलाई श्रों श्री माहादेवबाट पीठमा बोकी हिंडेका बखत नेपालमा पहिले गुह्यस्थान पतन भयो र श्रों गुह्येश्वरी देवी चन्द्र घण्टा योगिनी सिद्धेश्वर श्री महादेव उत्पत्ति भएकाले जम्बुद्वीप मध्ये भरत खण्डमा मुख्य पीठ श्रों श्री गुह्येश्वरी पिठ बड़ो प्रतक्ष हुन् यी गुह्यकाली नेपालमा बिराजमान भएकाले श्रों भद्रकाली श्रों कंकेश्वर श्रो अष्ट मात्रिकागण श्रों बछलेश्वरी श्रों राजराज्येश्वरी श्रों जय बागेश्वरी

ओं मनमैजु ओं मैतीं ईत्यादि ५६ लाख भैरव मेरेवीकरवीर आदि गरिएका समसान पंचलिंगेश्वर भैरव यावत देवदेवी विराजमान भएको र माथि लेखिएका मात्रिकागण इत्यादिले आवरण भै ओं श्री गुह्यकाली विराजमान भएकी छन् सो ओं गुह्याकाली जलज्योति रूप भै पोखरी जस्तो भै अल्प भै रहेका थिए ॥ ॥ पछि संकर देव राजाका पालामा कलिगत १७९९ मा तांत्रिक नृसिंह ठाकुर नेपाल आई बसेका बखत मलाई प्रकाश गर भनी स्वप्नमा आज्ञा भएको हुंदा स्वप्न बमोजिम र हिमवत्खण्ड नेपाल महात्म्येको अनुसार प्रमाण मिलाई श्लेष्मांतक वनविषे खोजी गर्दा उत्तर वाहिणि वाग्मति देखी पश्चिम किरातेश्वर देखि पूर्व मृगस्थली बन गोरखनाथदेखि उत्तर यति भित्र गै हेर्दा नृसिंह ठाकुरले त्यही पोखरी जस्तो पानी जमी रहेको र पानी भित्र ईश्वरीको जल ज्योतिलाई दर्शन पाउँदा स्वप्न भएको कुरा प्रत्यक्ष हुँदा ईश्वरीको जल ज्योतिलाई छोपि चारै तर्फ गिर्दा पर्खाल लगाई अतिरमणीय मन्दिर बनाइ दिएका थियो ॥ ॥ पछि श्री राजा प्रताप मल्लका पालामा सो मन्दिर ठाउँ ठाउँमा भत्कि बिग्रदा गुरु लम्ब करणे भट्टका संमतली नेपाली सम्वत ७७४ बैसाख शुक्ल ११।५ का दिन ओं श्री गुह्यश्वरीको कुण्डमा बहुतै यत्नसाथ फलामको दलिन राखि चौगिर्दा पर्खाल लगाई ढुङ्गाले छोपी ईश्वरीको जल ज्योतिलाई ढाकी अष्ट दल पद्म यन्त्राकार र भैरव सहित गरी फटिकको कलशाकार बनाई अष्ट मातृकागणले आवर्ण गराई सुन्दर कुण्ड बनाई स्थापना गरी मन्दिरको वाहरि शिलाका खम्बा खडा गरी त्यसमा सिंह सालिक राखि दिई आचार्य्यवाट नित्य पूजा गराई नित्य महा भोग र दशै कर्म गर्नालाई धेरै खेत गुठि राखिदियो ॥ यीनी जगदम्बीका माहारानी गुह्यश्वरीमा तप गरी अघि परापूर्वमा घर्मदत्त राजा मारवार देशका रानी पिङ्गला आदि धेरै मानिस उद्धार भै भुक्ति मुक्ति पाएपछि मल्ल राजाको संमतिमा श्री राजा जयप्रकाश मल्लका काजी प्रधानमन्त्रीहरू एक गट्टा भै वर्ष ५ को राजकुमार ज्योति प्रकाश मल्ललाई राजगदीमा राखी राजा जयप्रकाशमल्ललाई धपाउँदा आखिर कुनै देवताको शरणमा जाँदा पनि आफ्नु राज्य हात

नलाग्दा श्री श्री गुह्यश्वरीमागै ३ महिनासम्म तप गरी बस्दा नेपाली सम्बत ८६८ सालमा कुण्ड भित्र एक अद्‌भुतको योगिबाट खड्गवर प्रसाद पाई तिनिमकहरामि प्रधान मन्त्रीहरूसंग लडाई गरी जिति आफ्ना राज्य हातमा लिई स्वतन्त्र राज्य गरे यस्तो खड्गको वरप्रसाद अघि अघिका राजाहरूले पनि बराबर पाई आएका थिए नेपाली सम्बत् ८४४ सालमा कुण्डबाट हिलो उत्री आयो सम्बत् ८४५ सालमा भादगाउँको राजा लडाई भै पाटनको जिल्ला बिसंखु भादगाउँका राजाले जितिलियो साके सम्वत् १७०० सालमा श्री ५ माहाराजा रणबहादुर साहा बाट त्रिकालमा बाजा बजाउने गरी गुजराति बाजा र नगरा ईत्यादि राखि दिए बिक्रम संबत् १६०१ सालमा श्री ३ महाराज जङ्गबहादुर राणाको उदय भै बक्सिय पछि, २१।२२ सालमा श्री श्री गुह्यश्वरीका अष्टदल पद्माकारमा र भैरव समेत सुन्का पाताले छाई दियो र नवरत्न जडाउको सुन्को कलश चाँदीका पुजा भाँडाहरू प्रीति गरि चढाई बक्सियो ॥ त्यसै बखत राजवैद्य चक्रपाणीले सुन्का नाग ४ बनाई कुण्डमा ४ कुनामा राखी सुन्को लम्बा पाताले मोडी साभायमान गरी चढाई दियो ॥ ॥ अघि पितलका पाताले भुमिछाई राखेका जिर्णहुँदा बिक्रम कम्बत् १६६५ सालमा श्री ३ महाराज चन्द्रशम्शेर जङ्ग बहादुर राणाबाट बोलाईति टाइल झिकाई भित्ता मुनि जमै छाई सोभायमान गरी बक्सियो र फेरि अष्टदल यन्त्राकार कलश भैरवसमेत जिर्णसुँदा सुन धेरै थपि जिर्णोद्धार गरी बक्सियों ॥ ॥ बिक्रम सम्बद् १६६० साल माघ बदि ३० रोज २ मा यी जगदम्बोका श्री गुह्यश्वरीका मन्दिर कहिकेही भएन सतल अलि भत्केको थियो पछि श्री ३ महाराज जुद्धशमशेरले बनाई जिर्णोद्धार गरीदिए ॥



## (३) ओं श्री गोरषनाथ मृगस्थली देवपाटन ॥३॥

सुर्यबंसी राजा नरेन्द्र देवका पालामा कलिगत ३६७६ मा श्रों श्री गोरख-नाथ नेपालमा भिक्षा गर्न आयेका वखत नेपालका रैतिले भिक्षा नदी अन आदर गरेका रीसले मेघ मण्डल खिची नागाहरू आसन बाधी गुप्तरूपले तपस्या गरि रहनु भयेका थिये पछि मात्स्येन्द्रनाथ आउनु भए पछि तपस्या बाट उठी गरुको दर्सन गर्न जानुभएको भनि माथि लेखिएकोछ ताहाँपछि नेपालि सम्वत ५१४ सालमा श्रों श्री गोरखनाथलाई श्री राजा जयस्थिति मल्लखे जगाई यौटै शिलामा लपहरी पादुका स्थापना गरी गोरखनाथ दर्शनी जोगी को मत खडा गरी नित्ये पुजालाई घेरै खेत गुठी राखी दिया ॥ यहाँपछि यी गोरखनाथ पुनप्रकाश भएका हुन् ॥ विक्रम सम्वत १९९० साल माघ बदी ३० रोज २ का दिन ठूलो भुकम्प हुदा केही भएन ।

## ( ४ ) ॥ श्रों श्री उग्रतारा बज्रयोगिनी साखु ॥ ४ ॥

परापूर्वकालमा ब्रम्हा बिश्नु महेश्वरबाट मणिचूड पर्वतमा तप गर्दा प्रशन्न भै प्रगट भएकी योगीनिन्द्रा स्वरूपी भएकि ईश्वरी हुन् सत्ययुगका अन्त्यमा कलिङ्ग देशका राजा देवीदासले संसारका सुख भोग त्याग गरी छोरालाई राजतिलक दिई श्रों श्री महामाया उग्र ताराका शरणमा आई १ लाख माहा-मन्त्र जपि तप गर्दा इश्वरीबाट कार्तिक शुदि ४ का दिन शिव शक्ति दर्शन दिई स्वदेह मुक्ति दिई शिव लोक पठाए यस ठाउँमा मन्त्र जपेको अरू ठाउँ भन्दा कोटि गुण बढी फल हुने छ भनी वाणी भै अन्तर ध्यान भइन् । ॥ ॥ फेरि कलियुग प्रथमपादमा सूर्यबंशी राजा धर्मागत देवले तप गरी नित्ये तैलपाक कढाईमा प्रवेश भै पाक गरी ईश्वरीलाई तृप्त भोजन गराई फेरि जिव बरपाई र नित्य सुवर्ण घेरै बरपाई योगी ब्राह्मण गरीबलाई नित्य सुवर्णदान गरी प्रजा पालना गरी आएका बखत उज्जयन नगरका राजा श्रीं बिक्रमसेनको १२ वर्षका उमेरमा प्रथम कर्म नेपाल हो भनी श्रों श्री पशुपतीनाथको दर्शन दिई यिनै परमेश्वरी उग्रताराबाट आकाश बाणि गरी स्वप्नबिषे बोलाउनु भएकोले नेपाल बिसाल नगरमा आई धर्मागत देवराजाको चाकरी गरी चालचलन बुझी धर्मागत देव भन्दा अघि श्रों श्री

वज्रयोगिनीमा गै आफ्ना शरीरमा अनेक मसलाहरू राखि तैल पाक भै भोग लगाउदा आफ्ना गण समेत भै ईश्वरी आई भोजन गर्दा साबिकको भन्दा बहुतै खुशी भै हाड खुड जोडी जीयाई हेर्दा आफैले आकर्षण गरी बोलाएको बिक्रमसेन राजा नजर भै अब उप्रान्त यस्तो कर्म गर्नु पर्दैन भनी कटाई घोप्ट्याई बिक्रमसेनलाई स्पर्श मणि समेत सोपि बरप्रसाद दिई पठायो र सो कुरा घर्मागत राजालाई सुनाउँदा बिक्रमशेन राजालाई आफ्नु राज गद्दि सोपि दिई उद्धार भैगए उप्रान्त १२ वर्षसम्म विशाल नगरमा वसी राज्य भोग गरी पछि आफ्ना स्वस्थान गए कलिगत १७६६ जादा श्री राजा शंकर देवले साखु सहर बनाई यिनै ईश्वरीलाई प्रीति गरि चढाए ॥ ॥ पछि नेपाली सम्व ६७० जाँदा श्री राजा सूर्यमल्लले यिनै शंखपूरमा ६ वर्षसम्म बसी ओं श्री बज्रयोगिनीलाई प्रार्थना गरी चैत्र शुदि पुर्णिका दिन ओं श्री बज्र योगेश्वर माहाकाल भैरब सिंहिणि व्यांघ्रिणि लगायत शंखपुरमा ल्याई चैत्र शुदि ३ का दिन रथा रोहण मुल यात्रा गरी देश घुमाई वैशाख कृष्ण ७ का दिन स्वस्थानमा लैजाने गरी नगरी यात्रा गर्नालाई धेरै खेत गुठी राखिदिए ॥ ॥ कलिगत ३२४८–५० मा श्री राजा शिवदेव र दुर्वाशा अंश १ योगिसहित गै ओं श्री वज्रयोगिनीको बडो कष्टबाट चित्रकार मगाई रंगरोगन चढाई बडो सुन्दर रूप बनाई दिए ॥ ॥ पछि बिक्रम सम्वत् १९७१ साल फागुण महिनामा अकस्मात यात्रा गर्ने देवीका घर भनी छेडीमा बालि राखेको अखण्ड धुनिबाट आगो बढी आई सल्की सो देवी चैत्ये वसुंधरा सिंहिनी व्याघ्रिनी घरको पीठमा १ चुकुल सुधा बाकि नभै जम्मै जली मैदान भै भस्म भैगयो र श्री ३ महाराज चन्द्रशम्शेर जङ्गबहादुर राणाबाट ७२ सालको यात्रालाई अर्को मूर्ति तयार गरी बनाई जीव न्यास प्राण प्रतिष्ठा गराई स्थान पनि दरवारी काईदाले गुमोज फलामको सतरी लगाई मजबुत तवरले बनाई बक्सेका हुन् ॥ सो आग लागि हुँदा छेडीमा भएको फलामको कटाइ र टाउको आगोले छुएन भस्म भएन यस्तो अद्‌भूत भयो ॥ १९९० साल माघ बदी ३०, रोज २ का दिन भुकम्पले केहि भएन ॥ ॥

(५) ॥ श्री नारायणहिटि धारा काठमाडौं ॥

श्री राजा बिक्रमसेनले कलिगत १६११ जादा आफूलाई नेपालको राज्य तिलक दिने श्री राजा धर्मागतका नाउले आफ्नो दरबारका पश्चिम भागमा चतुरमुख नारायण स्थापना गरी नारायणहिटि धारा बनाई यि धाराबाट प्रति वर्ष दुबो समेत का कुण्ड पुष्प बगाई आउने सो फूल पाउने मानिस निहाल हुन्छ भन्ने साधना गरो बनाई दिए ॥ ॥ श्री विक्रमसेनका छोरा बिक्रम केशरीका पालामा केहि कारणले यि धारा बन्द भयो र आफ्ना बाबाको किर्ति बिग्रेकाले अति चित्त उदास भै बुढानिलकण्ठका जलशयन नारायणका सरणमा गै भक्तिमा रहदा जलशयन नारायणबाट जोतिषहरूसंग बुझ भन्ने आज्ञा-भै याचिक जोतिषहरूसंग प्रश्न गर्दा ३२ लक्षणको मानिस नर बली दिनु पर्छ अनि धारा खोलिनेछ भनी जबाफ दियो र ३२ लक्षणको मानिस पाउनाको असंभव हुनाले पुर्खाको धर्मरक्षाको निम्ति राज्यको त्याग गरी आफ्ना छोरा भुपकेशरलाई बोलाइ आजका ४ दिनका रातमा हाम्रो धारामाथि संपूर्ण शरीर छोपी कोहि १ जना मानिस सुतिरहने छ त्यसको मुख नहेरी काटिदेउ अनि धारा बहला भनी अन्हाई चौथा दिनका रातमा आफैगै संपूर्ण अंग छोपी धारा माथि सुतिरहन गयो र बाबाको बचन मानि भुपकेशरीले रातमा गै केहि विचार नगरी खड्गले शीर छेडन गरी दिदा ठूलो शब्द गरी धारा बह्यो र खड्ग धुन भनी धारामा जाँदा पितृ हत्या गर्नेको मुख हेर्नु छैन भनी दुवै धाराको हिटिमंगल फर्कि गएको अद्यापि फर्केकै छ ॥ ॥ नेपाली सम्वत् ७८२ मा श्री राजा प्रताप मल्लले हनुमान ढोका भित्र सुन्दरी चोक कालिमठन ओं श्री कृष्ण र गरुड समेत स्थापना गरि दिएको थिए सो गरूडले राजालाई केहि दुःख दियो र चतुरमुख नारायणको अगाडि स्थापना गरि दियाका हुन् ॥ बिक्रम सम्वत् १६६० साल माघ बडी ३० रोज २ मा भुमि कंप हुँदा चिरा चिरा परिरहेको पछि माघ शुदि ७ का दिन बेहान देवल भत्की मैदान भैगयो पछि बनाई तयार गरी दिएको हुन् ॥

## ( ६ ) ॥ ओं स्वयम्भुनाथ लिंग चैत्य काँतिपुर काठमाडौं ॥

यस पर्वत स्वयम्भु लिङ्ग आदिका हुन् यिनको प्रकट भएको कुरा लेखि-एको छैन नेपालमा सत्ये युगमा देवताहरूले राज्य गरी रहेका बखत बाघा-

सुरं पुत्र महेन्द्र मर्दनं कटुवालं दहमा कछपासुरलाई घोपत्थाई पानि थुनि नेपाललाई तलाउ गरी राज्ये गरी रहेका बखत १ कमल उत्पति भै स्वयम्भु लिङ्गमा स्पर्श हुन जाँदा पद्मगिरी भनी सबै देवता आई स्तुति गर्दा मंजेश्वरी शरश्वति पनि आई स्वयम्भुलाई प्रकाश गरी पर्वतमा रूख पानी जंगल बनाई सेवा गरेकाले यी पर्वतका नाउ सत्य युगमा पद्मगिरी त्रेता युगमा बज्रकुट द्वापर युगमा गोसृङ्ग कलियुगमा गोपुच्छ र स्वयंभु कहन्थ्यो ॥ ॥ सूर्य बंसी राजा वृषभ देवले आफ्ना कुलमा चलि आएको शिवमतलाई छोडी बौद्धमत लिएकाले स्वयम्भुमा आई बसे पर्वत शांतिशील भिक्षुकले स्वयम्भु लिङ्गलाई चैत्यकारले छोप्नु पऱ्यो भनी राजा वृषभ देवसंग सल्हाह गरी शाँतिकर बज्राचार्यसम्मत ली राजा वृषभ देवले स्वयंभुलिङ्गलाई चैत्यकारले कलिगट वर्ष २३०० जादा छोपी बशुपूर १ बरूणपूर १ अग्निपुर १ वायुपुर १ समरपुर १ भनी बौद्ध मतले पंञ्चपुर बनाई बौद्ध देबताहरू स्थापना गरि दिए केहि वर्ष आफैले पूजा गरी पछि बाडालाई पुजाहारी गरि दिए ॥ ॥ सूर्य्यबंसी राजा प्रतापमल्लका पालामा अघि बृषभ देवले चैत्याकार बनाई छोपी राखेका लिङ्ग जिर्ण हुदा नयाँ लिङ्ग खडा गरी अघि राजा बृषभ देवले स्थापना गरी राखेका सिलाका पाचैवता भगवानलाई पश्चिम स्थापना गरी सुनको पंचबुद्ध भगवान बनाई जीवन्यास दिई स्थापना गरिदिए यिनै लिङ्ग फेरि श्री जयप्रकाशमल्लका पालामा नेवाली सम्वत ८८४ सालमा नयाँ अर्को लिङ्ग बनाई जिर्णोद्धार गरिदिए ॥ ॥ याहाँपछि नेपालिसम्वत् ८८८ साल भाद्र शुदि १४ का दिन गोर्खेश श्री ५ पृथ्वीनारायणसाहको नेपालमा राज्य भयापछि यिनैका नाति श्री ५ रणबहादुरका पालामा साके सम्बत् १७०८ सालमा ल्हासाको देवा घर्मका लामा नेपालमा आई हजुरका ज्युज्यू बाजे श्री महाराज नरभुपालसाहालाई सन्तानन हुँदा हाम्रा पुर्खालाई भिकाई मेरा सन्तानं भयो भने मेरा छोराले आर्य्य मुलुकमा जो माग्छ सो देउ भन्ने मोहर दिई उपाय गर्दा हजुरका बाज्ये पृथ्वीनारायण साहा पैदा भएको हो भनी श्री राजा नरभुपालसाहले गरि दिएको लालमोहर समेत देखाई बिंति चढाउँदा श्री राजा रणबहादुरसाह बहुतै खुसिभै नेवाल २० खेत पहाड तर्फको १५।२० गाउ बकस बिर्ताको लाल मोहर गरी बक्सदा सो जग्गा गाउ सबै स्वयंभु प्रीति

ारी गुम्बा समेत बनाई गुठी राखी ल्हासा फर्कि गया ॥ ॥ बिक्रम सम्बत् १९११ सालमा श्री ५ महाराज सुरेन्द्र बिक्रमसाहाका पालामा भोटसंग लडाईं ्वा देवा धर्मका लामाले गुम्बामा रहेका भिक्षु बाडाहरू पठाई मदत दिएको ्नाले सो कसुर गरे बावत अघि शाके सम्बत् १७०८ मा श्री राजा रणबहा- ्र साहबाट बक्सेको बिर्ता मध्ये मोहर ५०० उठतिको जग्गा थामि दिइ अरू ्भकी रैकर गरी दिएको हुँदा सो ५०० उठतीको जग्गा अद्यापि गुठी रहेको ्छ ॥ ॥ बिक्रम सम्बत् १९९० साल काघ बदी १० रोज २ का दिन ्लो भूकम्प हुँदा केहि पनि भएन दाया बायाँको देवल अलि अलि बिग्रेका ्थियो पछि बनाइ दिए ॥ ॥

( ७ ) ॥ ओं श्री बुढानीलकण्ठ जलशयण ॥ ॥ नारायण कान्तिपुर ॥

द्वापर युगको अन्त्यमा महेँन्द्रदमनले थुनिएको बागमतीलाई ओं श्री कृष्णको चक्रले खोलि दिएपछि श्री राजा सूर्यकेतुले यी जलशयन नारायण स्थापना गरेका हुन ताहाँ पछि नेपगोपालका पालामा र महिषपाल राजाका राज्यमा वर्ष ६१८ र त्यसपछि किराति राजा २८ पुस्ताको जम्मा वर्ष १७४१ तक कलिगत १५१६ सम्म प्रख्यातै थियो ताहाँपछि सुर्य्यबंशी राजा वृषभ देवका पालामा शतरूद्रपाहाड पैन्हो आई ति जलसयन नारायणलाई छोपिंदा यादखबर नगरी त्यस ठाउमा बगैचा बनाई राखेका थिए ॥ श्री धर्मागत देवका पालामा यिनी राजालाई स्वप्नविशेषदर्शन दिई शत रूप पाहाड पैन्हो आई छोप्न गएको छु प्रकाश गरी सेवा गर भन्ने बानी हुदा प्रजाहरूलाई सामेल गराई ढुङ्गा माटो पर सार्दा ओं श्री जलशयन नारायण प्रकाश भयो र नित्य यिनै ईश्वरको सेवा भाव गरीरहेका थिए पछि सोहि शतरूद्र पर्वत पैन्हो आई छोपिन गएको थिए श्री राजा बिंवगुप्तले छोपिएका जलशयन नारायण प्रकाश गर्नालाई ढुङ्गा माटो पर सार्दा कोदालीले नाकमा चोट लाग्नु गयो र १ ठूलो आवाज आयोर त्यही राम्रो खोज्दा दर्शन भयो त नाकको ठुक्रा छैन सो बखत नाकका टुक्रा खसेका आजसम्म सोही चोतको निशाना नाकको ठुक्रा उडेका देखिन्छ ॥ याहा देखी प्रकाश भएको प्रकाश छ ॥ ॥

सुर्य्यबंसी राजाका शेषपछि मल्लको राज्ये भएको र मल्ल राजाका सन्तान श्री राजा प्रताप मल्लका पालमा भन्डारखालमा जलशयन नारायण स्थापना गरेकाले ईश्वर कोप भै अब उप्रान्त तेरा सन्तान याहाँ कैले पनि नआउनु आए मरण होला भनी स्वप्न विषे वाणी भएकाले अझसम्म यी ईश्वरकाहा राजाहरू कोहि सवारी हुदैन ॥ ॥ बिकम सम्वत् १९९० साल माघ वदी १० रोज २ मा ठूलो भुकम्प हुँदा यिनी ईश्वर केही भएन ॥ ॥

## ( ८ ) श्रों श्री चागुनारायण दोलाद्री पर्वत ॥

पूर्व युगमा कश्यपरिषिको सन्तान सुरदैत्यले नवलिङ्गको तप गरी त्रैलोक्यमा जय हुने बरपाई सकल लोक देवता जिति देवताहरूलाई बड़ो दुःख दिंदा श्रों श्री बिश्णुको शरण गै देवताहरूले स्तुति गर्दा बिश्णु गरूढ चढी आफ्नु हतियार सबै लिई सकल देवतासाथ भै अघोर लडाई गरे पछि गरूडसंग लड्दा पखेटा काटिदिए फेरि विश्णुसंग लडाई गर्दा आकाश वाणी भए श्रों श्री शिवजीबाट भो बिश्णु अघि मैले देव असुर कसैको हातबाट नमरून भनी वर दिएकाले अहिले तिमी न लड त्यो सुरलाई मार्ने मेरी पियारी श्री माहादेवी छ भनी बाणि हुँदा त्यही पर्वत भित्र श्रों श्री बिश्णु लुकिरहेका थिए त्यही सुर दैत्य आई सो पर्वत समेत हातले उचाली दोलाही हिल्यायो त्यसैबखत शिबजी आई किलोझैं भै हिलाउन भयन र किलेश्वर भए सो किलेश्वरबाट आज्ञा भोकी भो बिश्णु अहिले देवी आह्वान गरि पूजा गर देवी देखी जय होला भने मुताविक श्रों श्री विश्णुले देवी जगदम्बीका आह्वान गरी जगतको रक्षा गर्न खातिर आफ्नु खड्गले आफ्नु शिर कटल गरी रगतको धारा बगाई रहेका बखत सुरदैत्य आई देखदा सोहि श्रों श्री विश्णुका आँघदेखी जगदम्बीका महादेवी प्रकट भै सुरदैत्य भस्म गरिदिए ताहाँपछि मात्रिकागणहरू पनि विराजमान भइन् ताहाँ उप्रान्त श्रों श्री विश्णु तहि अल्प भै रहनु भएको थियो दोला जस्तो हिल्याएकाले दोलाद्री भन्ने नाउ भयो ॥ ॥ सत्ययुगका प्रथमा पादमा देवताहरूले श्रों श्री पशुपतीनाथका पुजा गरी राज्ये गरेका बखत यी दोलाद्री पर्वतमा शुदर्शन नाम गरेका मुनि थियो तिनका हविष्य भोजनका खातिर पालि राखेकी १ कपिला

नाउ गरेकी गाई थिइन सो गाइका दुध नित्य चाँपा रूखका फेदबाट एक सुन्दर पुरूष निस्की दुध दुही खाने गरेकाले तिमुनि बहुतै रिसाई गाईको पछि लागी चिवा गर्दा सधैंका हिसाबसंग चाँपा रूपका फेदबाट सो सुन्दर पुरूष निस्की दुध पान गर्न लागेको ती मुनिले देखी बहुतै कोपित भै खड्ग प्रहार गरि शिर छेदन गरी दिदा ती शिर नभएको लाशबाट चतुरभुज श्रों श्री नारायण गरूड सवारी भै प्रकट हुदा त्यो मुनि दराई स्तुति गर्दा ती शिर नभएका ईश्वरबाट वाणीभए हे मुनि नदराउ पूर्वकालमा चण्ड दैत्यसंग म लडदा परशुरामसंग धनुरविद्या र शुक्राचार्यसंग सास्त्री विद्या सिकेका सुमती नाम गरेका ब्राम्हणलाई मारी दिया र शुक्राचार्य रिसाई ब्राम्हणका हातबाट तिम्रो शीर छेदन होस भनी श्राप मोचन गर्ना खातिर भएको हो तिमी मेरो पुजाहारी भै अर्चन गर भनी अन्तर ध्यान भए ॥ ॥ पछि श्रों श्री विशुगुप्तले कलिगत ३३६३ मा यी राजालाई श्रों श्री चागुनारायणबाट स्वप्नबाणि भएमुताविक दोलाद्रि पर्वतमा ७०० घरको ग्राम बनाई प्रिति गरी चढाए ॥ ॥ पछि हरीदत्त राजाले स्वप्नमा दर्शन पाई छिन्न मस्ता सक्ति सहित गरी देवालय बनाईदिए ॥ सो देवालय जिर्ण हुदा नेपाली सम्वत ७०१ मा गंगा रानीबाट मंदीर बनाई छानामा सुन छापी धेरै गुठी राखीदिए ॥ यस स्थानको प्रत्यक्ष गरूडले नाग लैजादा तही विशुबाट चढेको गरूड मूर्तिमा खलखल पसिना आउंछ र सो पसिना पिताम्बरले पुछि लिई बसले धारणा गर्छ त्यसको नाग सर्पको भए विष कहिले पनि लाग्दैन प्रसिद्ध छ ॥ ने. सम्वत् ८४४ सालमा शिरखसी भुईंमा पऱ्यो र तिन शहरका राजाहरू नमिली झगडा भयो र लडाई समेत भयो ॥ ॥ पछि विक्रम सम्वत् १६ सालमा श्री ३ महाराज रणद्वीपसिंह रणबहादुरका पालामा नीज माहाराजबाट चौघेरा सतल बनाई बक्सदा अतिम्मनीय भैरहेको थियो ॥ पछि विक्रम सम्वत १९९० साल माघ बदी १० रोज २ मा ठूलो भुकम्प हुँदा चौघेरा सतल जम्मै भत्की बिग्री गए ॥ पछि १६ सालमा बनाइदिए ।

[ ६ ] ॥ श्रों श्री चण्डेश्वरी बनेपा ॥

सत्ययुगका प्रथमापादमा चण्ड नाउँ गरेका दैत्यले ब्रम्हाको तपस्या

गरी बर पाएपछि देवताहरूलाई दुःख दिदा ईन्द्रादि देवताहरू श्रों श्री विश्णु-छेउ सरण जाँदा विश्णुभगवानबाट ती दैत्यसंग युद्ध गरिरहेका बखत ती दैत्यका सहायता भएका परशुरामसंग धनुरविद्या र शुक्राचार्यसंग शास्त्रविद्या सिकेका सुमती नाम ब्राम्हणलाई भगवान विश्णुले शिर छेदन गरी मारी दियो र शुक्रचार्य रिसाई तिम्रो शिर पनि ब्राम्हनका हातबाट छेदन हवस भनी श्राप दिये पछि ती श्राप मोचन गर्नालाई भगवान विश्णु संग्राम छोडी हाल दोलाद्रि पर्वत विषय गुप्त भै बस्न गयपछि ती चण्ड दैत्यले देवताहरूलाई दुःख दिदा ब्रम्हाछेउ सर्ण गयो ब्रम्हाका श्राज्ञामुताबिक रत्न चन्दनका बनविषे चाँपका रूखमा विराजमान भैरहेकी जगदम्बीका भगवती छेउ शरण गै स्तुती गर्दा ती चाँप रूखबाट देबी प्रकट भै ती चन्द दैत्यसंग बडो घनघोर संग्राम गरी बैशाख सुदि १५ का दिन ती चन्द दैत्यलाई देबीबाट त्रिशुल प्राहर गरी मारीदिए उपान्त देवताहरूले स्तुती गरी स्वस्थानमा गए देवी पनि अन्तरध्यान भै अपना स्वस्थान सोही चांपबृक्षमानै बिराजमान भएका हुनाले अहिले पनि चापा रूखको फेदमा बिराजमान भएको थिए पछि कलिगत ४१६७ वर्षमा श्री राजा आनन्ददेवले बनेपा शहर चण्डे-श्वरीका मण्डिर बनाई नित्यपूजालाई गुठिराखी श्राचार्यबाट नित्यार्चन गरायो ।। वि. सं० १९९० माघ २ गते भुकम्प हुँदा केही भएन

## [१०] ।। श्रों श्री खास्तिको बौध चैत्य ।।

अघि भुपकेशरीले आफ्ना बुबाज्यूकहा बचन वमोजिम बिबेक नगरी नारानहिटिको माथि सुतिरनेलाई मार्दा भोली पल्ट हेर्दा आफ्नै बाबु मरीरहेको देखी अति शोक गरी यो पितृहत्या कसो गरी तारूभनी श्रों श्री वज्रयोगिनीका शरण जादा मैले उदाएका कालिज पंछि बसेका ठाउँमा बौद्ध मण्डिर बनाउ र तेरा पितृहत्या पाप नष्ट होला र तेरो पितृ उद्धार होला भनी ईश्वरीबाट आकाशवाणि भै १ कालिज पंछी उडाई दिंदा सो पंछिको पछि पछि दौडी आई कालिज पंछी बसेका ठाउँमा बौद्ध मण्डिर बनाउनु आरंभ गर्दा पितृ-हत्या गरेका पापले १२ वर्षसम्म पानी नपरी हाहाकार पर्दा राति घेरै कपडा-हरू विछाई सित थापि निचोरी १२ वर्षसम्म सीतको पानीबाट ईंट पारी

माहा कष्ट गरी १२ वर्ष लगाई बौद्ध मन्दिर तयार गरी प्रतिष्ठा गरी पाप-मोचन गरी पितृउद्धार गरे यसैलाई आजकाल खास्ति भन्दछ ॥ १९९० साल माघ वदी ३० रोज २ मा ठूलो भूकम्प हुँदा केही भएन ॥ ॥

( ११ ) श्री मत्स्येन्द्रनाथ पाटन ॥

परापूर्वमा श्री महादेवलाई विश्णुबाट मोहिनी रूप देखाउँदा सो मोहिनी मूर्तिलाई देखने वित्तिकै माहादेवलाई कामले पिडित भै समात्न जाँदा धैर्य धारण गर्न नसकी विर्य्य पटन हुन लाग्दा मोहिनी मूर्ति अलप भै विष्णु मूर्ति धारी हातमा थापी लिई बायु र केशरीवानरीलाई बोलाई तप गर्न लागेका अंजनी वानरनीलाई बोलाई तप गर्न लागेको अंजनी बानर्नीका उपरमा राखी आउनु भनी अन्हाउँदा विष्णुका आज्ञाबमोजिम वायु र केशरी वानर्नी गै दश ईन्द्रिय बाधी तप गरिरहेका अंजनी बान्दर्नीका कर्णद्वारा शिववीर्य उदरमा प्रवेश गर्दा अंजनीका गर्भ धान भै मास पूर्ण भएपछि हनुमान भनी जन्म भयो यही शिवविर्य केशरी वन्दर्नीका हातमा राखिदिए-पछि विष्णुले आफनो हातको विर्य्य नदिमागै धुन्दा पानीमाथि बसेका विर्य्य माछाले खाँदा मत्स्योदरदेखी मत्स्येन्द्रनाथको जन्म भए फेरि पानीमा धुन्दा पनि नगएको गोवरमा पुछेको सो गोवरवाट जन्मेको हुदा गोरखनाथ प्रख्यात भए । ॥ ॥ कलिगत ३६७६ मा श्री राजा नरेन्द्रदेवका पालामा सिद्ध गोरखनाथ नेपाल आई भिक्षा माग्न आउँदा तिन्का माथि सत्कार गरी भिक्षानदिएकाले अतिक्रोधित भै मृगस्थलीमा आई मेघ मण्डललाई खिची नवनाग आसन गरी गुप्त रूपले तप गरीरहेकाले नेपालमा अनावृष्टि दुर्भिक्षे हुँदा प्रजाले अत्यन्त दुःख पाएका हेरी राजाले सारै अपसोच गरी ठूला ठूला शास्त्रिपंदितहरू जोतिषहरू जम्मा गरी जलवृष्टि गराउने उद्योग गर्दा वृष्टि नभएकाले दुनियाका संमति बुझ्‌ना खातिर आफू रात्रि विषय सहरमा डुल्न जान्थे एक दिनका रातमा घुम्न जाँदा बन्धुदत्त आचार्य्य कोठा भित्र बसि सपत्नी यही कुरा गरेको राजाले सुनी के कुरा गरीरहेको भनी चिवा गर्दा यो अनावृष्टि भएको के कारणले हो राजाले पनि गर्नसम्म उपाए गर्दैछ तैपनि वर्षाद हुँदैन केहि उपाए भए बताउनुहोस् भनी स्त्रीचाहीले भन्दा

अरू थोकले यो अनावृष्टि भएको होइन कि अनादर गरेका रीशले मेघ मण्डल खिची वृष्टि कर्ता गैन्ह नागहरूलाई आसन गरी मृगस्थलीमा गोरख-नाथले गुप्त रूपले तप गरिरहेछन् र वृष्टि हुन नसकेका छुन् तिनका गुरु मत्स्येन्द्रनाथ कामरूपीठमा राजपुत्र भै जन्म लिन गैरहेछन् ती मत्स्येन्द्रनाथ लाई ल्याउनु सके गुरु दर्शन गर्नालाई तपबाट गोरखनाथ उठलान् र नाग-हरू स्वस्थान जान पाएपछि वृष्टि हुन्छ भनी बन्धुदत्त आचार्यले आफ्ना स्त्रीलाई भनेका कुरा राजा ले सुन्दा भोलिपल्ट बन्धुदत्त आचार्य्यलाई सल्हा गर्दा अघिल्ला दिन आफ्ना स्त्रीलाई भनेका कुरा राजाले सुन्दा सो भने बमोजिम माथि लेखिएका कुरा सबै भनी सुनाउदा असल कुरा भन्यो भनी राजा नरेन्द्रदेवले बन्धुदत्त आचार्य्य र १ जना नोकर समेत लिई ३ जना सम्मत गरी तिमीहरूले बोलाउँदा तुरन्त आउला भन्ने करकोटक नागको बाचा गराई तिनै जना योगी रूप भै कामरू क्षेत्रमा गै अवतारी मत्स्येन्द्रनाथलाई चिन्हि सकेपछि करकोटक नागलाई आवाहन गरी राजाका भोजन समय तिमी सूक्ष्म रूप भै खानेकुरामा मिसी राजाको पेटमा पसी पिडा गर्नू र मैले औषधि गरेपछि बाहिर निस्कनु भनी अन्हायो र नागले पनि राजाको भोजन समयमा सुक्ष्म रूपभै खानेकुरामा मिसी राजाको उदरमा गै पीडा गर्दा अनेक बैद्य ज्योतिषहरूलाई देखाई औषधि गर्दा पनि निको नभएकोले कोही कोही छ कि भनी खोजी गर्दा बन्धुदत्त आचार्य गै नाग पूजा गरी राजालाई औषधि ख्वाई वमन गराउँदा ती उदरमा बसी रहेका नाग सूक्ष्म रुपले बाहिर निस्की गयो र राजाको रोग निको भएपछि राजा खुसि भै के माग्छौ माग भन्दा मागेको देउला भनी बाचा गराई अवतारी राजपुत्र माग्दा राजाले केही उत्तर नदिई रानीले कान्छा पुत्र दिनालाई ईन्कार गरेकाले ल्याउन नपाउँदा त्यसै बसिरहेका थिए एक दिन औतारी राजपुत्रलाई भेटी नेपालमा दुर्भिक्ष हुँदा यहाँ सम्म आई ध्याञ्यू हाम्रो मनोरथ पूर्ण गरी देउ भन्दा बैशाख महिनामा ब्राह्मणद्वारा आर्य तिर्थका जलले श्रो श्री पशुपतीनाथलाई जलाभिशेषगराई दिनु र वर्षा सुफल होला मेरा आमाले तिमीहरूसंग जान देवैनन् श्रो श्री पूर्ण चण्डिकाको आज्ञा नभै म आउन पनि हुन्दैन तिमीहरूले आव्हान गर्दा अवश्य आउला

भनी जवाफ गर्दा फर्की नेपाल आई श्रों श्री पूर्णचण्डिको आज्ञा पाई पाटनको लगमखेलको मध्ये भागमा सिलाका पद्मासन बनाई बन्धुदत्त आचार्य र राजा बसी बन्धुदत्त आचार्यले पीठ देवताहरू स्थापना गरी पुरश्चरण गरी मन्त्रले आकर्षण गर्दा श्रों श्री मत्स्येन्द्रनाथ भ्रमर रूप भै आई कलशमा प्रवेश हुँदा त्यस बखत राजालाई निंद आइरहेकाले छोप्न नसक्दा भ्रमर रूप मत्स्येन्द्रनाथ कलशबाट बाहिर निस्की गए फेरि मन्त्रका बलले आकर्षण गर्दा दोश्रा पटक पनि भ्रमरै रूप भै कलशमा प्रवेश गर्दा त्यसबखत पनि राजा निदाई रहेकाले कलश छोप्न नसकी कलशबाट बाहिर निस्की गएपछि अब एक पटक फेरि आउने छ त्यस बखतमा पनि कलश छोप्न सकेन भनेथे जानेछ भनी राजालाई चेताई फेरि अकर्षण गर्दा तेश्रा पटक पनि भमरैको स्वरूप भै कलशमा प्रवेश गर्दा त्यस बखत पनि दैवका छलले निदाइरहेकाले अनर्थ भै व्यर्थ हुन लाग्यो भनी ती बन्धुदत्त आचार्यले राजालाई घुडाले घचेटी दिदा राजा निन्द्राबाट बिमझी झट्पट् कपडाबाट कलश छोपी दियो र कामरूपीठ पूर्णचण्डि मिननाथहयग्रीव भैरबहरूलाई पनि आवाहन पूजा मान्ने गरी श्रों श्री मत्स्येन्द्रनाथलाई सुरेश्वरनाथ बौद्धाचार्य का यपेबही भग्ने बहालमा राखी धातुका लोकेश्वर मूर्ति बनाई उदरमा कलश राखी प्राण प्रतिष्टा गरी स्त्री पुरुष दुवैलाई गर्नु पर्ने दश कर्म गरी यज्ञोपवित दिई शिवमार्ग बौद्धमार्ग दुवैले मान्नु पर्ने प्रमाण गरी स्थापना गरी दिए कलिगत ३६०६ जादा ती मत्स्येन्द्रनाथलाई आव्हान गरेका बखतमा तेश्रा पटक पनि राजा निदाइरहेकाले ती बन्धुदत्त आचार्यले राजालाई घुँडाले घचेती दिदा बिम्झयो र कलश छोपी सकेपछि मलाई घुँडाले घच्यात्ने यिनलाई मार्नु पर्छ भनी राजाले कल्पना गरेको बन्धुदत्त अचार्जले थाहा पाई सो डरदेखी दराई बन्धुदत्त आचार्यले देह त्याग गरी श्रों श्रीमत्स्येन्द्रनाथका दाहिने पाउमा रहन गयो स्व खबर राजाले पाई राजाले पनि अपशोच गरी आफूले पनि देह त्याग गरी बायाँ पाउमा रहन गएको हुँदा मत्स्येन्द्रनाथको पाउ दर्शन गर्न अति उत्तम भन्दछ ॥ ॥ यहाँ पछि कलिगत ३६९४ वर्षमा

ललित पतन पाटन सहरमा अघिदेखी चलिआएको अरू देवता रथारोहन गरी यात्रा गर्ने जम्मै माकुम गरी मीननाथको र मत्स्येन्द्रनाथको यात्रा सालिन्दा गर्ने रीत बुग्मतीमा मन्दिर बनाई दक्षिणायनमा बुगमती लगी राखने र उत्तरायणमा पाटन ल्याई राखने रीत चलाई दिए ॥ ॥ श्रों श्री मत्स्येन्द्रनाथ नेपाल आइरहेको कुरा पंचकुमारीबाट गोरखनाथलाई सुनाउँदा गोरखनाथ गुरुको दर्शन गर्नालाई तपबाट उठेपछि नागहरू स्वस्थानमा जाँदा त्यस दिनदेखी नेपालमा बृष्टि भै शुभिक्ष भए ॥ ॥ कलिगत ४२०८ जाँदा पाल्पामा मुकुन्दसेन राजा नेपाल आएका बखत श्रों श्रीमत्स्येन्द्रनाथ लगन्खेल को स्नान मण्डपमा थियो घेरै फौज छ भन्ने खबर सुनी दुनिया डराई श्रों श्री मत्स्यन्द्रनाथ ताहा नै छाडी भागी गयो र मुकुन्दसेन राजा पुगेका बखत सुनको चदुबामा रहेका चारै नागका मुखबाट पानीको धारा बही श्रों श्रीमत्स्येन्द्रनाथको शिरमा परिरहेको देखनाले प्रत्यक्ष देवता हो भनो आफूले चढिराखेको घोडाको गलाको चाँदीको सिक्रिमाला झिकी चढाउँदा मत्स्येन्द्रनाथले आफै शिर झुकाई गला पारि लिदा प्रत्यक्ष मानी उनमाथि केहि बिगार गरेन त्यो सिक्रि श्रों श्री मत्स्येन्द्र नाथको गलामा अद्यापि छँदैछ ॥ ॥ श्री राज बाश श्रीनिवास मल्लले नेपाली सम्बत ७७२ साल माघ शुक्ल ५ का दिन तवाहालका देवल देवालयका माझ तलामा सुनको छाना छाई तोरण समेत गजुर चढाई श्री मत्स्येन्द्रनाथको प्रात मध्यान संध्या अर्घ रात्रीमा आरती गर्ने गुठी समेत राखिदिए ॥ फेरि नेपाली सम्वत ७६४ साल बैशाख १४।४ का दिन यात्रा गर्ने खटतलामा सुनले छाई दियो ॥ बिक्रम सम्बतमा मत्स्येन्द्र-नाथको रथयात्रा गरी लगंखेलदोलंग पिठ संधी रहेका बखत अकस्मात् रथबाट आगो सल्की आयो र श्रों श्री मत्स्येन्द्रनाथ समेत जलियो र बाडाहरूलाई सजाय गरियो ॥ फेरि बिक्रम सम्वत् १८२० सालमा पाटन दरवार समीपमा श्रों श्री मत्स्येन्द्रनाथ अडिरहेका मौकामा अकस्मात् मत्स्येन्द्रनाथरथमा अग्नि प्रज्वलित भै जल्दा ईश्वर मत्स्येन्द्रनाथसम्म जेनतेन रथबाट निकालि वचाए ॥ ॥ अघि सम्बत् ८१० सालमा योगनरेन्द्र-मल्लका पालामा श्री मत्स्येन्द्रनाथको यात्राको रथ ढल्यो र राजाले सोचगरि-

रहेका थियो त्यही बखत श्रों श्री मत्स्येन्द्रनाथ १ मानिसको शरीरमा प्रवेश भै दरवारमा आई तिमिले कोही सुर्ता नलिनु रथ आफै उठ्छ भनी गयो र राजाले यो कुरा पक्का हो भने सुन तोला ४८ को गहना चढाउँला भनी भाकल गऱ्यो र देवता झिकी बाटोमा राखी काठको टेवा राखी डोरीले तान्दा सेद्देभै उठी आए यात्रा पनि चलायेपछि आफूले भाकल गरेको तोला ४८ सुनको सिकि बनाईदिए ॥ विक्रम सम्वत् १६६० माघ बदी ३०।२ का दिन २।१५ मिनेटको टायम्मा ठूलो भुकम्प भै देवल जम्मै भत्की देवता समेत छोपो पूरन गएको १०।१५ दिनपछि पल्टनले खोजी वल्ल पायो केहि प्राण प्रतिष्ठा गरी जीवन्यास थप्नु पर्ने भयो ॥ विक्रम सम्वत् १६६५ सालमा श्री ३ महाराज जुद्धसम्सेरवाट देवल बनाई दिए ॥ ॥

[ १२ ] ॥ श्रों श्री पंचलिङ्ग पचलि काठमाडौ ।

कलिगत ३८२५ मा श्री सूर्यबंसि राजा गुणकामदेवले श्रों श्री महालक्ष्मीको आज्ञा मुताबिक काठमाडौं सहर बनाई सकेपछि देश रक्षाका निमित्त यो पञ्चलिंगेश्वर भैरव गणेश अष्टमात्रिका गणले सहित भएका आव्हान गरी देशको दक्षिण भागमा स्थापना गरी यी भैरवनाथ मूल पीठ बडो प्रतक्षका हुन् भनी प्रचार गरि दियका थिए ॥ ॥ फेरि कलिगत ४३५६ मा पाल्पाका राजा मुकुन्दसेन नेपालमा सवा लाख फौज लिई आई रामसिंहदेवराजा आदि सूर्यबंसिहरूका राजपाट नष्ट भ्रष्ट गरी पाल्पा फिरि गएपछि नेवालमा सूर्यबंशी राजाहरूकोहिनहुँदा नुवाकोट्बाट बैश्य ठकुरीहरू आई काठमाडौं सहरमा टोलै पिच्छेको राजा भै बसेका बखत भिमसेनस्थानमा बैश्य ठकुरी राजा गोपुष्पलाई स्वप्न विषे श्री पंचलिङ्ग भैरवबाट मेरो मूर्ति बनाई यात्रा गर भनी वाणी हुँदा मृतिकाको भैरव मूर्तिको कुम्प बनाई कालि गणेश समेत गरी नेपाली सम्वत् २६० सालमा प्रतिवर्ष आश्विन शुदि ४ का रातमा पीठमा लगी मांसाहुती यज्ञ गरी भोलीपल्ट पञ्चमीका दिन यात्रा गर्ने रीत चलाई ज्यापुवाट नित्यार्चन गराई आएका थिए ॥ ॥ यी बैश्य ठकुरीले राज्य गरिरहेका बखत श्रों श्री रामचन्द्रका कुलको श्री राजा हरिसिंहदेवको सन्तान रत्नमल्लले श्रों श्री

तुलजा भवानिका बर प्रसादले काठमाडौं सहरका बैश्य ठकुरी राजाहरूसंग लडाई गरी जिति काठमाडौं सहरका राज्य गरेको र यीनै रत्नमल्लको संतान शिवसिंह मल्लका पालामा पाटनका राजा हरीहरसिंह मल्लले यी पञ्चलिङ्ग भैरवको कुप कहिल्यै पनि भरिंदैन भन्ने भनेको सुनी म भरि लिउँला भनी अहंकार गरी सालिन्दा चलि आएका रीत बमोजिम यात्रा गर्नालाई आश्विण शुदि ४ का रात्रिमा भैरव मूर्ति कुप पीठमा लगि राखेका वेलामा पाटनका राजा हरिहरसिंह देवले धेरै द्रव्य ल्याई भर्दा पनि नभरिएको हुनाले राजा लाचार भै मैले नचाहिने अहंकार गरे छु ईश्वरसं क्षमा मागी पूजा मान्ने गरे अद्यापि यी भैरवका यात्रामा प्रतिवर्ष पाटन दर्बारबाट पुजा पठाउँदै छन् यी भैरव यस्तो प्रत्यक्षका हुन् ।। ।। यिनै सालका यात्रामा भैरवको कुप चिकंमुगलमा खसी फुट्यो र राजा शिवसिंहमल्लले सो फुटेको टुक्रा टुकीहरू सबै जम्मा गरी त्यसै ठाउमा गाडी छोपी पूजा मान्य गरि मेलुपात भनी प्रख्यात गरी पञ्चलिंग भैरव दक्षीणका क्षेत्रपाल बड़ा प्रत्यक्ष भनी धातुको कुप सुनले मोलम्बा गरी भैरबका ध्यानले युक्त गरी नाना द्रव्यले भरी आश्वीन शुदि ५ का दिन यात्रा गर्ने रित चलाए ।। ।। यिनै शिवसिंह-मल्लका पालामा दक्षिण देशबाट लम्बकर्ण भट्ट आएर्थछ ओं श्री महा-देवलाई हिंसा गर्छु भनी गिल्ला गर्दा यिनै ईश्वर पंचलिंगको जलहरी छोपि ढुङ्गाले स्थान बनाईदिए ।। विक्रम सम्वत् १९९० साल माघ बदि ३०।२ मा ठूलो भूकम्प हुँदा केहि पनि भएन ।। ।।

## [१३] ।। ओं श्री किरातेश्वर देउपाटन ।।

द्वापरका अन्त्य कलि प्राप्त हुन लागेको बखत कीराति राजा श्री यलम्बरका पालामा कैलाश विषय विराजमान भै बक्सेका ओं श्री महादेव ओं श्री पार्वती देखी रहित भै गुप्त रूपसंग किराति रूप भेष भै श्लेष्मांतक बनमा बिहार गरी रहँदा पार्वतिले शिवलाई पाउन नसकी गौरी घाटमा आई १ सीलासीलामा आसन बाधि १००० वर्षसम्म तप गर उप्रान्त शिवको चालचलन सबै थाहा पाई आफू पनि किरातिनी भै शंकर छेउ जाँदा सुन्दरी किरातिनी रहेछ भनी पार्वती अंकमाल गरी बसि दुवै जना भै श्लेषमांतक

वनविषे ओं श्री किरातेश्वर महादेव स्थापना गरी पूजा भाव गरी रहेको र किरात रूपले स्थापना गरेको हुँदा यी महादेवको नाउँ किरातेश्वर भन्ने नाउ रह्यो कार्तिक शुक्ल ९ का दिन जसले गौरी घाटमा स्नान गरी यिनै किरातेश्वरको दर्शन गर्ला त्यसको सर्व पाप नाश भै भुक्ति मुक्ति पद पाउने छ भनो पार्वतीबाट आज्ञा भए ॥ बिक्रम सम्वत १९९० साल माघ बदि ३०।२ मा ठूलो भूकम्प हुँदा केहि पनि भएन ॥

१३ ॥ ओं श्री कुम्भेश्वर पाटन ललित पुर ॥

आदि युगमा ब्रह्माले स्थापना गरेका हुन गौरी कुण्ड तिर्थ पनि ब्रह्माले नै आराधना गरेका हुन् ॥ सोही कुम्मेश्वरको तप गरी कश्यप ऋषिले प्रजा उत्पन्न गरेका हुन् यो कुम्भेश्वरलाई सर्वेश्वर भनी भन्छ मृत्युञ्जय पनि भन्छ ॥ ॥ अघि पूर्व कालमा मध्येशमा जन्मी ब्राह्मण भै चोरी वृत्ति गरी अत्यन्त पापी भएको १ ब्राह्मण थियो अन्त्य कालमा प्राक्तनीय वासना अलि असल भएकाले गंगाको तीरमा मृत्यु हुँदा पछिल्ला जन्ममा पनि ब्राह्मणैका कुलमा जन्मी जात मात्र ठूलो भएको ब्रह्म कर्म केही नभै कुबुद्धि भएको थिये केही काल भोगी १ दिन आफ्नी ब्राह्मणीसंग झगडा गरी लात मारी कुटपिट गर्दा ब्राह्मणी मरेपछि भागी फिरन्त भै हिड्दा बाठोमा पशुपति क्षेत्र अति उत्तम भनेको सुनी नेवाल आई यही कुम्भेश्वर भयाका स्थान अघि जङ्गल थियो सोही जंगलमा बसी चोरी डाका गरी जिवीका भएको थिए त्यसबखत ती ब्राम्हणको नाउ गंगादास थिए दैवसँयोग १ मुनिको उपदेशले ती गँगादास ज्ञानि भै ती ओं श्री कुम्भेश्वर नगीच बसी मरे यमदुत आई मरेको गँगादास लिन आउदा ती दुतदेखी डराई सोही ओं श्री कुम्भेश्वरको लिंगमा अँगाला हालि बस्दा यमदुतले पास हालि तान्दा तो लिङ्गमा समेत लागेकाल लिङ्गमा डाम देखेको अजतक छ ॥ पछि ती गँगादास कैलाश-वास पाई मुक्त भए यो कुरा हिमवत्खण्डमा लेखेको छ यस्थानमा अघि शिवालय मन्दिर केहि थिएन ।

नेपाली सम्बत् ३०१ सालमा श्री राजा जयस्थिति मल्लले यी ईश्वर ठूलो महात्म्येका हुन् भनी चौघरा सत्तल २ तला देवालय बनाई गजुर चढाईदिए

त्यस ठाउँमा नागदह भन्ने तलाउ सोहर्दा नाग मूर्ति १ गणेश १ सितला १ नारायण १ गौरी १ बसाहा १ कृतिमुख १ आगमदेवता १ जम्मा ८ मूर्ति पाउँदा सो सिवालय भित्रै स्थापना गरी शित शितला साँति निमित्त काठको उन्मत्त भैरव १ मूर्ति बनाई ताहाका पानी पोखरीमा लगी श्रावण सुदि १५ का दिन मेला गर्ने रीत चलाई दिए त्यसका विस्तार भैरवका शिला पत्रमा लेखि राखेको अद्यापि छदैछ नेपाली सम्बत् ८१७ सालमा राजा जोगनरेन्द्र मल्लले ५ तला छाना बनाई ७२१ साल माघसुदी १ का दिन यज्ञ मण्डप बनाई होता पुर्वनन्द उपाध्यले अग्नी स्थापन गराई कोट्याहुती गराई गजुर चढाई जलहरी राखिदिए ॥ पछि श्री ५ महाराजधिराज रणबहादुरसाहबाट आफ्ना रानी स्वर्ग भएको रीसमा नेपाली संबत् ९२१ सालमा यी महादेव-लाई नर्क लेपन गराउदा लिंङ्गमा खतिराभै पिपसमेत आयो र माहिली माहारानीबाट गाबहालका श्री कण्ठानन्द पाध्यले पूजाबन्धको प्रा सचित गराई औषधि लेपन गराई दिदा निको भैगयो खटिराको चिन्ह अद्यापि छदैछ यी महादेब यस्तो प्रत्यक्षकका हुन् ॥ बिक्रम सम्बत् १९८७ सालमा श्री३ महाराज भीमशम्सेर जङ्गबहादुर राणाबाट विग्रिरहेका देवालंय सचाई सो देवालयमा रंगरोगन भराई अत्यन्त मनोहर सुन्दर स्थान तुल्याई दिए ॥ बिक्रम सम्बत् १९९० साल माघ बदि ३०१२ मा ठूलो भूकम्प हुँदा देबल ५ तले जम्मै भत्की गयो त्यस टाइममा डौबहालको साहु जितगोविन्छको छोरी सवा लाख लावा चढाउन गएकी रहेछ नीजर र पुजाहरी भट्ट समेत जना २ पनि देबल भित्र पुरिएर मऱ्यो बिक्रम सम्बत् १९ सालमा श्री ३ महाराज जुद्ध सम्शेरबाट जगदेखी नयाँ श्रीजना गरी प्रतिष्ठा समेत गरी दिए ॥ ॥

## ( १५ ) ॥ ओं श्री भीमसेन पाटन मंगल टोलको ॥

नेपाली सम्बत् ८११ साल माघ सुदि ११ का दिन श्री राजा योगेन्द्र मल्लले पूर्णानन्द उपाध्या होता गरी कोट्याहुति यज्ञ गरी दुसासन वध गरेको ध्यान गरी भुतभुतिनी सहित मूर्ति बनाई प्राण प्रतिष्ठा कर्म गरी आचार्यहरूले रात्री विषए देश बली गराई दावाटै पछे राँगा बोका हांस बलि चढाई नाच बाज सहित देश यात्रा गरी देवालयमा स्थापना गरिदिए

यी भीमसेनलाई प्राण प्रतिष्ठा गर्दा नाकका छिद्रमा प्यूराको रोपि राखेको जीवन्यास मंत्र सिद्धिका प्रभावले स्वासबाट पिउरा उडायो र राजा बहुतै खुसी भै आफ्ना हातको नवरत्नको औंठी ओं श्री भीमसेनका हातमा लाईदियो अघि मुकुन्दसेन राजाले सुर्य्यबंसी राजाहरूलाई निसेध गरी आफू फर्केपछि नुवाकोटको ठकुरी राजाभैरहेका बखत कलिगत ४२००–४२०८ भित्रमा तिमंगल टोलमा १ कोही स्त्री जातिका ठकुरीका लवतका घरमा १ खोपामा भीमसेनका नाम गरी मानि राखेका थिए कुपितेश्वरदेखी दक्षिण मेरुसिलामा बलि आफाल्नु ल्याएको माथी लगी बलि आफाल्नु ल्याएको माथी लगी बली खाई कहतरा त्यही खोपाका अगाडि छाडि राख्छ र भीमसेन जाग्या भनी चपाल गरी बली चोरी माथि लगी राखेकाले चौखु चपाल नाउ गरी ठूलो मूर्ति माटोको बनाई चित्रकार गरी विराजमान गरायाको खोपामा जागेको हुनाले त्यो खोपा ह्यासन सकेन अद्यापि छँदैछ त्यही मूर्ति पुरानु भै बिग्रदा योगनरेन्द्रमल्लले माथि लेखिया बमोजिम स्थापना गरेको हो ॥ पछि विक्रमसम्वत १८३४ सालमा श्री ५ महाराज धिराज श्री सिंहप्रतापसाह स्वर्गे हुँदा बर्षि भित्र यात्रा देव देबताहरू-को मात्र भै पछिल्ला सालका यात्रा गर्न तयार नगरी त्यसै रहदा भीमसेन आवेश भै हामीलाई तिमीहरूले खेलांची गर्‍यो भनी वडो कोप वचन गर्दा भए मेरो यात्रा प्रति वर्ष चलाउनु तिमीहरू नपत्याए प्रत्यक्ष म देखाउँला यात्रा गर्ने मेरो मूर्ति अगाड राखी पुजा गर्दा मेरो ठुलो मूर्ति देखो फूल खसी यात्रा गर्ने मूर्तिमा नपरेसम्म यात्रा नचलाउनु भनी आज्ञा भयो र आज्ञा बमोजिम गरी प्रति वर्ष यात्रा गर्नालाई भ्रूटापोलका आचार्यहरूले गुठी राखी प्रति वर्ष यात्रा चलाए आज्ञा भएका प्रत्यक्ष अद्यापि भैरहेछ वि० सम्वत् १९९० सालमाघ वदी ३०।२ मा ठूलो भूकम्प हुँदा केही पनि भएन ॥ ॥

( १६ ) ओं श्री जय बागेश्वरी देउपाटन ॥

यो नेपाल मण्डलमा ओं श्री पशुपतीनाथ गुह्याश्वरी प्रकट भयपछि द्वापर युगमा यिनी ईश्वरी मानसरोवरबाट शिला नदि लगी नेपालमा प्राप्त भएकी हुन् यी परमेश्वरीका आफ्नु मन्दिर मूर्ति केहि थियेन गुप्त रूप पीठ

सम्म थिए सुर्यबंशी राजा शिव देवका पालामा गोल नाम सहर बसाई श्री श्री जय बागेश्वरीलाई नित्यार्चन गराएका थिए पछि सूर्यबंसी राजा शिवदेवका पालामा स्वप्नतिर्थमा स्थान गरी आउने कोही १ योगी भेटी राजालाई म दुर्वासा ऋषिका अंस हुम् भनी सुनाउँदा सोही योगीको सम्मति लिई कलिगत ३२३२–३२७४ भित्र यिनी श्री श्री जयवागिश्वरी चंचल मूर्तिलाई स्थीर गरी वदो कष्टसंग रहस्य मूर्ति बनाई चित्रकार गरी जीवन्यास दिई जगाई प्राण प्रतिष्ठा गरी मन्दिरका उत्तर भागमा चंचल मूर्ति भैरवलाई चित्रकार गरी आचार्य्यलाई पुजाहारी गरी दिएका र यिनका शेषपछि ६ पुस्ताका राजा हुने श्री राजा अंशुवर्माले प्रति वर्ष चित्रकार गर्नु मुस्किल छ भनी १२ वर्षमा चित्रकार गर्ने रीत चलाई चण्डी पूर्णमाका दिन देबी प्रशन्न निमित्त कौमारीगण बनाई अनेक यज्ञादि कर्म कृया गरी बलि दिना निमित्त अघि पीठ मात्र भएको राजा– राज्येश्वरीमा बाह्याभ्यंतर कर्म चलाई दिया पछि जगज्जय मल्लका पालामा यिनी परमेश्वरका मन्दिर भित्र चोर पसी धेरै गहनाहरू चोरी लागेपछि चोरलाई तलास गर्न लाई राखेका थिए फेला पार्न सकेका थिएन चोरी भएको ३ महिना पछि ५ वर्षका कन्या कुमारी अचार्य पुत्रीका सरीरमा देवी आवेष भै मेरा गहना चौर्ने चोर हारीका गाउका ढोका भित्रका पाटी भित्र बसी थाम बजाई रहेछ भनी आज्ञा प्रशन्न हुँदा कन्याकुमारीका बचन प्रतित मानी सबै जना गै हेर्ने जाँदा ठाम बजाई रहेको देखी तिनलाई पक्री ल्याई राजा वक्साई सासन गर्दा चोरी भयाको गहना मिल्यो र देबीलाई चढाइ ती चोरलाई मारी ज्यान सजाय गरीदिए यो देवी यति प्रत्यक्षका हूँ ।। वि० सम्वत् १९९० साल माघ बदी २०१२ मा ठूलो भूकम्प हुँदा केहि भएन सतलहरू भत्कीरहेको श्री ३ महाराज जुद्धसम्सेरबाट बोनाई दिएका हुन् ।। ।।

( १७ ) ।। श्री श्री प्रयागभैरव पाटन् लगंखेल ।।

श्री राजा अंशु बर्माले देउ पाटन का दर्बार छोडी हाल पाटन लगंखेल भन्ने ठाउँको सुवर्णखाद भन्ने बन फाडी मतिगर भन्ने सहर बनाई आफ्ना, मंत्री प्रजाहरूलाई त्यही बास गराई पछिप्रयाग गै भैरवलाई यथाविधीले आवाहन गरी ल्याई ब्राह्मण आचार्य्यका सम्मतले तंत्रोक्त वेदोक्तले गुण भक्त शर्माका वचनले कलिगत ३८०० फागुण शुक्ल ५

उत्तर भाद्र नक्षत्र ऐन्द्रवयोग आदित्यवारका दिन आफ्ना दर्बारका मध्य चोकमा स्थापना गरिदिएका हुँ ॥ यी भैरवलाई आजकाल मतिको भैरव भन्दछन् ॥ वि० सं० १९९० साल माघ बदी १० रोज २ मा ठूलो भूकम्प हुँदा केही भएन ॥

(१८) ॥ श्रों श्री मीननाथ पाटन

श्री राजा अंशुवर्मालाई स्वप्नविषे यमराज आई मलाई मूर्तिमा प्रकाश गर भनी आज्ञा प्रसन्न हुँदा धर्मराजलाई आनन्द स्वरूपले लोकेश्वरको मूर्ति बनाई कलिगत ३४०० चैत्र शुक्ल ८ तिष्य नक्षत्र आयुष्मान योग बृहस्पतिवारका दिन प्रतिष्ठा गरी बौद्धाचार्यहरूले अर्चन गराय ॥ पछि यिनै राजाका सन्तान श्री राजा वीरदेवका पालामा ललितपुर बनाई ९००० घर बसाई मीननाथ लोकनाथहरूको यात्रा गर्ने रीत चलाई धेरै खेत गुठी राखी दिए ॥ तहापछि श्री राजा नरेन्द्रदेवका पालामा श्रो श्री मत्स्येन्द्रनाथ नेपालमा प्राप्त भए पछि कलिगत ३६६४ जाँदा लोकनाथ आदिहरू जम्मै रथ यात्रा माकुम गरी यिनै मीननाथको र मत्स्येन्द्रनाथको रथयात्रा सालिन्दा चलाई गएका थिए ॥ ताहापछि मल्ल राजाका राजगद्दि हरी राज्य गर्ने चन्द्रवंसी राजा श्री ५ पृथ्वीनारायणको संतान श्री ५ महाराजधिराजसुरेन्द्र विक्रम साहका पालामा यी मीननाथ यात्रा गर्ने रथमा मान्द्रोले छोपने गरी आएकोमा असोभा भयो भनी श्री ३ महाराज जङ्गबहादुर राणाका ज्येष्ठ पुत्र श्री जनरल जगतजङ्गबाहादुर राणाबाट विक्रम सम्बत् १९ सालमा सुनको मोलम्बा छाना राखिदिए ॥ वि० सं० १९९० साल माघ बदी ३०।२ का दिन ठूलो भुकम्प हुदा केहि भएन ॥ ॥

(१९) ॥ श्री गोडावरी कुण्ड ॥

कलिगत ११११ जादा नेपालमा राज्य गर्ने किरातिलाई जिति सोमवंसि राजा श्री निमिष राजाले राज्ये गरिरहेका बखत कोहि सिद्ध गोदावरीमा स्नान गर्न जाँदा सो सिद्धको झोली तुम्बा दक्षिण गोडावरिबाट बगाई लगेको थियो सो सिद्ध योगी घुमी फिरि नेपाल नीलचुड पर्वतमा आई वास गरेका थिए १ दिन दक्षिण गोदावरीमा आफ्नु बगाई लगेका झोली तुम्बा नील

चूड पर्वतका कुण्डबाट उतरी आएको हुनाले यी कुण्ड निश्चय गोडावरी रहेछ भनी राजा छेउ आई प्रख्यात गरीदिए ,ताहाँ देखी १२ बर्षमा १ पटक शिंहराशमा श्री बृहस्पति वसी अस्त भएका बखतमा राजा प्रजा सबै गै स्नानदान पिण्डदान गरी मेला भर्ने रीत चलाई दिए ।। बिक्रम सम्वत् १९९० साल माघ बदी ३० रोज २ का दिन ठूली भूकम्प हुदा केहि भएन ।।

## (२०) ।। ओं श्री बनकाली देउपाटन ।।

कलिगत वर्ष ३४८६ सुर्य्यबंसि राजा श्री शिवदेवले नेपालको राज गरेको र यिनै राजाले देउपाटनका दक्षिण भागमा वनकाली प्रकट गर्ने मनसुवा गरी अघि धर्मदत्तका पालामा देवतासंग युद्ध गर्दा दाँतमा अडकेको झिकन लागेका ध्यानले युक्तगरी आरण्य भित्र गुप्त गरी वनकालि मूर्ति प्रतिष्ठा गरी स्थापना गरी प्रकट प्रख्यात गरिदिए ।। वि० सं० १९९० साल माघ बदी ३० रोज २ मा ठूली भुकम्प हुदा केही भएन ।। ।। ० ।।

## (२१) ।। ओं श्री बच्छलादेवी देउ पाटन ।।

यी ईश्वरी आफ्ना गणसहित भै ओं श्री गुह्यश्वरी प्रकट भए देखी पीठ मात्र विराजमान भएका छुन् बहुत तेजस्वी उग्र पीठ हुन् सुर्य्यवंसी श्री राजा शिवदेवका पालामा कलिगत २८९५–९६ मा यी परमेश्वरी नेपालको आदि मूल पीठ ठहराई बैशाख शुक्ल एकादशि उत्तर फाल्गुणी नक्षत्र वरीयान योग बृहस्पतिवारका दिन पूजा नरबली विधि पूर्वक गरी शिला का पद्माकार बच्छला बनाई भित्र यन्त्रगुप्त गरी प्रतिष्ठा स्थापना गरी देवालय बनाई सेवा गरी आएको र त्यसका २।१ वर्ष पछि यी ईश्वरीमा विधिपूर्वक आमन्त्रण कर्म भनी काठमाडौं का भद्रकाली कंकेश्वरी आदि पिठ अरू सबै देवता हरू चैत्र बदो का दिन ओं श्री पशुपतीनाथबाट निमन्त्रणा गराई प्रेत चतुर्दशिका दिन कोमारीगण युक्त आवाहन गरी देवीका आवाहन गरी देवीका स्थानमा विराजमान गराई तंत्रोक्त सास्त्रबाट महासंकष्ट विधिले नरबली र नरशिवाहरू कोलाहल गरी कराउन लगाई मात्रीकागणले भक्षण गराई संतुष्ट गरी विसर्जनको वेलामा अनेक द्रव्य दक्षिणा भेटि वस्त्र दिई सन्मान गर्ने प्रति वर्ष चलाई दिएका थिए ।। श्री राजा शिवदेवका पाचौ

पुस्ताका सन्तान श्री राजा विश्वगुप्तका पालामा कलिगत ३१८१ मा ईवत्स-लामा नरवली प्रतिवर्ष चलाउन कष्ट हो भनी देवीलाई सान्ति पुजा गरी निखा जोडा बोका बलिदिने रीत चलाइदिए ॥ शिवा आवाहन गर्न नसक्दा मनुष्यै कोलाहल गरेको यी राजाले हेर्न जाँदा हाँसी ठट्टा गरी बस्दा नर-शिवाले राजालाई समात्न गया र राजा खुसिभै नरशिवालाई धेरै खेत सेवा बिर्ता दिएका अजतक भोग्दै छ ॥ वि० सं० १९९० साल माघवदि ३० रोज २ मा ठूलो भूकम्प हुँदा यी ईश्वरीको मण्डिर कोहि पनि भएन ॥ ॥

## (२२) ॥ ओं श्री राजाराज्येश्वरी देउ पाटन ॥

यी ईश्वरी अघि गुह्येश्वरी प्रकट हुँदा आवरण गरी राखेका पीठ मात्र थियो ॥ पछि कलिगत ३४२० मा श्री राजा विश्वगुप्तबाट श्री जयबागेश्वरी रहस्य मूर्ति प्रकाश गरी स्थापना गरेका बखत्त बलिदान गर्नालाई प्रतिष्ठा कर्म गरी नवदुर्गा मूर्ति मृतिकाको बनाई प्रकाश गरी स्थापना गरी दियेका हुन् यी ईश्वरी नवदुर्गा बहुतै प्रत्यक्षका हुन् । विक्रमसम्वत १९९० साल माघ वदी ३० रोज २ का दिन ठूलो भूकम्प हुंदा केही भएन ॥ ॥

## (२३) ॥ ओं श्री ईचगुनारायण काठमाडौं ॥

यी नारायण आदि युगदेखी विराजमान भएका हुन् पछि राजा हरिदत्त बहुतै नारायणको भक्त हुंदा नेपाल विषय चार धामका स्वरूप लिई विराज-मान भएका ओं श्री इचंगु नारायण–को स्वप्नमा दर्शन पाई शक्ति सहित विराजमान भएका परमेश्वर को दर्शन गरी देवालय बनाइ दिए ॥ पछि सूर्यबंसी राजा प्राणमल्लका पालामा ठुलो वर्षाद भै पर्वत पैन्हो आई यी नारायणको देवालय विपत्ता भैरहेका थिए केहिकालपछि इन्द्रचोक बस्ने कौसीक गोत्रका सहस्र' सिवानन्द राजोपाध्याले विश्नुमतिमा वगाई ल्याएका नारायणका मूर्ति पाई यिनै मूर्ति इचंगुमा स्थापना गर्छु भनी पहिरो भत्की छोपी रहेको घुङ्गा माटो पंसाई हेर्दा अघिकै नारायण पाउँदा नेपाली सम्बत ६६३ सालमा ति विष्णुमतिका पाएका नारायणको मूर्ति अग्र भागमा स्थापना गरी इष्ट देवता भनी पुजा गरी आएको हुँदा ति सहस्र शिवानन्दका सन्तानहरूको देवाली पूजा ईचंगु नारायणमा आजसम्म चलेके

छ पूजाहारी पनि यिनीहरूनैछ ।। विक्रम सम्वत १९९० साल माघ वदी ३० रोज २ का दिन ठूलो भूकम्प हुँदा केही भएन ।। ।।

## (२४) ।। ओं श्री सिखर नारायण फरपीङ ।।

यी परमेश्वर आदि युगदेखी विराजमान भएको हुँदा श्री कृष्णवाट ओं श्री गोपालेश्वर स्थापना गर्दा प्रद्युम्नले चतुरभुजी विष्णुका मूर्ति स्थापना गर्दा ताहा दुई नारायण भएको हुँ ।। पछि श्री राजा हरिदत्त बर्मालाई स्वप्नमा दर्शन दिएको हूँदा ओं श्री लक्ष्मि कामधेमु वासुकी दह समेतको नारायणलाई प्रख्यात गरी देवालय बनाई नित्यार्चन गरायो ।। बि० सं० १९९० साल माघ वदि ३० रोज २ मा ठूलो भूकम्प हुदा केही भएन ।। ।। ।।

## २५ ।। ओं श्री कोटीश्वर माहादेव पाटन ।।

यी माहादेव आदि युगमा शंखासुरले अघोर कष्ट गरी तप गर्दा ओं श्री शिवजी विश्व रूप भै प्रकट भएको हुन श्री राजा हरिदत्त बर्मालाई स्वप्नमा दर्शन दिएको हुनाले मन्दिर बवाई नियार्चनलाई धेरै खेत गुठि राखि दिई सेवा गरी आएका थिए पछि यिनै ईश्वरको दर्शन पाई मुक्त भै गयो यो शिव-लिङ्ग ६४ लिङ्ग भित्रका हुन् ।। विक्रम सम्वत १८९५ सालमा दिनको मध्यान कालमा दिनको ११ घडि चडदा १० पालासम्म शिव लिङ्ग हल्ली रहेको सबै दुनियाले देख्यो र राजालाई जाहेर गर्‍यो र राजाले केही उत्तर नदी शान्ति पनि केही गरेन र भीमसेनथापा परलोक भए ।। बिक्रमसम्वत १९९० साल माघ ३० रोज २ का दिन ठूलो भूकम्प हुदा केही भएन ।। ।।

## (२६) ।। ओं श्री गोकर्णेश्वर महादेव देवपाटन ।।

अघि सत्ययुगमा श्री महादेव मृग रूप भै श्लेमाँतक वन विषे विहार गरिएका बखत ब्रह्मा विष्णु इन्द्र तिनैले खोजी फेला पारी घेरा दिई सिङमा पक्रदा सो सिङ १ टुक्रा भै ३ नै जानाको हातमा परे विष्णुका हातको अमरा-बत्तिमा स्थापना गर्न गये ब्रह्माका हातको गोकर्ण पितामहतिर्थका समीप बाग्मतिका तीरमा स्थापना गरी गोकर्णेश्वर नाउ गर्दियका हुन ।। पछि त्रेता युगमा रावणले तपस्या गरी वरदान पाई तिनै लोक जिति राज्य गर्‍यो यी

परमेश्वर यस्तो प्रत्यक्षका हुन् ।। पछि नेपाली सम्वत ५१२ सालमा श्री राजा जयस्थिति मल्लबाट भत्की बिग्रिरहेका मन्दिर जिर्णोधार गरी पुजा भाङा पनि बनाई दक्षिण भट्टले पूजा गराई गुठि राखि दिए ।। वि० सं० १९९० साल माघ बदि ३० रोज २ का दिन ठूलो भूकम्प हुँदा केहि भएन ।।

## (२७) ओँ श्री सेतो मत्स्येन्द्रनाथ काठमाडौं ।।

सूर्य वंसी राज श्री शंकरे देवले शाक्य सम्वत ५२७ सालमा ईन्द्रचोकमा बागमति विष्णुमति दोभान भरैहेको वखत पूर्णावति सहर बनाई ५००० घर बसाई सकेपछि बौधाचार्यहरूसंग संमत गरी दिएका हुन् ।। हुन् ।। केहि वर्षपछि अघि चोभारका आनन्दादि लोकेश्वर-रथयात्रा देउपाटनमा भै आएको समेत दुवै रथ संयुक्त गरी वर्ष प्रति चैत्र शुक्ल ८ का दिन श्री यमलेश्वर महादेवका स्थान समिपमा रथ बनाई यात्रा गर्ने रीत चलाई र अरु पर्वकालका आजापुजालाई घेरै खेत गुठि राखी बौद्धाचार्यहरूले नित्यार्चन चलाई सहरका शोभा बढाए ।। पछि चोभरका आनन्दादि लोकेश्वरको यात्रा गरी ल्याउँदा डाँडा गाउ खोलामा पुगदा रथ डुवी देवतामात्र देखेको हुनाले देवता मात्र चोभारमा लग्यो र रथयात्रा माकुम भया अद्यापि छैन यी स्यतो मत्स्येन्द्रनाथको रथयात्रा मात्र चलाए ।। बिक्रम सम्वत १९९० साल माघ बदि ३० रोज २ का दिन ठूलो भूकम्प हुँदा ठाउँ-ठाउँ टोल-टोल मा घर देवल भत्की सडकबाट देशभित्र रथ तानी ल्याउदा केहि होला भन्ने त्रास हुँदा सोही साल चैत्र महिनाका यात्रामा भोटाहिटि ढोका बाहिरसम्म रथ तानी ल्याई त्यहावाट खटमा राखी यात्रा चलायो ।। बिक्रम सं० १९९० साल माघ बदि ३० रोज २ का दिन ठूलो भूकम्प हुँदा पनि देवल केहि भएन ।। ।।

## (२७) ।। ओँ श्री काशि ( काठे ) सिंबु काठमाडौं ।

श्री सूर्यवंसी राजा नृपेन्द्रमल्लका पालामा कांतिपुर समंतभद्र भन्ने तछेबहालको गुभाजु काशि गएको बखत त्यहाँका जैनहरूले ठूलो चैत्य बनाई प्रतिष्ठाको सराजाम तयार गरी कसले प्रतिष्ठा गराउ भनी रहेका बखत

ती समन्तभद्र गुभाजु त्याहाँ पुग्दा बहुतै सनमान गरी हामीले बनाई राखेको चैत्यको प्रतिष्ठा गरि देउँ भनी भन्दा समन्तभद्र गुभाजुले हुन्छ भनी गंगा जल ल्याई चैत्यमा छरि प्रतिष्ठा भयो भनी भन्दा नजान्ने ठहराई सबै जनाले ठट्टा गराई भन्छन् कि हे गुभाजु सबै सराजाम त्यसै छ होम जप केही पुजा गरेको छैन हाम्रो मन सन्तोष प्रतित हुने गरी राम्रो प्रतिष्ठा गरी देउ भन्दा मैले ता राम्रो प्रतिष्ठा गरी सके को हो तिमीहरू नपत्याइ ठूला ठूला डोरीले चैत्यलाई बाधी तिमीहरूका फौजले समाती तानी राख र मैले बोलाउदा सरासर आउनेछ भनी भन्दा सबै जैनहरू दोरीले बाधी समाती राखे ति गुभाजुले ३ फेरा चुट्की बजाई बोलाउँदा तिनका पछि-पछि लागि चैत्य सरासर आयो र जैनहरू ४।५ दिनका बाटोसम्म आए ति चैत्य थामन सकेन र फर्कि गय त्यै चैत्य नेपाल काठमाडौं नघलटोलमा ल्याई नेपाली सम्वत् ७६० सालमा स्थापना गरिदिए यी चैत्यलाई आजकल काठेसिंबु भन्छ ।। विक्रम सम्वत् १९९० साल माघ वदि ३० रोज २ का दिन ठूलो भुकम्प हुदा केहि पनि भएन ।। ।।

( २९ ) ।। ओं श्री भद्रकाली काठमाडौं ।।

सूर्यबंसी राजा श्री गुणकामदेवलाई श्री महालक्ष्मीबाट स्वप्नविषे बाणी भए बमोजिम कलिगत ३८२५ मा कान्तिपूर बनाई सकेपछि देश रक्षा खातिर नीलपीठबाट आवाहन गरी ओं श्री भद्रकाली पीठदेवी पूर्वतिर स्थापना गरीदियो फेरि पछि नेपाली सम्वत् ५८० सालमा श्री राजा अमर मल्लले साल बसाल प्रेत चतुर्दशिका दिन रथरोहन यात्रा गरी देश घुमाउने रीत चलाई १२ वर्षमा १ पटक नचाउने गरी नृत्यलिला स्मेत बनाई दिएको अद्यापि चलेकै छ । विक्रम सम्वत् १९९० साल माघ बदी ३० रोज २ का दिन ठूलो भूकम्प हुँदा केहि भएन ।। ।।

( ३० ) ।। ओं श्री कंकेश्वरी काठमाडौं ।।

सूर्यवंसी राजा श्री गुणकामदेवलाई श्री माहालक्ष्मिबाट स्वप्न विषये बाणि भए बमोजिम कलिगत ३८२५ मा कांतिपूर सहर बनाई सकेपछि देशरक्षा खातिर ओं श्री कंकेश्वरी आवाहन गरी देशका पश्चिम भागमा

विष्णुमतिका समीप स्थापना गरिदियो ॥ पछि नेपाली सम्वत ५८० सालमा श्री राजा अमरमल्लले सालबसाल प्रेत चतुरदशिकादिन रथारोहन यात्रा गरी देश घुमाउने रीत चलाई १२ वर्षमा १ पटक नाच नचाउने रीत चलाई दिएका थिए केहि कालपछि नृत्य लिला प्रकाश भै नाच भैरहेका बखत कोही १ मानिस पशु रूप भै देवी का सन्मुखमा बसिरहदा देवी कोप भै ती मानिसलाई समोति नरबलि भक्ष गर्‍यो र यहाँ उप्रान्त यस्ता तरहसंग नृत्य लिला कठिन होला भनी ती कालीलाई पूजा मान्य गरी शांतिगरी नाच नचाउने मनाहि गरीदियो ॥ शाक्य सम्वत १७८३ सालमा श्री कम्याण्डर इनचीफ जनरल कृष्णबहादुर कवरले देवालय भित्र सुनका मोलम्बा चंदुवा बनाईदिए ॥ बिक्रम सम्वत १८९६ सालमा आश्विन महिनामा जनरल नजर ( अमर ) सिंहले माथिल्लो सुनका मोलम्बा छाना बनाई दिए ॥ विक्रम सम्वत १९०९ कार्तिक बदि ८ रोज ५ मा जनरल गगनसिंहले माझा तल्लामा सुनको छाना बनाईदिए ॥ विकम सम्वत १९ सालमा माथिल्लो पूर्व दक्षिण पश्चिमतिर जीवनारायण मानन्धरले सुनको झलर बनाई दिए माझ तला पूर्वको त्रिलं कसाईले सुनको झलर बनाई दिए उत्तरतिर सेते दमाइले सुनको झलर बनाई दिए ॥ बिक्रम सम्वत १९ सालमा माझ तल्ला दक्षीण उजीर कसाईले सुनको झलर बनाई दिए ॥ बिक्रम सम्वत १९ सालमा माझ तला पश्चिम मा ज्योचा भन्नै सिंहबीर मानन्धरले सुनको झल्लर बनाइ दिए विक्रम सम्वत १९९६ सालमा तल्लो जम्मा भिन्ना देवराज मानन्धरले देखि टाईलले मोडी सोभा बढाई दिए ॥ बिकम सम्वत १९९० साल माघ बदी १० रोज २ का दिन ठूलो भुकम्प हुदा केहि भएन ॥ बिक्रम सम्वत १९९६ साल बैशाख ३० रोज ७ का दिन पिपलको रूख भएको डिलको ढुङ्गा खसी भत्कीरहेको ॥ ॥

## ( ३१ ) ॥ श्रों मर्त्येश्वरी नवदुर्गा काठमाडौं ॥

सूर्यबंसी राजा गुणकाम देवलाई श्रों श्री महालक्ष्मीबाट स्वप्नबाणि भए बमोजिम कलिगत वर्ष ३८२५ मा कान्तिपुर शहर बनाई सकेपछि देश रक्षा खातिर देशका दक्षिण भागमा स्थडील स्थापना गरी नवदुर्गा जगाई मूर्ति स्थापना गराई धेरै प्रजाहरूलाई देवाली मनाई दिए ॥ यिनोलाई आजकाल

मर्त्येश्वरी र मचलि भन्दछ ।। वि० सं० १९९० साल माघ वदी ३० रोज २ का दिन ठूलो भूकम्प हुदा केहि भएन ।। ।।

## ( ३२ ) ओं श्री बिद्येश्वरी काठमाडौं ।।

पूर्वकालमा काठमाडौं मखन्टोलका ब्राम्हणका पुत्री उडीगै आकाशचारी भै तारायोगिनीगणमा मिलीनगएकी रहेछ ।। सूर्य बंसि राजा गुणकाम देवलाई स्वप्नविषे बाणि भए बमोजिम कलिगत ३८२५ मा ओं श्री महालक्ष्मीकी आज्ञा मुताबिक कान्तिपुर सहर बनाईसकेपछि देश रक्षा खातिर ती योगिनी आवाहन गरी जगाई मूर्ति बनाई विद्येश्वरीनाम राखी स्थापना गरी दिएका हुन् ।। ती योगिनी मखनटोलका ब्राम्हण पुत्री हुनाले जुठो सुतक सुनाउन जाने चलन अद्यापि छदैछ ।। वि० सं० १९९० साल माघ बदी ३० रोज २ का दिन ठूलो भुकम्प हुदा केही भएन यी ईश्वरी यस्ता हुनु हुन्छ ।। ।।

## ( ३३ ) ।। ओं श्री इन्द्रायणी काठमाडौं लुटि ।।

सूर्यबंसि राजा गुणकामदेवलाई ओं श्री महालक्ष्मीबाट स्वप्नविषे बाणी भए बमोजिम कलिगत ३८२५ मा कान्तिपूर सहर बनाई सके पछि देश रक्षा खातिर ओं ईन्द्रायानी पीठ जगाई देशका बायुव्य भागमा विश्नुमतिका समीप स्थापना गरिदिए ।। बिक्रम सम्बत् १९ सालमा सबैभन्दा माथिल्लो छाना तावाको बनाई दिए: ।। बिक्रम सम्बत् १९९० साल माघ बदि ३० रोज २ मा ठूलो भुकम्प हुंदा यी ईश्वरीको कहिं केही भएको थिएन ।। ।।

## ( ३४ ) ।। ओं श्री मनमैजु काठमाडौं फुसिंखेल ।।

सूर्यबंसि राजा गुणकाम देवलाई ओं श्री महालक्ष्मिबाट स्वप्न विषे बाणी भए बमोजिम कलिगत ३८२५ मा कान्तिपुर सहर बनाई सकेपछि देश रक्षा खातिर ओं श्री मनमैजु पीठ जगाई देशका उत्तर भागमा स्थापना गरिदिए ।। पछी श्री राजा अमरमल्लले नेपाली सम्बत् ५८० सालमा १२ वर्षमा १ पटक नचाउने गरी नृत्य लिला बनाई दिएका अद्यपि चल्दै छ ।। अघि सुदन्त राजा पिंगला रानी मंजुरी बिहार भन्ने चावहिलमा बसी राज्ये गरेका बखत नेपाल पुरीमा देवताहरूको महिमा घटी गयो भनि जानि श्री भैरव ४ मिलि नुवाकोट भैरव १ भक्तपुरका भैरव २ टिकाभैरब १ पचली भैरव ४ यी ४

भैरव आगंचोक देखी आई ४ दिशामा बस्नु भएको वृत्तान्त सब बुझी त्रीसुल गंगाघाटबाट अब म नेपालपुरीमा सदा सर्वदा बस्न राजी छु भनी ओँ श्री इन्द्रायनी देवी आई नेपाल पुरीका उत्तर भागमा मनमैजु पीठ कहलाई विराजमान भएका हुन् ॥ बी० सं० १९९० साल माघ बदी ३०।२ मा ठूलो भुकम्प हुँदा केहि भएन ॥ ॥

(१५) ॥ ओँ श्री भीमसेन काठमाठौं: ॥

अघि कान्तिपूर सहरमा सूर्यबंशी राजाहरूले राज्ये गरेका बखत कलिगत ४११९ मा सवालाख फौज लिई पाल्पाबाट मुकुन्दसेन राजाले नेपालमा आई सूर्यबंसी राजाहरू दलमल गरी फर्कि गएपछि नेपालमा सूर्यवंशी राजाको हीन हुँदा नुवाकोटबाट वेश्य ठकुरीहरू आई टोलै पिछे राजा मै बसेका बखत काठमाडौं भीमसेनथानका वेश्य ठकुरी राजा तोयुध्या भन्नेका घरमा दोलखा भीमसेनले कान्ति पूरमा विराजमान हुनाको इच्छाले मनुष्य रूप धारी आई रहेका थिए केही कारणबाट प्रत्यक्ष देखाउँदा ओँ श्री भीमसेन हुँ भनी चिन्ही नेपाली सम्बत् २६० सालमा ठूलो देवालय बनाई ओँ श्री भीमसेनको तामास मूर्ति १ शान्तमूर्ति बनाई ओँ श्री भीमसेनलाई प्रवेश गराई स्थापना गरेका थिए ॥ पछि यी युग्म भीम-सेन साह्रे उग्र भै दुख दिदा नेपाली सम्बत् ७९३ सालमा श्री राजा प्रताप मल्लले युग्म भीमसेनलाई बुझाई टोल पिछे छाग बली डोबाटा पिछे महिष बलि दि दरबार मोहन चोक लगी द्रौपदिका मूर्ति बनाई व्यास मुनि आवाहन गरी ती मुनिले द्रोपदि भीमसेनलाई कन्यादान दिलायाको विधि गरी कन्या दान गराई फेरि टोल पिछे छागबलि डोबाटो पिछे महिष बलि दिई स्व-स्थानमा लगि दुइ भीमसेनका बीचमा द्रौपदि स्थापना गरी १२ वर्षमा कलेबीर फिराउने गरी रीत बसाई घर बनाई गुठि राखि दियो र त्यिनदेखी भीमसेनका उपद्र सान्त भयो यी भीमसेन यस्तो प्रत्यक्षका हुन् ॥ बिक्रम सम्बत् १९९० साल माघ बदि ३० रोज २ मा ठूलो भुकम्प हुँदा केही भएन ॥ ॥

( ३६ ) ॥ ओँ श्री तुलजा भवानी भक्तपूर ॥

यी ईश्वरी कस्ती हुन् भने अघि सत्ययुगमा देवराज इन्द्रले दिव्य हजार

वर्षसम्म श्रीं श्री माहादेवको तपस्या गर्दा खुसि भै आफना इष्ट देवता श्रीं श्री तुलजा भवानीको यन्त्र मन्त्र पद्धति स्मेत ईन्द्रलाई दियो र ईन्द्रले अमरावती लगी स्थापना गरी नित्य नैमितिक पुजा गरी आएका थिए पछि रावण पुत्र इन्द्र जीतले युद्ध गरी इन्द्रलाई जिती यी परमेश्वरीका यन्त्र मन्त्र पद्धति समेत लुटि ल्याई लङ्कामा लगी स्थापना गरी नित्य नरबली भोग दिई पूजा गरि राखेका थिए त्रेतायुगमी श्रीं श्री रामचन्द्रबाट रावण कुम्भकरणलाई र रावण पुत्र ईन्द्र जीतलाई समेत मारी लंका जय गरी लंकाको राज्य विभिषण लाई सोपी यी ठूला परमेश्वरी हुन् भनी यन्त्र मन्त्र पद्धति समेत साथमा लिई आई अयोध्यामा स्थापना गरी आजा पूजा गरी राखेका थिये श्रीं श्री रामचन्द्र स्वर्गारोहण हुने बेलामा सरयुगंगामा लगि डुबाई राखेको र श्रीं श्री रामचन्द्र पछि अयोध्या नगरका राज्यगर्ने नीज रामचन्द्रका ५ पुस्ताका सन्तान नल राजाले सरयुबाट झिकी आजा पूजा गरी आयाको र ती नलराजाको प्राण त्याग हुने बेलामा पनि सरयुमा नै राखि प्राण त्याग गरे फेरि त्यसै कुलको सन्तान पुरोरवा राजाले सरयुबाट झिकी आजा पूजा मान्य गरो आयाका र निजका सन्तान अलर्क राजा ब्रह्मज्ञानी हुदा बलिदान नहुदा यी ईश्वरी अप्रशन्न भएको बुझी आफूले लिएकै ठाउमा लगि राखी प्राण त्याग गरेको थियो ॥ सूर्यबंसी राजा अलर्क परलोक भय उप्रान्त म्लेछहरूले अयोध्या नगरको राज्यलिएको हुँदा अलर्कको सन्तान सूर्यबंसी राजा हरू जत्र तत्र लागी रहेको र इनै सुर्यवंशी राजा अलर्कको सन्तान नान्य-देवले अति दुख पाउँदा आमा बाबू स्वास्नी समेत साथमा लिई दिल्लिमा गै बादशाहको नौकरीमा बसी जिविका भैरहेका बखत आमा बाबु स्वास्नी पालन गर्ना खातिर नोकरी गर्नु पर्ने हो नीज आमाबाबु स्वास्नी परलोक भयपछि किन चाकरी गरुँ भनी बादशाहको नोकरी छोडी उदास चित्त गरी फकिरि चालसंग घुम्दै अयोध्यामा आई सरयूको तीरमा बसि रहेका थिए १ दिन अर्घ रात्रीमा ति नान्येदेव निदाईरहेका बखतमा १ अति सुन्दरी स्त्री आई म तेरो पुर्खाको ईष्ट देवता हुँ सरयुका जलबाट झिक म बसेको ठाउँमा भ्रमरहरूले छोपि राखेको होला भनी स्वप्न हुंदा भोलिपल्ट विहानै सरयूमा खोजी गर्दा १ ठाउँमा धेरै भ्रमराहरु जम्मा भै पानीमाथि घुमी

रहेको देखी तेस ठाउँमा कुदी खोजी गर्दा १ तावाको पेटारा मेटि पानीबाट माथि ल्याई हेर्दा सो तावा को पेतारा माथि यो श्लोक लेखि राखेका देखियो ।। श्लोक ।। रामो बेत्ति नलो बेत्ति बेत्ति राजा पुरोरवा ।। अलर्कस्य धनं प्राप्य नान्यदेवो भविष्यति ।।१।। ताहाँपछि सो तावाको पेतरा खोली हेर्दा पुजा पद्धतिको पुस्तक पद्धति र सुनको डब्बा देखियो सो सुनको डब्बा पनि खोली हेर्दा भित्र तुलजा भवानीको सुनको जन्त्र देखि ठूला हर्ष गरी भवानीलाई पद्धति बमोजिम मान्ये गरी त्यही बसिरहेका थिए त्यसको केही दिन पछि सो तुलजा देवी पुजा गरेका बखत जनकपूरका समीपमा १ ठूलो जंगल छ मलाई त्यही लैजाउ र उहाँ मेरो मन्दिर बनाउ तेरो भाग्य पनि त्यही प्रकाश हुनेछ भनी यन्त्रबाट बाणिहुँदा उसै घडी भवानी लाई बोकी जनकपुरमा आयो भवानी-बाट जुन ठाउँमा ठूलो जङ्गलथियो त्यस जङ्गल भित्र जानेलाई कालसर्पले डसि मार्ने हुनाले त्यस ठाउँमा नजा भनी सबै जनाले मनाही गर्दा पनि नमानी बिचमा गै हेर्दा १ ठूलो ढुङ्गा थियो र त्यसै ढुङ्गा माथि बसिरहेका थिए रात परेपछि ईश्वरीलाई संझी सुतेका थिए निद्रा पर्‍यो र अघि अयोध्याका सरयुका तिरमा स्वप्न दिने सुन्दरी स्त्री आई यो ढुङ्गा मनि यउटा खड्ग छ त्यो खड्ग लीई हातले समाई जागाभै बस १ कालो सर्प मणि धर नाग आई मणि भुईमा छाडी खेल्न जानेछ सो मणि गोबरले छोपियस र त्यो काल सर्प तँ माथि आई लाग्ने छ तिनलाई त्यही खड्गले काटि शिर छेदन गरी दे र यही ढुङ्गा मनि द्रव्यले भरिएको ७ ईनार छ सो द्रव्य झिकि यही मेरो मन्दिर बनाई १२ मल्लारबाट तेरो स्वजात र प्रजा झिकाई देश बनाई राज्य गर भनी स्वप्न हुँदा झट पट उठी हेर्दा ढुङ्गा मनिको खड्ग हातमा लिई बस्ये १ सर्प आई आफ्नु मणि भुईमा छोडी खेल्न गयो र सो मणिलाई गोबरले छोपिदियो र त्यो काल सर्प फर्कि आउँदा नान्यदेवलाई देख्या र त्यही माथि आई लागी बडो झोक सित आउदा ती खड्गले शिर काटी दिई मारिए सो नागको सिर हेर्दा अघि तुलजा भवानीका तावाको पेतारो माथि लेखि राखेको रामा बेत्त नलो बेत्ति वेत्ति राजा पुरोरबा ।। अलर्कस्य धनं प्राप्य नान्यदेवो भविष्यति भन्ने श्लोक सुनको मसिले सो सर्पको टाउकोमा पनि लेखि राखेको देख्यो र भोलि-

पल्ट ढुङ्गा मनि खनि हेर्दा द्रव्यको सात वटा ईनार देख्यो र सो द्रव्य झिकी १२ मल्लारबाट आफ्ना स्वजात र प्रजा झिकाई सहर बनाउनाको आरम्भ गरेका बखत लंकाबाट १ राक्षस नित्य नान्यदेवका केटि संग रात्रीमा आई बिलास गरी जाने गर्थ्यो र १ दिन ती राक्षसको र त्यसकी स्त्री को कुरा हुँदा हाम्रा मालिकबाट १२ मल्लारबाट स्व जात र प्रजा झिकाई यस ठाउँ-मा सहर बसाउना निमित्त सबै सारजाम तयार गरेछ कहिले सिद्धियला भनी सोझदा हामीले बनाउन पाए चाँडो एकै रात्रिमा तयार गरी दिउला भनी भनेछ र हुन्छ बनाई देउ भनी त्यस स्त्री ले भनेपछि फलाना दिन रात्री सबेरै सबै मानिस सुत्नु कोही पनि बाहिर ननिस्कनु हामी आइ बनाई दिउला भनी प्रातकाल भयपछि त्यो राक्षस उठि गयो र सो कुरा नान्येदेवसंग केटीले बिन्ति गर्दा हुन्छ भनी जुन दिन ती राक्षसले भनेको छ सो दिनको रात्री गैन्ह मानिस सबेरै सुत्नु र कोही पनि बाहिर ननिस्कनु भनी उर्दि दियो र राजा देखी प्रजा लगायत गैन्ह सबेरै सुत्यो र त्यसै रातमा ती राक्षसले आफ्ना भाई बन्धु ईष्ट मित्र सबै राक्षसहरू धेरै जम्मा गरी लि आई सहर गढ बनाउन थाले उत्तर दिशामा आरम्भ गरी बनाउँदै दक्षिण दिशामा समाप्त गर्ने इच्छाले बनाउदा केही मात्र बनाउन बाकी छदा प्रात काल हुने बेला हुँदा ती राक्षसहरू त्यसै छाडी गै स्वस्वस्थानमा गए। भोलिपल्ट नान्यदेव र अरू प्रजा सबै उठि हेर्दा भारी सहर गढ तयार भै रहेको देखो बहुतै खुसि भै सहरलाई सिमरौ गढ भनी नाउ राखिदिए। यिनै शिमरौगढ मित्र देवालय बनाई श्रीं श्री तुलजा भवानी राज गराई आफू पनि ती सिमरौगढमा बसि श्रीं श्री तुलजाभवानिका आज्ञा-मुताबिक नान्यदेव राज्य गरी अनेक सुख भोग गरी राज चलाई दर सन्तान श्री राजा हरिहर सिंहका पालामा दिल्लिका बादशाहले अम्मल गर्न खोज्दा तुलजाबाट यहाँ म्लेछ आउन लागे मलाई नराख नेपालमा लैजाउ अब उप्रान्त उही बस्छु भनी स्वप्न हुदा राजाले के गर्नु भनी अन्दोल गरी रही ईश्वरीको नित्य पूजा गर्न जाँदा मलाई आजै नेपाल लैजाउ भनी अन्तरबाट शब्द हुँदा उसै बखत भवानीलाई बोकी नेपाल तर्फ रमाना हुदा जंगलको

बाटो हुदा नित्य बलि अडकंदा राजाले संदेह गरी रहदा प्रातकालमा जो जन्तु भेटला उसैलाई बलि दिनु भनी स्वप्न हुँदा प्रातकाल भएपछि बासबाट उठि हिंडदा जंगलमा अर्ना भेट्यो र समाती ज्यापुका हातबाट बलि दिन हुन्छ कि भनी चिंति गर्दा जन्त्रबाट वाणी भयो आज यहाँ जसले पूर्वतिर चाक लगाई झारा फेरी रहेछ त्यसका हातबाट बलि चलाउनु भनी आज्ञा भए मुताबिक खोजन जाँदा १ मानिस भेट्यो र त्यसका हातबाट बलि चलाई कसाही भनी नाउ राखे ॥ नित्य भोग अड्कन जाँदा ईश्वरीका आज्ञानुताबिक ती ज्यापु मध्ये १ जनालाई सुचि गराई भाग पकाउन लगाई भोग चढायो र ती सुवाल भन्ने ज्यापु भये ॥ नेपाली सम्वत ४४४ सालमा ती हरिसिंह देवराजाओं श्री तुलजा समेत नेपालमा आई पुगेको बखत भक्तपुरमा गै भीम भन्ने वैश्य ठकुरी राजा थिए उनले आदर सन्मान गरी ईश्वरी जहाँ इच्छा हुन्छ वहाँ मन्दिर बनाउनु भनी भन्दा मन्दिर बनाउनालाई अन्दोल गरीरहेका थिए। त्यसबखत यहाँ दक्षीणी ब्राम्हण अग्नीहोत्री छ उनैको घर पवित्र छ ताँहा मेरो मन्दिर बनाउनु भनी स्वप्नमा राजालाई भवानीबाट आज्ञा हुदा ती भीमराजाले अग्नी होत्री ब्राम्हणलाई बोलाई तिम्रो घरको सट्टा अर्को घर बनाई दिउँला द्रव्य पनि दिउला भनी भन्दा पनि नमानि घर छोडि दिन्न भनी भन्दा हरिसिंहदेवले जबरजस्ति घरमा हुली हिंड्दा त्यो ब्राम्हणले गलाशेरी मर्दा मलाई ब्रम्हहत्या लाग्यो भनी अपशोच गरी अन्न पानी नखाई ७ दिनसम्म बस्दा त्यो ब्राम्हण गणेश हुन् तिनका शिर अघि नै छेदन भै सकेको हुनाले तिमीलाई ब्रम्ह हत्या लाग्दैन। त्यसै ठाउँमा मन्दिर बनाई ढोकामा ती ब्राम्हणको लाशगाडी माथिबाट गणेशको मूर्ति स्थापना गर भन्ने ईश्वरी बाट आज्ञा हुदा सो बमोजिम ति अग्नि होत्री ब्रह्मणका घरमा मन्दिर बनाइढोकामात्यो लास गाडी माथिबाट गणेशको मूर्ति स्थापना गरी नेपालको राज्यभोग गरी रहे यी ईश्वरी यस्ता प्रकारबाट नेपालमा बिराजमान भएकी हुन् ॥ बिक्रम सम्वत् १९१० सालमाघबदी ३० रोज २ को दिन का घंटा २।१५ मिनेटमा ठूलो भुकम्प हुदा पनि देवल केहि पनि केहि भएन अन्त जाहाँतहिं भत्कि बिग्रे यी ईश्वरी यस्ता प्रत्यक्ष की हुन् ॥ ॥

## ॥ ओं श्री बालकुमारी ललितपुर काछे ॥

यी ईश्वरीका अघिदेखी मन्दिर थिएन पीठ मात्र बडो उग्र पीठ भै बिराजमान भयाकी थिइनं ॥ पछि नेपाली सम्बत ६२२–६४१ मा श्री अशोक मल्ल राजाले सेवा चाकरी गरि देवी प्रसन्न गराई देवीका सहायताले ललितपुर बैश्य ठकुरीहरूसंग लडाई गरी जिति ललितपुरको रजाई गरेपछि सो अशोक राजाले मन्दिर बनाई रमणीयस्थान बनाई दिएका थिए ॥ पछि सो मन्दिर बिग्रदा नेपाली सम्बत ८१७ सालमा काजि ईश्वरीदासले अघिको मन्दिर भत्काई ३ तले छाना गरी मन्दिर बनाई दिए ॥ अघि अशोक मल्ल राजाले यी कुमारी ठूलो हो भनी सेवा गरी रहदा समयमा कुमारीका नगिच बगिरहेका बाग्मतिका मणि मतिका संगममा धाराले जगा फराक गरी छाडी अन्तर पट्टी बग्न गयो र जगा फराक भएको अद्यापि छदैछ । यसमा ईश्वरी-दास काजीले बनाई राखेका मन्दिर केही बिग्रन जादां श्री ३ माहारा जङ्ग बहादुर राणाका छोरा जनरल गोरे साहेबबाट जिर्णोद्धार गरी ३ तल्ले देवल बनाई अन्दाजी १४ हजार जति खर्च लगाई अत्यन्त राम्रो मजबूतसंग बनाइ दिएका थिए ॥ विक्रम सम्बत १९९० साल माघ बदि ३०१२ का दिन ठूलो भूकम्प हुदा ३ तल्ले देवल जम्मै साफ मैदान भै भत्की बिग्रियो ॥ पाछ श्री ३ महाराज जुद्ध शम्शेर जङ्गबहादुर राणाले अघि भन्दा बहुतै राम्रो गरी बिक्रम सम्बत १९९१ सालमा बनाई तयार गरि दिएका हुन । यिनी परमे-श्वरी ईश्वरी बहुतै प्रत्यक्षकी देवता हुन् यीनी ईश्वरी बहुतै शान्त स्वरूपि हुन् ॥ ० ॥

## ॥ ओं श्री बासुकि देउ पाटन सुवर्णपुर ॥

आदि युगमा गरुडले पक्री ल्यायका नागले बडो संकष्ट संग गरूडको हातबाट छुटि ओं श्री पशुपतीनाथको शरणमा आई तपगरि रहदा ईश्वर खुसि भै हे बासुकी तिमी यस्थानैमा बसि तेरो नामले नगर बनाई रक्षा गर तेरो दर्शन गरी मात्र मेरो दर्शनको सुफल होला भन्ने बर प्रसन्न हुदा सो बमोजिम बासुकि क्षेत्र भनी नगरको नाम राखी आफू बिराजमान भै नगरको पालन गरी रहेका हुन् । पछि कलिगत ३८२५ मा गुणकाम देवराजाले चारै

दिशामा युद्ध गरी धन दौलत धेरै ल्याई ५२ करोड धन अचल पर्वत भित्र राखी तेसमाछि मन्दिर बनाई १ तला छानामा सुनले छाई रहस्य मूर्तिको बासुकि नाग बनाई स्थापना गरी सो बासुकी नागलाई भण्डारी गरिदिया ॥ बिक्रम सम्वत १९९० साल माघ बदि ३०।२ का दिन ठूलो भुकम्प हुदा समेत केही बिग्रेन यिनी ईश्वरी बहुतै प्रख्यातका हुन् ॥ ॥

॥ ओं श्री भैरवनाथ ईन्द्रचोक कान्तिपुर ॥

द्वापरका अन्त्यमा कुरुक्षेत्रमा पाण्डवको र कौरवको युद्ध भएको हेर्न भनी नेपालका राजा श्री यलम्व ( एकलव्य ) किराति ४ अक्षोहिणी सेना लिई कुरुक्षेत्र जाँदा ती किराति राजा यलम्ब आएको श्री कृष्ण भगवान्बाट थाहा पाई बीचमा गै सोधदा कौरव पाण्डव जतातिर हार्‍यो उतै तर्फ युद्ध गरूला भनी जवाफ दिएको आखिर सो युद्धमा कौरवकै हार हुने कौरवका सहायता भएका खण्डमा ती यलम्व राजा ओं श्री माहादेवका अंश हुनाले उनलाइ युद्धमा जित्न बहुतै मुस्किल हुने हुनाले श्री कृष्णबाट छल गरी नेपालका राजा श्री यलम्बको शिर काटि दियो र भारत हेर्छु भनी आयेको तिमिले छल गरि मेरो शिर लियौ त पनि आकाशमा बासे हेर्छु पाण्डव कौरव को महाभारत युद्ध हुञ्जाल आकाशमा बसी हेरी युद्ध सिद्धि-यपछि आकाश मार्ग भै आई आफ्ना राज्य मध्य इन्द्रचोकमा आई विराज मान भएका हुन् । यी ईश्वर बहुतै प्रत्यक्षका उग्र देवता हुन् ॥ बि० सं० १९९६ सालमा भंडारखाल फोरी घरहरू समेत भत्काई बहुतै राम्रो बाटो स्मेत बनाई दिएका थिये ॥ श्री ३ महाराज जुद्धशम्सेर जङ्गबाहादुर राणा साहेबबाट ॥ ॥

॥ ओं कान्तिश्वर इन्द्रचोक कान्तिपुर ॥

अहिले इन्द्रचोक भनेको ठाउँमा अघि वागमतीको र विष्णमतिको संगम दोभान थियो ॥ पछि सो दोभान सारी जाँदा कलिगत ३८२५ मा श्री राजा गुणकाम देवलाई ओं श्री माहालक्ष्मीबाट स्वप्नमा आज्ञा भएमुताबिक सहर बनाएको हुंदा यी परमेश्वर सहरको मध्य ईन्द्रचोक भन्ने ठाउँमा विराजमान भयेको हुँदा काँतिपुर भन्ने नाउ रह्यो ॥ पछि पछि श्री ३ महाराज बीरसम्सेर

जङ्गबहादुरबाट काठमाडौं सहर भर सडक बनाउदा जिमिन उचा भै आयो र आजकाल ढुङ्गाले छोपी १ प्वाल राखीएको छ सो माहादेव जिमिनदेखी १ हान तल गाडिएको छ ढुङ्गा पल्टाउदा देखिन्छ ईन्द्रचोक देखि दक्षिण भडारखाल फोरी ठूलो बाटो बनाई दिये वि० सं० ९६ सालमा ॥ ॥

॥ ओं श्री महालक्ष्मी इन्द्रचोक कान्तिपुर ॥

सुर्य्यवंसि राजा गुणकामदेवलाई कान्तिश्वर विराजमान भएका स्थानमा १ सहर बनाउ म पनि त्यसै ठाउँमा बास गरूँला तेस ठाउँमा रोज लाख रुपियाँको चलति फिर्ति हुने छ भनी ओंश्री महालक्ष्मीबाट स्वप्नमा आज्ञा भए बमाजिम कलिगत ३८२५ मा कान्तिपुर सहर बनाई सकेपछि महालक्ष्मि आफै सवारी भै ईन्द्रचोकमा विराजमान भएका छन् यी देवी पत्ता छैन ॥ वि० सं० १९९६ सालमा श्री ३ माहाराज जुद्धसम्सेरबाट भण्डारखाल फोरी ईन्द्रचोक छिचोली बाटो बनाई दिएका हुन् ॥ ॥

॥ ओं श्री मृग रूप आर्यघाट ॥

ओं श्री ज्योतिलिङ्ग पशुपतिनाथलाई देवताहरूले पुजा गरी आएका बखत श्री माहादेव मृगको राजा भै श्लेष्मांतक वनविषे वनविहार गरीरहेको र ब्रह्मा बिष्णु ईन्द्रले खोजी पता लगाई सिङ समातिंदा सिङ भाचि तिनै जनाको हातमा १।१ टुक्रा परेपछि ८ हजार वर्षसम्म मृग रूपमा विराजमान भै पछि अन्तर धाम भएका मूर्ति हुन् यिनका बयानमाथिका पत्रहरूमा गैसकेको छ यी मृग रूपमा बिहार गरेका बन हुनाले मृगस्थलि भन्ने नाउ भयो ॥ यी ईश्वरको दर्शन गर्नाले पशुयोनिमा जन्म न हुनु पर्ने भै भुक्ति मुक्ति फल पाउनेछ ॥ पछि नेपाली सम्बत ७०५ सालमा श्री राजा लक्ष्मि नृसिंहले आर्यघाट बनाउँदा मृग रूपलाई देवालय बनाई दियेका हुन् यिनी ईश्वरलाई सबैले जल चढाई आएको जलपान गर्दा बहुतै ठंदा भै आउँदो रहेछ यी ईश्वर बहुतै बलवान र बहुतै प्रख्यातका हुन् ॥ ॥

॥ ओं श्री महाकाल भैरव टुंडिखेल कान्तिपुर ॥

अघि वाणासुरदैत्यले गोकर्णमा बसी दिव्य १ हजार वर्षसम्म आफ्नु शिर काटी यज्ञमा होमि अति उग्र तपस्या गर्दा ब्रह्मा खुसिभै देवता राक्षस

दैत्य सबै तेरो अधिन् हवस्. भन्ने वरपाए पछि सहस्र बाहुपाई स्वर्ग मर्त्य पाताल तीनै लोक जय गरी आयका थिए पछि द्वापरका अन्त्यमा यिनैका छोरा मेहेन्द्र दमनले बागमति थुनी सुप्रभा ( चतलाङ् ) नगरमा बसी राज्य गरिरहेका बखत कृष्ण पुत्र प्रद्युम्नले प्रभावति हर्ण गर्ना खातिर सुप्रभा नगर आई प्रभावतिसंग गंधर्व विवाह गरी मेहेन्द्र दमन. कछुपासुर आदि दानवहरू बध गरिसकेपछि बाणासुर आई कृष्णसंग युद्ध गर्दा श्री. कृष्णबाट आफ्नो सुदर्शन चक्रले ती बाणासुरको सहस्र भुजा काटि दिएपछि आकाश चारि भै घुमि रहेका थिए तेसैमा कलिगत ३८२२ मा श्री राजा गुणकाम देवका पालामा मन्त्र जान्ने गुभाजु बहाल टुडिखेलमा बसी आफ्ना वाखीहरू चह्राइ आफू उतानुपरि आकाश तर्फ दृष्टि राखि बसिरहेका बखत यी माहाकाल भैरव आकाश चारि भै घुमि रहेको देखि यी देवता ठूला हुन् यिनलाई यसै ठाउँमा राखन पाया देश रक्षा होला भन्ने चिताई श्री राजा गुण काम देवसंग संमत गरि तिनका स्वरूप जस्तै कालिगडबाट शिलाका मूर्ति बनाई तयार भये पछि यी ईश्वरलाई मन्त्रका जोरले आकर्षण गरी शिलाका मूर्तिमा प्रवेश गराइ बन्धन गरी दिदा यी ईश्वरबाट मलाई सधै याहाँ राखने नगर महा-काल हरण गर्ना खातिर सर्वत्र पृथ्वी घुम्नु पर्छ भन्दा शनिश्चरबारका दिन अहोरात्र यसै शिलाका मूर्तिमा आई प्रवेश गरी बसी मेरो दर्शन गर्नेको सर्व माहाकालको हर्ण गरूला भन्ने बाचा गराई राखेकाले अरू दिन भन्दा शनि-बारका दिन यी ईश्वरको दर्शन गर्नाले सर्व कष्ट माहाकाल हरणभै सुख प्राप्ति हुनेछ यो देवता यस्तो प्रत्यक्षका हुन् ।। बिक्रम सम्वत १९९० साल माघ बदि ३०१२ का दिन ठूलो भुकम्प हुदा यिनी ईश्वरको देवल केहि नभएको हुनाले श्री ५ महाराजधिराज त्रिभुवन बीरविक्रम साहदेव श्री ३ माहाराज जुद्ध शम्शेर जङ्गबहादुर राणा साहेबका निगाहाबाट कान्तिपुर भक्तपुर ललितपुर तीनै सहरका मानिसहरूको घर भत्केका दुनियाहरूलाई घर बचाई चाहिने ईन्तिजाम माफिक यी ईश्वरीका देवलका चौघरा सतलमा भुकम्प समस्था अडा भन्ने खडा गरी रुपैया बाँडि दिएका थिए ।। ।।

**।। ओं श्री शंकटा टेबाहाल कान्तिपुर ।।**

श्री राजा गुणकामदेवका पालामा कलिगत ३८२८ मा देश रक्षा खातिर

मन्त्र जान्ने गुभाजुसंग सम्मत गरी तन्त्रोक्त मूर्ति बनाई कटुवाल दहमा बहुत दुखले कामरू पीठबाट आवाहन गरी कलशमा प्रवेश गराई सो कलश उदरमा राखि टेबहालमा देवालय बनाई स्थापना गरी दिए बाह्याभ्यन्तर पूजा चलाई दिए यी परमेश्वर बडो प्रत्यक्षका हुन् ॥ बिक्रम सम्बत् १९९० साल माघ बदी ३० रोज २ मा ठूलो भूकम्प हुदा केहि भएन सतल भत्केको थियो ॥ सो बनाई तयार गरेका हुन् ॥ ॥

## ॥ ओं श्री भैरव नाथ भक्तपुर ॥

परापूर्वमा यी शहर गाउँ मात्र भैरहेका बखत राजाहरू धेरै दिन बाचन सुतेको सुतेकै भै बराबर मरि जाने भैरहेका बखत कोही सुर्यबंसि आई राजा हुने कबुल गरी राजा भै यहाँ राजा नअडो बराबर मर्ने के हेतु रहेछ विचार गर्नु पर्‍यो भनी राजा ननिदाई रहेका बखत राजा पुत्री आफ्नै रानीका नाभिबाट १ सुक्ष्म नाग निस्की भयंकर मूर्ति भै ति राजा माथि आई लाग्दा राजाले तरवार युद्ध गरी दुष्ट नागलाई बध गरी भोलिपल्ट त्यो कुरा सबै आफ्ना मंत्री प्रजाहरूलाई सुनाई बाहिर यौटा लामो काठ उभ्याई तेसै माथि ती दुष्ट नाग झुन्याई राखेका बखत धेरै मानिसहरू जम्मा भै हेरिरहेका र नर रूप भै तेतिस कोटि देवताहरू हेर्न आएका थिए त्यसै बखत मुनि आचार्य भन्नेले यो तमासा कोको हेर्न आएको रहेछ भनी विचार गर्दा श्री काशीको ओं श्री विश्वनाथ पनि मानिसको रूप भै हेर्न आएको थाहा पाई चिन्हि ठूला देवता हुन् यिनलाई यहानै राखन पाए हुदो हो भनि मन्त्रका जोरले तोरण राखी समात्न लाग्दा ईश्वरबाट आफूलाई पक्रन आएको थाहा पाई भागी आउदा आउदा ती मुनी आचार्यले लगारी घपेता लिदै आई हाल भक्तपुर भैरव स्थान निर पुगेपछि ती आचार्यले भेटाई समात्नु लागेपछि भयंकर भैरवको मुर्ती लिंग ढाले पृथ्वी फटाई तेही लोप हुन लाग्दा ती मुनि आचार्यले तुपि समाई शिर छेदन गरी लिए आङ जति लोप भै आफ्ना स्वस्थान काशीमा गएकाले काशी कालभैरवको शीर छैन भन्दछ यिनै भैरब मूर्ति शीरलाई तहिं स्थापना गरि दिएका थिए ॥ पछि कलिगत ४१९७ मा श्री राजा आनन्द देवले सूक्ष्म मन्दिर बनाई यी भैरवलाई देश मध्ये पारी १२

हजार घरको सहर बनायको र यिनै राजाका सन्तान जगज्योतीमल्लले नेपाली सम्बत ६९० सालमा कालभैरवको रथ बनाई मेष संक्रान्तिका दिन शत्रुह■ योगले लिंगो ढाल्ने रीत गरी भैरवको र कालिको रथ यात्रा गरी भैरवलाई अनेक शक्ति विषए गमन इच्छा गरीएका लिला भावले कालिका रथ भैरवका रथ परस्पर जुदाईने रीत चलाई दिई शान्त भए ॥ पछि श्री राजा भुपेन्द्र मल्लले अति रमनीय मन्दिर बनाई दिएका थिए सो मन्दिर जीर्णभै भत्कनु लाग्दा श्री राजा भुपतेन्द्र मल्लले तंत्रोक्त बिधोले बहुतै राम्रो मन्दिर बनाई दिएका थिए यिनै मन्दिरमा श्री राजा रणजीत मल्लले मन्दिरका अगाडि तर्फ पश्चिम तर्फ सुनको छाना छाइदिए ॥ पछि गोर्खाली राजा श्री ५ रणबहादुर साहले बेताललाई बनचरोले चिरी नर्कमा गाडि दियर पछि जिर्णोद्धार गरि बताए ॥ त्यो मूर्ति पनि जिर्ण हुदा श्री ३ महाराज चन्द्रसंसेरका पालामा १ भक्तजनले सो बेताल–लाई पितलको पाताले मोडिदिए ने० सं ८४४ सालमा भैरवलाई पूजा गरी बलिदान दिराखेको पहिष को शीरवाट जिभ्रानिकाली उक्रियो सबै दुनियाले देखेको छ ॥ वि० सं० १९९० साल माघ वदि ३० रोज २ मा ठूला भुईचाला आउदा देगल जम्मै भत्की बिग्रि मैदान भयो ॥ वि० सं १९९० सालमा श्री ३ महाराज जुद्धशम्सेरवाट जगदेखी नयाँ बहुतै रमणीय मन्दिर बनाइ दिएका हुन् ॥ ॥

## ॥ ओं श्री तुलजाभवानी कान्तिपुर ॥

सूर्यबंसिराजा महिन्द्र मल्ल नित्य भक्तपुरगै ओं श्री तुलजा भवानीको दर्शन गरी नित्य फर्कि आउँदथ्ये त्यस्तै तरहसंग नित्ये धावा गरी सेवा गर्दा ओं श्री तुलजा भवानि प्रशन्न भै स्वप्नमा हेराजा तिमी यहाँसम्म धाउनु पर्दैन किन कष्ट गर्छौ अघि राजा रत्नमल्लका पालादेखी कान्तिपूरमा बसिरहेकी छु तेरो चित्त नबुझे सो रत्नमल्ल राजाले मलाई स्थापना गरेको स्थानमा भक्तपूरदेखने गरी बडो उचा गरि यन्त्रकार देवालय बनाउनु र मलाई आवाहन गर म आउँला भनी आज्ञा हुदा राजा महेन्द्रमल्ल खुसिभै देवालय बनाउनालाई कालिगर डाकी देवालयका लक्षण बताउदै बनायो र बनाउन नसकी कालिगडहरू स्थकीत भयो र

अकस्मात् १ कोही ईश्वरका ईच्छाले वावाजीका रूप भै आई कालिगडहरू-लाई यन्त्रकार देवालयका लक्षण भेद बताई अन्तरध्यान भैगयो ताहाँ उप्रान्त कालिगडहरूले यी सिद्धका आज्ञा बमोजिम गरी ईश्वरीका देवालय स्थान बनाउने असल शुभ स्थिर साइत पारी मखन दोपात देखि दक्षिण तारिणि देवी देखी पश्चिम् भोछेटोलदेखी उत्तर प्याफलदेखी पूर्व यति ४ किल्ला भित्र असल जगा ठहऱ्याई जग मजबूत संग राखी देवालय बनाउदा दिनभरमा बनाएको रातभरमा नासी बिगारी राखने हुदा कालिगड थकीत भयो र के कारणले यस्ता भयो भनी राजाले विचार गर्दा तारणि देवीले आफ्ना स्थान भन्दा उचा गरी देवालय बनाउन लागेको हुनाले बिगारेका रहेछ भनी जानी तारणि देवीलाई २१ गजुर ३६० राँगा चऱ्हाउँला भनी भाखेपछि तारिणि देवीले विघ्न गर्न छाड्यो र निर्विघ्नसंग वास्तु क्रमले तन्त्रोक्त यन्त्रकारका सुन्दर देवालय सिद्ध गरि सुनका पाँचवटा गजुर चऱ्हाई नेपाली सम्वत् ६६६ साल माघ शुक्ल पंचमी रेवती नक्षत्र सोमवारका दिन शुभ मुहुर्तमा कोटि आहुति यज्ञ आरम्भ गरी यथाक्रमले सबै देवताको प्रतिष्ठा कर्म गरी सुसारे भण्डारे ब्राम्हण आचार्य जोसी जलवततरूलाई राखी नित्यार्चन पर्वका पुजा दमन रोहन पवित्रारोहन अष्टमि पिछे माहापूजा गर्नालाई धेरै खेत गुठि राखी नित्य तुलजा भवानीको दर्शन गरी अन्त्यमा मुक्त भैगयो ।। बिक्रम सम्वत १६६० साल माघ वदि ३० रोज २ का दिन ठूलो भूकम्प हुदा ३ तलाका देवालय माथिको १ तला भत्की बिग्रि गयो पछि बिक्रम सम्बत १६६६ सालमा श्री ३ महाराज जुद्धशम्शेरवाट बनाई दिएका हुन् ।। ।।

## ।। ओं श्री दिगुतले काँतिपुर ।।

श्री राजा प्रतापमल्लवाट परलोक सुधार्नका खातिर गुरू नृसिंह ठाकुर भट्टसंग संमति गरि नेपाली सम्वत ८५२ मा अति राम्रो मन्दिर बनाई ढोकामा चाँदिले मोडी सुनको गजुर चऱ्हाई ओं श्री दिगुतलेजु भवानीका मूर्ति बनाई यथाक्रमले स्थापना गरी कडेलचोक भनी प्रख्यात गरी देवीका मन्दिरको सामन्ये शिला खम्बा खडा गरी आफू र जहान परिवारको मूर्ति

बनाई राखिदिए पछि विक्रम सम्वत १९९० सालमाघ वदि ३० रोज २ मा ठूलो भुकम्प हुदा ३ तले देवलको १ तला माथिको भत्ती बिग्रगयो र उत्तर पट्टि सामने खडा भैरहेका खम्बाका माथि पद्माकारको चक्रा गद्‌दी सालीक खसि बिग्रि गयो ॥ ॥

## ॥ ओं श्री दिगुतुलजा भवानि ललितपुर ॥

नेपाली सम्वत ७०४ सालमा श्रीराजा शिवसिंह मल्लले गुरु लम्बकर्ण भट्टसँग संमत गरी मन्दिर बनाई तंत्रोक्तविधान पूर्वक बाह्यान्तर गरी श्री इश्वरिलाई प्रतिष्ठा कर्म गरी स्थापना गरेका थिए पछि इनै राजा शिवसिंहका नाति श्री सिद्धी नरसिंह मल्ल राजाले नेपाला सम्वत् ७८७ साल ज्येष्ठ २ उतराषाढानक्षत्र बुद्धवारका दिन थुनो देवालयै ५ तलासुनको छानाबनाई दिएका थिए पछिराजा श्री निवासका पालामा नेपाली सम्वत् ७८३ साल कार्तिक शुक्ल १० का दिन यी मन्दिरमा अग्नीप्रवेश भैकन नीज राजा श्रीनिवासमल्लले ६ मैन्हाभित्र मन्दिर तयार गरी ४ तले माथिल्लो छानामा सुनले छाई तयार गरी दिए ॥ ने० सं० ८१३ माघ शुक्ल १० रोज १ का दिन श्री राजायोगनरेन्द्रमल्लले सुनको आफ्नु मुर्ति बनाई मन्दिरका सामन्ने शिलाका खम्बा खडा गरी तेस खम्बामाथि आफ्नु र रानी २ का मुर्ति राखी दिए वि० सं० १९९० साल माघ वदि रोज ३०।२ का दिन थुनो भुईचाली आउँदा ३ तलादेवल कमै भत्कीगया र देउता समेत पुर्न गयो ९५ सालमा श्री राजा जुद्धशम्शेर जङ्गबहादुर राणाबाट श्री दिगुतुलजा भवानीका देवल जगदेखा नया श्रमागरी बनाई तयार गरी ९५ साल ज्येष्ठ शुक्ल दिन १९ गते बुद्धवारमा प्रतिष्ठा गरिदिय सो दिनमा ललितपुर सहरमा टोल-टोल पिछे एक-एक ढाका बनाई दुनियादारले सिंदुर जात्रा गरी दरबारमा लगे सो दिनको रातको ६ बजे जुवासमेत फुकाई दिएको थियो ॥ ॥

## ॥ ओं श्री तुलजा भवानी ललितपुर ॥

हरिहर सिंह मल्लको छोरा श्री राजालक्ष्मी नरसिंह मल्ल कान्तिपुरको

राजा भयपछि नीज हरिहर सिंह राजाका माहीलिरानी लालमोति र निजका छोरा सिद्धी नरसिंह मल्ल सहितभै अब कान्तिपुरमा बसि भलो हुनेछैन भनि अघि रत्न मल्ल राजाले कान्तिपुरमा ल्याई रखेका श्रीं श्री तुलजादेवी ललितपुरमा प्रवेश भैराज्ये भोग गर्दा भए ।। केहि वर्षपछि एक दिन श्री राजा सिद्धी नरसिंह मल्ल कौसिमावसी कान्तिपुरतिर हेरिरहेका बेलामा कान्तिपुर दरबारबाट आगोको ज्वाला उठी आएको देख्यो र घोडा चढी वेगले कान्तिपुरमा हेर्न जादा आफना दाज्यू लक्ष्मी नरसिंह मल्ल लोप भैरहेको देख्यो र भतिजा प्रतापमल्लसँग तुलजा जगाउँने मन्त्र तिमीले पाएको छ कि छैन भनि सोध्दा कौचा भडेलले छल गरी मलाई पठाएन नया गोलफुपा टेकु दुभानका जल भरी तेसैमा बुवाज्यूबाट मन्त्र कही आफु सान्त भैगया भनि भन्दा राजासिद्धि नरसिंह मल्लले तेरो जन्म धिक्कार भनि फर्की आई आफना महतारी लालमोतिलाई यो कुरा सबै विस्तार गर्दा नीज लालमोति रानीबाट देउता ता मैले गुप्तगरी ल्याई खोपामा राखि लुकाई राखेको छु भन्न पनि कान्तिपुरबाट उडी आएको तिमीले देख्यो अब श्रीं श्री तुलजा भवानी ललितपुरमा प्रत्यक्ष होला हे पुत्र तिमीले भक्ति गर्दै रहोस् भनि विस्तार बताई बुझाई लालमोति रानीले छोरालाई दिक्षा दिनालाई तुलजाका विधान जान्ने ब्राम्हण को होला भनी अघिका गुरु प्रोहित संग सोध्दा बुझ्दा भेद मिलाउन नसकदा फिक्री मानि रहदा लालमति रानीलाई स्वप्नमा देखाए विश्वनाथो जानाति भनिगए सो स्वप्नमुताबिक विश्वनाथ उपाध्यालाई खोजी ल्याई बुझी हेर्दा धर्मावद्‌था विश्वनाथ उपाध्याले बताई मिलाई दियो र रानी खुसी भै आफना खोपामा राखी गुप्त गरी राखेका श्रीं तुलजालाई देखाई पुत्र सिद्धि नरसिंह लाई दिक्षा दिई नेपाली सम्वत ७४० साल ज्येष्ठ शुक्ल १० हस्ता नक्षत्र बेतिपाट योग बुद्धवारका दिन श्रीं श्री तुलजा भवानी प्रतिष्ठा गर्दा आकाश मार्गवाट १ अग्निज्वाला आई देवालय भित्र पसेका राजा आदि सबै दुनियाले देखेका छन् र राजा खुसि भै आफना गुरू विश्वनाथ उपाध्यालाई सुनको कल्प बृक्ष दक्षिना दि सिद्ध गराए ।। विं० सं० १९९० साल माघ वदि १०।२ मा ठूलो भुकम्प हुदा केही भएन ।। ।।

## ॥ ओं श्री कृष्ण मन्दिर ललितपुर ॥

श्री राजा सिद्धिनरसिंह मल्ल अतिज्ञानिविष्णु भक्ति हुनाले आफ्ना दरबार अगाडि मन्दिर बनाई ओं श्री कृश्न भगवान स्थापना गर्ने मनसुवाले सबै सराजाम तयार गरी ने सं० ७५० साल भाद्रव शुक्ल १५ रोज ७ का दिन मन्दिरको आरम्भ गरी अति सुन्दर पुराण प्रमाणले दश अवतार माहा भारत रामायण युद्ध भएको मूर्तिहरू बनाई ढुङ्गाको देवालय तयार गरि सकेपछि राजा गृहका चैगलमा मन्छु तिमीले बनायाको देवलमा मलाई स्थापना गर भनी राजासिद्धि नरसिंह मल्ललाई स्वप्नमा ओं श्री राधाकृष्णबाट बाणि भए बमोजिम राजगृहका चैगलमा खोज्दा श्री कृष्ण राधिका मुर्ति पायाको हुँदा अर्को १ राधिका मूर्ति बनाई तिनै मूर्ति सहित गरी नेपाली सम्बत ७५७ साल फाल्गुण शुक्ल १० पुनर्वसु नक्षत्र बृहस्पति बारका दिन बिश्वनाथ उपाध्याबाट कोट्याहुति यज्ञ गराई देवालय को सन्मुख ठूलो खम्बा खडा गरी सुनको गरुड स्थापना गरी मन्दिरमा २१ गजुर चढाई श्री राधा कृश्न स्थापाना गरिदिए कोट्याहुति यज्ञ गर्दा कांतिपुरका राजा प्रताप मल्ल र लम्बकर्ण भट्ट २ मिलि काल सर्पका रूप गरी यज्ञ विध्वंस गरुंला भनी यज्ञ मण्डपमा प्रवेश गर्दा यो चाल बुझी विश्वनाथ उपाध्यायले दुबैलाई समाति गोल पारि आफ्ना सिंहासन मनि राखि चलन नसकने गरि स्तंभनास्त्र प्रयोग गरी पुर्णाहुतिका दिनसम्म कसैले पनि लिन आएन भने सर्पाहुति गरुंला भनि राखि दियो १५।१६ दिन भएपछि जामन गुभाजुले थाहा पायो र माहा अनर्थ हुन लाग्यो भनी काठमाडौंका भुतेश्वरमा गै धेरे कष्ट गरि रिझाई ती भुतेश्वर र १ ललित पुरको छिन्न मस्तादेवी १ दुवै देउता उठाई पठायो दुवै देवता आई बालक रूप गरी भोटो मात्रलाई यज्ञ मण्डपका दरवाजामा आई बसी भोटो मात्र थापि मुखले केहा नबोली मागी बसदा स्यावजि आदि सबै सये बजि तयार गरी यी बालक २ लाई दियो र भोटोमा थापदै गर्दा १२।१३ मुरि खाई दियो धेरै खादा विश्वनाथ उपाध्याले सोधन लाग्यो तिमिहरू के गर्न आएको भन्दा मुखले केहि नबोली हस्त संकेट गरी पुडा मनि राखेका २ सर्प छेउ भनी भोटो थापि बसिरह्यो र सत्य कबुल गराई धेरै बिन्ति गराई

२ सर्प भोटोमा राखि दिए यी सर्प यिनी हरूले लगी बागमति तीरमा वसि रहेका जामन गुभाजुले मन्त्र प्रयोगकष्ट गरी यिनीहरू जस्ताकोतस्तै गरिदियो ।। फेरि पछि राजा सिद्धिनरसिंह मल्लले श्रीकृष्नको भक्ति गरी आखिर तेही मन्दिरमा १ श्लोक देखीअलोपभै गयो ।। सो श्लोक ।। यावन्न पतते चक्र श्रीकृष्णस्य च मन्दिरात् ।। तावत्सर्वेऽपि जानीयाज्जिवितोऽहंनशंसय ।। यसको अर्थले अहिलेसम्मै जिउदै छ जीव मुक्त भैगयो ।। यो कृष्ण यस्तो प्रत्यक्ष छ ।। ने० सं० ८६८ कृष्णको अगाडि सम्बत रहेको गरुडको आखाबाट रक्त बगिआयो यही सालमा तनुका राजाले चितवन दखल गरी लियो बि० सं० १९९० माघ बदी ३० गेज २ मा ठूलो भुकम्प हुदा केही भएन ।।

### ।। ओं श्री बज्रबाराही चापागाउ ।।

यी ईश्वरी ४ बाराहिमा दरिएका हुनाले अघिदेखि भएको स्थापनाको उक्ति छैन यी ईश्वरी अघि मन्दिर केहि थिएन जङ्गल भित्र विराजमान भएका पीठ मात्र थिए पछि श्री राजा श्रीनिवासमल्लले उच्च मन्दिर बनाई तयार गरी सुन्को मूर्ति बनाई गुरु विश्वनाथबाट नेपाली सं० ७८६ साल चैत्र सुदि ८ सोमवारका दिन प्रतिष्ठा कर्म गराइ चैत्र शुक्ल लगी देव गुह बनाई स्थापना गरिदिए पछि राजा विष्णुमल्लले सिलाका महिष मुर्तिबनाई ने० सं० ८३२ सालमा स्थापना गरिदिए ।। वि० सं० १९९० साल माघ बदि ३०।२ मा ठूलो भुकम्प हुदा केहि पनि भएन ।। ।।

### ।। ओं श्री चन्द्रविनायक चोबाहाल ।।

अघि सत्ययुगमा ओं श्री महादेवलाई ब्रह्महत्या पाप लागेकोले सो पापमोचन गर्ना खातिर तिर्थयात्रा गर्ना खातिर तिर्थ यात्रा गर्नालाई ओं श्री गणेशले काँधमा बोकी ल्याएको चोभार आई पुगेपछि थकीत भएछ र त्यही विश्राम गरेकोले त्यही ठूलो कापाभै सोस्थान भएको हो सो शिलामा अहिले देखिएको माथिको ईश्वर ओं श्री माहादेव भैरव मूर्ति हुँ गणेशको मूर्तिता त्यस माहादेबको मनि हुनुहुन्छ सो गणेशका दशन गर्नालाई अघिल्तिर को सिंहासन झिकेपछि ताहा एउटा ठूलो प्वालदेखिन्छ सो छिद्रबाट ओं गणेशको दर्शन हुन्छ, तर पनि, अन्धकार हुदा गणेश को दर्शन प्रष्ट

छैन अघि यी देवतामा मन्दिर केहि थिएन राजा श्री बासमल्लले ने० सं० ७८७ साल बैशाख शुक्ल पञ्चका दिन प्रतिष्ठा कर्म गरी मन्दिर बनाई सुनको गजुरसमेत चढाई नित्य पूजालाई गुठि समेत राखिए पछि सो मन्दिर जीर्ण भयो र श्री राजा राज्य प्रकाश मल्लले अघिको मन्दिर भत्काई अतिराम्रो मन्दिर बनाई सुनको गजुर ने० सं० ८७१ सालमा चढाई दियो ॥ पछि वि० सं० १९४४ सालमा श्री मुख्त्यार देवशम्सेर जङ्गबहादुर राणाबाट चौघेरा मतल बनाई अति रमणीय गरी स्थान बनाई दिएका हुन् वि० सं० १९९० साल भुकम्पमा केही भएन ॥ ॥

## ॥ ओं श्री मंकोबाहाल पाटन ललितपुर ॥

सूर्यबंसि राजा मानदेवले कलिगत ४२०६ मा ललितपुरको राज्य पाए-पछि वर्षाकालमा अनावृष्टि भएमा वृष्टि बढाउना खातिर मंत्र जान्ने बौद्धा-चार्यको संमतली साधनबाट पाताल मार्ग बनाइ भित्र चैत्य का प्रतिमा राखि नागहरु स्थापना गरी मंकोबाहाल नाम राखि अनावृष्टि भएमा बज्राचार्य्येहरूले विधि गरी भित्र जान पाउने स्थिति बन्देज गरी दिएका हुन् वि० सं० ९० साल माघ वदि ३० रोज २ का दिन ठूलो भुकम्प हुदा केही भएन ॥ ॥

## ॥ ओं ज्यावला पोखरी ललितपुर ॥

श्री राजासिद्धि नरसिंमल्लले ने० सं० ७७९ साल आषाढ शुक्ल ३ का दिन आफ्ना महतारी लालमोति रानीका नामले यी पोखरी बनाई प्रतिष्ठा गर्दा पानी आएन र गुरु विश्वनाथ उपाध्याले श्री यन्त्र राखि जलयज्ञ गरी पुरश्चरण गर्दा यी पोखरीभरी पानी बढेर आए यी पोखरीलाई ज्यावला खेल पोखरि भन्दछन् ॥ पछि श्री ३ महाराज वीरशम्शेर जङ्गबाहादुर राणाबाट वि० सं० १९ सालमा पोखरीमा के छ खोल्नु पऱ्यो भनि ईञ्जीन २ बाट १०।१२ दिनसम्म पानी झिक्दा पनि पानी सुकाई भित्रको गंम्य पाउन नसकी थकितभै छोडिदियो र २ दिनमा अघि जति पानी थियो उत्तिकै भै बढि आयो यस्तो बलवानको पोखरी हो विक्रम सम्वत् १९ सालमा यी

पोखरीलाई श्री ३ माहाराज जुद्ध शम्शेर जङ्गबाहादुर राणाबाट चारैतर्फ प्रखालले घेरी हरएक किसिमको जीवाजन्तु चराहरू राखि चीडीयाघर बनाई दिएर भित्र हेर्न जानलाई । ८ पैसा दो मात्र भित्र पठाउने रीत गरिदिए पछि वि० सं० १९ सालमा श्री ३ माहाराज चन्द्रशम्शेर जङ्गबाहादुर राणाको जेठी माहारानीको सालीक स्थापना गरेपछि वि० सं० १९ सालमा सोहि पोखरीका किनारामा श्री ३ माहाराज जुद्धशम्शेर जङ्गबाहादुर राणाका मुमाको सालिक समेत स्थापना गरी बहुतै सोभायेमान गरी बनाई दिएका हुन् वि० सं० १९ सालमा जावला पोखरी भित्र जाने ढोकाको दाया बाञा श्री ३ माहाराज देवशम्शेरको श्री ३ महाराज भीमशम्शेर जङ्गबाहादुर राणाका सालीक बनाई राखिदिए वि० सं० १९९० सालमा माघ वदि ३० रोज २ का दिन ठूलो भुकम्प हुँदा केही भएन ॥ ॥

## ॥ श्रीं रानीपोखरी कान्तिपुर ॥

श्री राजा प्रताप मल्लका छोरा चन्द्रपतेन्द्रमल्ल बहुतै ठुलो राज्य लक्षणका हुँदा अहोरात्र गदीमा बसी परलोक हुदा मुमा माहारानी भुवन लक्ष्मीले बहुतै सोक गरी ठूलो पोखरी बनाई बीचमा स्वेष्टदेवता र माहादेव समेत स्थापना गरी सकल तिर्थको जल लिन पठाई सो जल बुढानीलकण्ठको जल भरि नेपाली सम्वत् ७९० साल कार्तिक शुक्ल १५ का दिन प्रतिष्टा गरिदिए ।। यस पोखरी रानीले बनाएको हुनाले रानीपोखरी भन्दछ ॥ यो पोखरीमा भित्र के छ भनी ईन्जिनियर २ ले १०।१२ दिनसम्म पानी झिकदा सुक्या र माझको देवलदेखि पूर्वतिर १ ईनार छ त्यसमा ठूलो फाँटको ढुङ्गाले छोपी राखेको थिएपछि २।३ दिनमा जस्ता को तस्तै पानी भरिए छ यो पोखरी यस्तो बलवान छ ई पोखरीका नाग संखफणि नाम गरिए नागथिए ।। वि० सं० १८९५।९६ सालमा अकस्मात पोखरीको पानी जम्मै रातो भै आयो सो पानीमा कपडा समेत गुलाफी रंग हुने यस्तो उत्पात भै भीमसेनथापा परलोक भये ।। वि० सं० १९९० साल माघ बदी ३० रोज २ का दिन ठूलो भुकम्प हुदा केही भएन बीचको देवलको अलि छाना भत्केको श्री ३ महाराज जुद्धसम्सेर जङ्गबहादुर राणावाट बनाई दिए ।। ॥

## ।। ओं श्री हयग्रीव भैरव बुग्मति ।।

कलिगत ३६९४ मा श्री सूर्यवंसी राजा नरेन्द्रदेवलाई ओं श्री मत्स्येन्द्र-नाथबाट स्वप्नमा कटुवाल दहको समीपमा सहर बसाई श्री सुर्य दक्षिणायणमा मलाई वहीं लगी राख भन्ने वाणि भएबमोजिम सहरमन्दिर बनाई सो मन्दिरका रखवारी मत्स्येन्द्रनाथको मन्दिरदेखी अन्दाजी २०२५ कदम दक्षिण मन्दिर बनाई हयग्रिव भैरव आवाहन गरी मुर्ति नबनाई स्थापना मात्र भै पुजा भैरहेको थियो ।। पछि राजा प्रतापमल्लले ने सं० ७८८ कार्तिक कृष्ण एकादसिका दिन यी भैरवलाई मनोहर गरी सुनको ठूलो मूर्ति बनाई प्रतिष्ठा कर्म गरी सकेपछि सुन्का तोरण बनाई चढाई दिए यिनलाई रुद्र कुप भैरव पनि भन्दछन् वि० सं० १९९० साल माघ वदि ३० रोज २ मा ठूलो भूकम्प हुदा केहि भएन ।। ।।

## ।। ओं श्री विशंखु नारायण ललित पुर ।।

३४९०–३५३० मा श्री राजा शिवदेवका पालामा कोही सज्जन मानिसले स्वप्न तिर्थमा १ सिद्धयोगी आई स्नान गरी जान्छ भनी सुनायो र राजा आफू गै हेर्दा १ सिद्ध योगी भयंकर तेजस्वी रूप देखे सो योगीलाई बडो प्रार्थना गरी ल्याई देवपाटन सहरमा राखी ठूलो सन्मान गरी रिझाई सोझदा गुप्त गरी राजा लाई म दुर्वासा ऋषिको अंस हुँ भनी सुनाई जय वागेश्वरी बनाई सकेपछि गोदावरी संघि गै यी विष्णु लक्ष्मिनारायण सालिग्रामका प्रमाण गुफामा गुप्त भैरहेका विष्णुलाई प्रकट गरी पर्वत विषय स्वयंभु विष्णु जगाई ओं श्री बिशंखु नारायण भनी नाम प्रख्यात गरी आफु अन्तरधान भैगया ।। विक्रम सम्बत १९९० साल माघ वदि ३० रोज २ का दिन ठुलो भुकम्प हुदा केहि भएन ।। ।।

## ।। ओं श्री दक्षिणकाली फरपिङ ललितपुर ।।

यस पीठ नेपालका मुख्य भै विराजमान भैरहनु भएका अघि कहि मुर्ति प्रकाश छैन पीठ मात्र भएको थियो ।। पछि प्रतापमल्ल राजाका उपर ओं श्री दक्षिणकाली प्रसन्न भै मेरो स्वयं मूर्ति प्रकासित छ मलाई मूर्ति

बनाई स्थापना गर भनी स्वप्न वाणी भएको याद नगरी रहंदा फेरि कन्या कुमारी प्रवेश भै मेरो स्वयम् मूर्ति प्रकाशित छन् मलाई मुर्तिबनाई स्थापना गर महा भए रोग नीवारण भै आयुबृद्धि सामराज्य प्रख्यात होला भनी आज्ञा हुदा राजाले मूर्ति बनाउन लाग्यो र तयार भएपछि त्यो मूर्ति अप्रकाशित हो दरवारभित्र स्थापना गर भनी स्वप्न वाणी हुँदा फेरि दोश्रो मूर्ति बनाउन लायो र तयार भया र गुरु लम्बकर्ण भट्टसंग संमत गरि यिनै भट्टद्वारा श्रों श्री दक्षिण कालिलाई दक्षिण दिशामा स्थापना गरी दियका हुन् यिनी दक्षिणकाली बहुतै प्रख्यातका हुन् ।। वि० सं० १९९० साल माघ बदी ३० रोज २ का दिन ठूलो भुकम्प हुंदा केहा भयन यिनी ईश्वरी पनि बहुतै प्रत्यक्ष की हुन् ।। ।।

## ।। श्रों श्री कालभैरव कांतिपुर ।।

श्री राजा प्रतापमल्लबाट नैपाली सम्वत ७८० सालमा हनुमान ढोका आफ्ना दर्बारका भण्डारखालका पोखरीमा बुडानीलकण्ठका जलशयन नारायणका पोखरीको पानी भरि नारायण स्थापना गर्न मतलबले कुलोखनी ल्याउदा रानीबन चँसाट भन्ने ठाउँमा पैन्हो गयो र सो पैंऱ्यो गएको ठाउँमा भयंकर मूर्ति १ घोपटि रहेको छ भन्ने खबर सुनेकाले राजा समेत गै धेरै कालिगड लगाई पल्टाई हेर्दा अति भयंकर मूर्तिको भीमभैरव देखिए ताहाँबाट उठाई ल्याई दरबारको अगाडि उत्तर मुख गरी स्थापना गरी दिया यसैलाई आजकाल श्रों श्री कालभैरव भन्दछ विक्रम सं० साल माघ बदि ३० रोज २ मा ठूलो भुइचाल आउँदा माथिल्लो देवल र तोरणमा रहेका माझको मुख सहित तोरण केही २ भत्की गयो र पछि तयार गरी बनाई दिए यी ३ महाराज जुद्धशम्शेरबाट ।। ।।

## ।। श्रों श्री हनुमान ढोका कान्तिपुर दरवार ।।

श्री राजा प्रतापमल्लबाट नेपाली सम्वत ७७० सालमा आफ्ना घर दरवारका ढोकामा सुन्का पाताले छाई जों श्री हनुमान ढोकामा सुन्का पाटाले छाई श्रों श्री हनुमान स्थापना गरी हनुमान ढोका भनी प्रख्यात गरेपछि यिनै हनुमानलाई जाग्रत गर्नु पऱ्यो भनी आफ्ना गुरू लम्ब कर्ण भट्टले पुरश्चरण

बसि ती हनुमानलाई जगाई लड्डु ल्याई मुखमा हालि दिदा मुखबाई कपाकप लड्डुखाई दिए यो श्री हनुमान यस्ता प्रख्यातका हुन् ।। वि० सं० १९९० साल माघ वदि ३० रोज २ का दिन ठूलो भुकम्प हुदा यिनी ईश्वर श्रों श्री हनुमान केही भएन ।। ।।

॥ श्रों श्री जापा ईनार कान्तिपुर ॥

श्री राजा प्रतापमल्ले अनावृष्टि भएमा वृष्टि बढा निमित्त फुलचोक देवी श्रों श्री हरिसिद्धि ठूला देवता हो भनी धेरै भक्ति गरि सेवा गर्दा श्रों हरिसिद्धि प्रसन्नभै पठर ५ दिनु कुप बनाई यी पथर ५ राखिदिनु कुपमा वर्षा नहुदामा चलाई दिए वर्षा हुन्छ अधि पछि नहेर्नु न चलाउनु भनी पथर ५ दिन पठायो र केही कालपछि सोही राजा प्रताप मल्ले नेपाली सम्वत् ७७५ सालमा लायकुवहालको जामग ,गुभाजुसंग संमत गरी बौद्ध मार्गका तंत्रोक्त विधानले वर्षा हुने क्रमले ईनार बनाई हरिसिद्धिबाट दिई पठायाको पथर ५ राखी प्रतिष्ठा गरी वर्षा नहुदा मात्र खोल्नु भनी स्थिति बाधी बनाएका ईनार हुन् ।। वि० सं० १९९० साल माघ वदि ३० रोज २ का दिन ठूलो भुकम्प हुँदा केही भएन ।। ।।

॥ श्रों श्री नृत्यनाथ काठमाडौं ॥

यी श्रों श्री नृत्यनाथ प्राचिनका हुन् अघि देवालय छैन पछि राजा प्रताप मल्लले अघि मूर्ति नभएकोमा ध्यान मिलाई श्रों श्री नृत्यनाथको अति सुन्दर मूर्ति बनाई नेपाली सम्वत् ७७८ सालमा प्रतिष्टा गरी आफूले कविता बनाई कवेन्द्रपुर भनी नाम गरी ठूलो सतल बनाई मरूनास देगल कहलाई बसाएका हुन् वि० सं० १९९० साल माघ वदि ३० रोज २ मा ठूलो भुइचाला हुदा माथिको तल्ला १ भक्ती १ बिग्री गयो ।। पछि बनाई तयार गरि दिएका हुन् ।। ।।

॥ श्रों श्री श्वेतकाली कान्तिपुर ॥

सुर्यबंसी राजा श्री गुणकामदेवलाई श्रों श्री महालक्ष्मीबाट स्वप्न-बानी भएबमोजिम कलिगत १८२५ मा कान्तिपुर सहर बनाई सकेपछि देश

रक्षा खातिर यी श्वेतकाली तन्त्रोक्त विधिले स्थापना गरी दिएका हुन् ।। पछि श्री राजा अमरमल्लले १२ वर्ष मा १ पटक नचाउने गरी सबै सहरमा वर्ष वर्षमा ओं श्री श्वेतकालिका स्थान दक्षीण दवलिमा प्रेत चतुर्दशिका दिन नचाउने गरी नृत्यलिला बनाई दिएको अद्यापि चलेकै छ ।। वि० सं० १९९० साल माघ बदि ३० रोज २ का दिन ठूलो भुकम्प हुदा यी ईश्वरीको देवल केही भएन घरहरुमात्र भत्कि बिग्रेको थियो पछि १९९५ सालमा श्री ३ महाराज जुद्धसमसेरबाट बनाईदिए ।। ।।

।। ओं श्री रक्तकालि काठमाडौं ।।

सुर्यबंसि राजा श्री गुणकामदेवलाई ओं श्री महालक्ष्मी बाट स्वप्न वाणि भए बमोजिम कलिगत ३८२५ मा कान्तिपुर सहर बनाई सकेपछि देशरक्षाखातिर तंत्रोक्त पुर्वक यिनी रक्तकालि आवाहन गरी जगाई स्थापना गरेका हुन् ।। वि० सम्वत १९९० साल माघ बदि ३० रोज २ दिन ठूलो भुकम्प हुदा केही भएन ।। बिक्रम सम्वत १९९३ सालमा बडा गुरूज्यू हेमराज पंदितज्यूले यिनी ईश्वरीको मन्दिर बनाई सुन्को छाना गजुर समेत बनाई चौघरा सतल स्मेत जिर्णोद्धार गरी बिजुलिसमेत राखी दिएका हुन् ।। ।।

।। भाटभटेनी हाडिगाउँ ।।

वाणासुर पुत्र महेन्द्र दमनले बाग्मतीलाई थुनी नेपाललाई तलाउ गरेका बखत विशाल नगर आदि ग्रामहरू जारि गएका थिए पछि द्वापरका अन्त्यमा ओं श्री कृष्णबाट आफ्ना चक्रले कच्छपासुर आदि दानवहरू मारि बाग्मतिलाई खोली दिएपछि यी भट्ट भट्टीनी स्त्री पुरुष नेपालमा प्राप्त भै उजार भै रहेका बिशाल नगर बसाई स्वयं जत नाउ गरेकालाई राजा थापी विशाल नगरमा बसिरहेका थिए यी भट्टभट्टनीले पुर्व कालमा ओं श्री विष्णु भगवानको तप गर्दा ओं श्री विष्णु खुसिभै के बर माग्छौ बर माग भनी हुकुम हुदा हजुर जस्तै छोरा बर प्रसाद हवस भनी बिन्ति गरे छन् र भगवानबाट तिमिहरूको यस जन्ममा हुने छैन अर्को जन्ममा म जस्तो छोरा होला भनी बरदान बक्से पछि ती तपस्या गरेका देहान्त भै भट्टका कोषमा जन्मी नेपाल विसाल नगरमा आई वसीरहेका बखत पुर्व जन्ममा

तपस्या गरी वरदान पाएको हुँदा यी भट्टीनीका गर्भमा साक्षात नारायणका अंसचिन्ह ३२ लक्षणले संयुक्त भएका छोरा जन्मंदा बहुतै हर्ष भैरहेका थिए १ दिन आफ्ना घरका कोसिमा ति बालख सुताई स्त्री पुरुष आनन्दसित बसिरहेका बखत गरुड चीलका रूप भै आई ती बालखलाई गाँजी लैजाँदा ति भट्ट भट्टीनीका दुवै स्त्री पुरुष पनि आफ्ना मन्त्रका जोडले उडी ती आफ्ना छोरा समात्न भनीं जादा आकाशमा पुगेपछि ती चीलले समाती लगेको बालखले ४ बाहु धारण गरी आफ्ना स्वयं मुर्ति दर्शन दिई हे ब्राम्हण तिमिले पुर्व जन्ममा तपस्या गर्दा मैले बरदान दिएको हुदा तिम्रो कोषमा आई जन्मेको हुँ अब तिमिहरू उद्धार भयो देवता स्वरूप भै बस भन्ये औं श्री बिष्णु भगवानले आज्ञा हुदा विशाल नगरमा आई आकाश चारि रूपले सिद्धभै बसेका यी ईश्वरी ईश्वर हुन् ।। वि. सं० १६६० साल माघ वदि ३०।२ का दिन ठूलो भुकम्प हुदा केहि भएन ।। ।।

## ।। औं श्री गोपालेश्वर फरपिङ ।।

महेन्द्र दमनले बाग्मति थुनि नेपाल तलाउ गरी राज्ये गरेका बखत श्री कृष्ण प्रद्युम्नले महेन्द्र दमन आदि कक्षपासुर समेत धेरै दानव मारी सेतु खोलेपछि अब दानव मारेको पाप छुताउना निमित्त औं श्री कृष्ण तिर्थ यात्रा गरी आउदा काम धेनुबाट भाद्र कृष्ण १४ का दिन दुत चुहाई बसेको देखिएर नीजकामध्येनुका उपदेसले भुमि खनी हेर्दा प्रकट भएको हो ।। विक्रम सम्बत १६६० साल माघ बदि ३० रोज २ का दिन ठूलो भुकम्प हुदा केहि भएन ।। ।।

## ।। औं श्री उग्रतारा नीलसरश्वति कान्तिपुर ।।

सुर्यबंसि राजा श्री गुणकाम देवलाई श्री महालक्ष्मिबाट स्वप्न भए बमोजिम कलिगत ३८२५ मा कान्तिपुर सहर बसाई सकेपछि देशरक्षा खातिर तन्त्रोक्त विधि पूर्वक यिनी परमेश्वरी आबाहन गरि स्थापना गरेका हुन् । पछि कोही दुनिया १ को आँखोंको रोग लाग्यो र औषधि कुनैले पनि निको नहुदा कोही १ भक्त जनले ती परमेश्वरलाई ऐना चढाउनु र निको हुन्छ भन्दा अति श्रद्धा गरी ऐना चढाई पुजा गर्दा आँखाको रोग समन

भैगयो र न्हैकतलाद्यो भनी नाउ प्रख्यात गरी ऐना टासने चलन भयो ॥ विक्रम सम्बत १९९० साल माघ बदी ३० रोज २ का दिन ठूलो भुकम्प हुदा केहि भएन ॥ ॥

## ॥ श्रों श्री लुचुंमडि कान्तिपुर ॥

सुर्यवंसि राजा श्री गुणकामदेवलाई श्रों श्री माहालक्ष्मिबाट स्वप्न भए· बमोजिम कलिगत ३८२५ मा कान्तिपुर सहर बसाई सकेपछि देश रक्षा खातिर तन्त्रोक्त विधि पूर्वक श्रों श्री भद्रकाली स्थापना गरी दिएका हुन् ॥ वि० सं० १९९० साल माघ वदि ३०।२ का दिन ठूलो भूकम्प हुदा केहि भएन ॥ ॥

## ॥ श्रों छाया छत्र पीठ कान्तिपुर ॥

श्रादि युगमा दक्षप्रजापतिका श्रपमानले यज्ञ कुण्डमा फाल हाली प्राणमोचन गरेकी सतीदेवीको मृतक सरिरलाई श्रों श्री महादेवबाट पीठमा बोकी पृथ्वी भ्रमण गरी रहेका वखत श्रों श्री विष्णुका मायाले झिंगा उत्पति गरी पठाई दिदा ती सतीदेवी को लास गलित भएपछि श्रङ्ग पटन हुँदै श्राई बाकी रहेका हाड खुड जम्मै पटन भएका पीठ हुन् यिनै परमेश्वरीको तप गर्नलाई यस ठाउँमा श्रष्टभैरवहरू ठाउँ ठाउँमा विराजमान भएका छन् ॥ यिनीलाई श्राजकाल भुतिसल भन्छन् ॥ यसको पूरा नाउ भुतेश्वर भुतेश्वरी हुन् ॥ वि० सं० १९९० साल माघ बदि ३० रोज २ का दिन ठूलो भुकम्प हुदा केही भएन ॥

## ॥ श्रों श्रशोक बिनायक गणेश कान्तिपुर ॥

यी गणेश प्राचीनका हुन श्रशोक वृक्ष मनि विराजमान भएका हुनाले श्रशोक विनायक भनी नाउ भै पूरा देवल बनाउनु नहुने हुन् ॥ पछि श्री ५ महाराज राजेन्द्र बिक्रमसाहाबाट मन्दिर बनाई छानामा सुनले छाई दिएका हुन् ॥ वि० सं० १९९० साल माघ बदि ३०।२ का दिन भुकम्प हुदा केहि भएन ॥ ॥

## ॥ श्रों श्री मीनतीर्थ मत्स्येगाउ ॥

श्रादियुगमा श्री भगवान विष्णु मत्स्यावतार लिनु भै सो श्रवतारमा

गर्नु पर्ने काम सिध्याई पाशुपतक्षेत्र अति पुण्य भूमि हो भनी निरन्तर ओं श्री मत्स्यावतार नारायण अनेक देवता परिवार गरी विराजवान भएको तिर्थहुन् यस्को मेला बैशाख आषाढ कार्तिक माघ ४ महिनाको र कृष्ण पक्षको द्वादशी ॥ पछि श्री ३ महाराज जङ्गबहादुर राणाका पालमा मध्येश तर्फ सवारी फिर्दा विष्टहरूले बनाई दिएको मत्स्यनारायणको तलाउका तिर्थ बीचमा स्थापना गरी राखेको थिए श्री ३ महाराज जङ्गबहादुर राणा बसाई अघि नचलेका मलमास ( पुरूषोत्तम महिना ) मा मत्स्यनारायण पुजा गर्ने मेला चलाई दिए ॥ वि० सं० १९९६ साल मलमास देखी चलिएछ ॥ वि० सं० १९९० सालका भुकम्पमा केही भएन ॥ ॥

## ॥ ओं श्री गणेश चाबहिल रक्तविनायक ॥

यी गणेश प्राचीनका हुन् यिनका बाउ हस्तिमुख गणेश हुन सो हस्तिमुख गणेशका ध्यानमा कल्प वृक्ष मनि विराजमान भएका प्रमाण यी गणेशका अगाडि शिलास्तंभ उठाई राखेको छ यी गणेश कस्ता हुन् भने दुनियाहरूको शरीरमा पीप भै सुज आउँदा ती गणेशको सेवा पूजा गर्दा निको भै जान्छ यस्ता प्रतक्षका हुन् आजकल रक्तविनायक भन्दछन् ॥ पछि नेपाली सम्बत ८००।८०४ भित्र भुपालेन्द्र मल्ल राजाका रानीलाई मेरा यात्रा चलाउन भनी स्वप्न भए बमोजिम पशुपतिनाथ पुजा गरी बकसाई सुन्को अर्को कवच मूर्ति बनाई धेरै खेत गुठि राखी कार्तिक शुक्ल पुर्णेमा र प्रतिपदा २ दिन यात्रा गर्ने रीत चलाई दिए ॥ वि० सं. १९९० साल माघ बदि ३०।२ का दिन ठूलो भुकम्प हुदा केहि भएन ॥ ॥

## ॥ ओं श्री हारतीमाई स्वयम्भु ॥

यी ईश्वरी अघि मनुष्य हुन् स्वयम्भू लिङ्गको सेवा गरी हारति भन्ने बर पाई लोकको उद्धार गरी स्वयम्भु भै विराजमान भएकी थिइन् ॥ पछि राजा वृषभ देवले स्वयम्भु लिङ्गलाई चैत्याकारले छोपि दिएका बखत यिनी ईश्वरी पनि सिलाका मूर्ति बनाई मन्दिर समेत बनाई दिएका थिए ॥ पछि नेपाली सम्बत ९२१ सालमा श्री ५ महाराजधिराज रणबहादुर साहदेवले यी ईश्वरी

देखी अप्रसन्न भै मन्दिरबाट उखेली दर्बार सातचोकमा ल्याई फलामका घनहे फोरी पिनिदा त्यो शिलाका मूर्ती करायो र प्रत्यक्षाकी यी ईश्वरी हुन् भनी आर्को द्वितीय मुर्ती बनाई स्थापना गरि दिएका हुन् यी ईश्वरी बहुत प्रत्यक्षाकी हुन् ॥ ० ॥

॥ ओं श्री नवदुर्गा भक्तपुर ॥

यी परमेश्वरीहरू यसक्षेत्रका उपाध्या ब्राह्मणको स्वेष्ट देवता हुन् ती ब्राह्मणहरूले सम्हालि राखन नसकी श्री राजा आनन्ददेवका पालामा कलि· गत ४१६०|६७ मा भ्रष्ट भै बाहिर आई मानिसहरू बराबर भक्षण गरी आप: कोले सुनन्द आचार्यले तन्त्रोक्त विधिले सम्हाली स्थापना गरि दिएका हुन् ॥

॥ ओं श्री हरिसिद्धि देवी ॥

आघ विक्रमसेन राजाले नेपालको राज्य पाएपछि ओं श्री गुह्यश्वरीबाट खड्गबर दिदा आफ्ना देश उज्जयन नगरगै आफ्ना सत्रु हराई आफ्ना ईष्ट कुलदेवताहरू आवाहन गरी कलशमा राखी ल्याइ द्वापर शेष वर्ष २६७५ वाकि छदा नेपालमा प्रवेश गराई बानेश्वरका समीपमा स्थापना गरी सुत्र· बीरले नागेन्द्रलाई बघ गरेका प्रमाण सम्पुर्ण गरी नाटक प्रगट गरिदिए यी नाटक प्रकट भएपछि अरू नाटक प्रकट भएका हुन् यी ईश्वरी बडो प्रत्यक्षकी हुन् यी नाटक विक्रम सम्वत १ सालसम्म बानेश्वरमै बसि आएका थिए पछि वि० सं ७४५ सालमा वानेश्वरका स्थान छाडि ठैव देशका समीपमा हाल हरिसिद्धि बिराजमान भएका स्थानमा प्रवेश भै वि० सं. १००३ सालसम्म यी नाटक चली आएकै थिए ॥ पछि यी नाटक लोप भैगयो ॥ पछि मल्ल राजा का पर्य्यायमा पाटनका ज्यापुहरू फुलचोक वनमा दाउरा लिनगै फर्की आई हाल ईश्वरी विराजमान भएका ठाउँमा १ चौर थिए ति ज्यापुहरू ती चौरमा दाउराको भारी बिसाई च्यूरा खान वसिरहदा ती ज्यापुहरूका सरिरमा ईश्वरी आवेशभैं ती ज्यापुहरूले हात हातमा दाउराको कपतेरा लिई युद्ध भावले नाचि रहेका खबर आयो र तिनै सहरका राजा प्रजाहरू ताहा गै विद्वान पण्डित ज्योतिष तांत्रिक जान्नेयहरू र पाटनका गर्भदत्त ब्राह्मण राखि विचार गर्दा ओं श्री हरिसिद्धि देवी ठहराई मान्यता गर्दा मेरो नाटकको

पुस्तक पाटन सोलिह्य आगममा छ सो पुस्तक लीई मेरो नाटक प्रख्यात गर भन्ने आज्ञा हुदा श्री राजा अमरमल्लले त्यो पुस्तक ल्याइ यज्ञयागादि पुजा विधि गरी ईश्वरीको मुल कलश स्थापना गरी देव देवीको मुकुटको बनाई नेपाली सम्वत ५८० सालमा नृत्यलिला प्रख्यात गरी पूर्व भीमेश्वरका स्थानमा १२ वर्षमा १ पटक लगी नचाउने रीत चलाई दिए यिनै राजा अमर मल्लले ठूलो मन्दिर बनाई सुन्को गजुर ६ वता चढाई दिए केहीकाल नाच चली पछि फेरि बन्ध भै रहेछ ॥ ॥ नेपाली सम्वत ७७४ सालमा श्री राजा प्रताप मल्लले लंबकर्ण भट्ट र नृसिंह ठाकुरका मन्त्रका बलले यिनीका नाच लोप भै रहेका प्रकाश गरूँला भनी विधान गर्दा सकेन र ललितपुर गावहालका विश्वनाथ उपाध्यालाई अधिकार दिई सुक्ष्म प्रकारले यो नाच चलायो नेपाली सम्वत ७८७ साल आषाढ सुक्ल १ का दिन श्री निवासमल्लले अघिका ६ वटा गजुर बीच तला तलामा राखि आफूले बनायाको सुन्को ठूलो गजूर माथि राखिदिए यिनै सालमा श्री राजा प्रताप मल्लबाट यी देवीका छाना माथिको १ तला सुनले छाई दिई १२ वर्षमा एक पटक नचाउनेमा आफ्ना दरबारमा पनि ल्याई नचाउने रीत चलाई दिए ॥ सो वखतका नेपाली सं० ७६४ सालमा हरिसिद्धि देवीका नाच काठमाडौं दरवारमा ल्याई नचाई राखेका बखत राजा प्रतापमल्लले पोसाक बदली बाहिर नाइकदा हिटिचोकका झ्वलोमा श्री श्री हरिसिद्धि देवी मनुष्य अति सुन्दर रूप धारी विराजमान भै रहेकी राजाले देवी भनी थाहा नपाई अति राम्रो स्त्री भनी हात हाल्दा देवीले आफ्नु छातीमा छुवाई दियो र सो ईश्वरीको छातिमा रक्तले भिजिएको छुदा पनि थाहा नपाई मस्त भै छिनारी कर्म गर्दा परमेश्वरी अति कोप भै आज्ञा भयो हे राजन तिमी अति छिनारि कर्म गर्दा रहेछौ विवेक विचार केहि छैन अब तिम्रा राज्य यतिकै भयो भनी देवी अन्तरधाम भयो र राजा तही मुर्छा भै रहेको थिए बाटोमा हिड्ने दुनियाहरूले देखी दरवारमा लगे उप्रान्त केहि संकेट देवीकोपऱ्यो श्राप पऱ्यो भनी सुनाई २ घडी बाची श्री राजा प्रताप मल्ल परलोक भयो र त्यसपछि राजा हुने यिनै राजाको छोरा नृपेन्द्र मल्लले श्री देवीको नाच काठमाडौं दरवारमा ल्याई नचाउने मनाही गरी त्यसको सट्टा देउपाटनमा

नचाउने रीत गरी दिएका हुनाले १२ वर्षमा १ पटक देउ पाटनमा नचाउने अद्यापि चल्दैछ ॥ ने. सं. ९५९ सालमा देवालयका माझको गजूर आगो बले झैं बलिरह्यो ९ दिन पछि भीमसेनथापा परलोक भये ॥ वि. सं० १९९० साल माघ बदि ३० रोज २ मा ठूलो भुकम्प हुदा देवता विराजमान भएका तलाको कोठा मात्र बाकी अरू देवालय घर जम्मै भत्की बिंग्री गयो ॥ ॥

॥ ओं श्री कोटिलिङ्ग कान्तिपुर ॥

श्री राजा महेन्द्र मल्लले आफूलाई ओं श्री पशुपतीनाथबाट आज्ञा भए बमोजिम दरबारका समीपमा देवालय बनाई नेपाली सम्वत ६७५ सालमा ओं श्री कोटि लिंगेश्वर महादेव स्थापना गरेका हुन् ॥ ॥

॥ ओं श्री बागभैरव किर्तिपुर ॥

श्री राजा सदाशिव देवले कीर्तिपुर सहर बनाई बसाई सकेपछि ताहाँपछि ताहाँका बासि दुनियाँ केटाकेटी गोठालाहरू बाखा भेडा चढाई सबै मिलि माटाको बाघको मुर्ति बनाई खेलीरहँदा जिभ्रो राखनलाई पाट खोजन जाँदा सो माटोको बाघ को मुर्तिमा भैरव आवेश भै प्रत्यक्ष भैकन चढी राखेका भेडा बाखी जम्मै खाई आफु माटोको मुर्ति पुर्व रूप जस्तो जस्तो छ उस्तै भै विराजमान भैरहेछ र पाट लिएर फर्की आई हेर्दा आफ्ना बाखी भेडा एउटा पनि देखिएन र खोज्दा पनि नपाउँदा कहाँ गयो भनी बालख-हरू रूँदा त सो माटोको बाघ मुर्तिबाट मुख बाई देखाउँदा मुख भित्र दाँतमा अलि रगत लागिरहेको देखदा हाम्रो जम्मै यसैले खाएछ अब यसलाई जिभ्रो हाली दिदैन भनी भागिगै कीर्तिपुर भित्र हल्ला चलयो र राजा लगायत आई हेर्दा ति गोथालाहरू पनि त्यही सिद्ध भै गयो र बाघ भैरव भनी नाम भै प्रत्यक्ष भै गयो पाठको जिभ्रो छैन केटाकेटि पनि सिद्ध भै रहेको अद्यापि छदैछ यो देवता यति प्रकारले प्रकाश भएका हुन् ॥ देवता यति प्रत्यक्षका छन् प्रत्यक्ष भएको कलिगत ३९८४ मा ॥ ॥

॥ ओं श्री नीलबाराही बोडे गाउँ ॥

यी परमेश्वरी आदिका हुन् अघि जङ्गल भित्र लोप भैरहेका थिए ॥

पछि राजविक्रमसेनले कलिगत २९१२-१३ मा यिनलाई प्रकाश गरी दिएका हुन् ॥ ॥

॥ ओं श्री ग्यानेश्वर धोबी खोला ॥

आदि युगमा देवासुर संग्राममा दैत्यहरू वध गरी जय पाउना निमित्त ओं श्री कुमार ईन्द्रादि देवताहरू ओं श्री महादेवबाट खटाई बक्सदा कुमार ईन्द्रादि देवताहरूले आराधना गरी पूजा गर्दा माघवदि १४ का दिन प्रगट भै ओं महादेव बाट वरपाई कुमारादि देवता गएपछि ओं श्री ज्ञानेश्वर भनी प्रख्यात भै रहेछ ॥ यी परमेश्वर चतुर खष्टी लिङ्गका हुन् । यी स्वयम्भु लिङ्गमा अघि सपर्समणि थिए श्री राजा भिमदेव नरेन्द्रदेवका पालामा कलिगत ३९९०-३९९१-३९९५ मा एक कोहि दुष्ट चोरले स्पर्स मणि ल्यु भनी वनचरोले हानि चिर्दा चिर्दै १ आवा जंदी स्पर्स मणि उडिगै प्रभावति नदीमा बस्न गएछ र एक क्षत्रियपुत्र मनुष्यले धातुको तुका लि नदिमागै छुवाई दिंदा धातु भने सुवर्ण भए सो मणि पाउन नसकता फर्किआए ॥ ॥

॥ ओं ४ श्री चैत्यहरू ललितपुर ॥

श्री राजा वीर देवका पालामा बुन्दर भन्ने एक कोही बनिया ले रत्नाकर समुद्रसम्म गै रत्न ल्याई बिक्री गरी शतकोटि धन कमाई ल्याई १ कोटि धन गाडि थूल्दो भन्ने चैत्य बनाई कलिगत ३९०८।९ माघ शुक्ल ५ का दिन पाद प्रतिष्ठा गरीदिएका हुन् ॥ ॥ यस्तै प्रकारले ४ चैत्य बनाएको तपसिल्

लगनखेलको ठुल्दो चैत्य—१
पुल्चोकको ठुल्दो चैत्य —१
तेता ठाउँको ठूल्हो चैत्य—१
यपेबहि बाहिरको ठूल्दो चैत्य १ जम्मा ४

॥ ओं श्री क्वाबाहाल बौद्ध मन्दिर ललितपुर ॥

मिथिला देशका एक मैथिल ब्राह्मण ल्हासामा गै धन कमाई ल्याई आफ्ना देश जाँदा आफ्नु दाज्यू भाईहरूले जातमा नलिदा नेपाल आई

बौद्धमतमा प्रवेश भै कलिगत ३६१०।३६११ श्री राजा वीरदेवका पालामा बौद्ध मुर्ति बनाई बिहार बनाई बसेका थिए ॥ पछि यसै बिहारमा सान्त भैगयो ॥ वि० सं० १९९० साल माघ बदि ३०।२ मा ठूलो भुकम्प हुँदा केही भएन ॥ ॥

॥ ओं पूर्णचण्डि ललितपुर ॥

श्री राजा नरेन्द्रदेवका पालामा श्री मत्स्येन्द्रनाथ आवाहन गरिसकेपछि यिनी परमेश्वरी पनि आवाहन गरी तन्त्रोक्त विधिले कलिगत ३६७६ मा स्थापना गरी दिएका हुन् ओं श्री मत्स्येन्द्र नाथको देबालि पनि यिनी परमेश्वरी काहाँ वर्षैदि पुजागर्छ ॥ ॥

॥ ५ तले देगल भादगाउ ॥

श्री राजा भुपेन्द्रमल्लले यो ५ तले मन्दिर बनाई आदि शक्ति भवानीलाई नेपाली सम्वत ८७१ सालमा विधान पूर्वक स्थापना गरिदिए यो देवालय बनाउदा पादस्थापनाको साईतमा केही खेती काम गर्ने ज्यापुले सोही बखत पारी आखाढ महिनामा रोपाईलाई ब्यूराखेको थियो जब आखाढ पुगे रोपाईलाई ब्यू उखेल्दा झिक्न नहुने भयो र कुटुले कोरी कोरी झिकी रोपाई गरे यस्तो साइतमा बनायाको हुनाले तेत्रो देगल तेति अग्लो ठाउँमा भए पनि कति नढली नम्हासी जबस्वस्तीसाथ अजतक अडिरहेछ स्थीर भै अडिरहेछ सो मन्दिर तयार भएपछि ओं श्री भैरवनाथबाट राजालाई सोप्न विषे वाणी बक्स्यो र हे राजन तिमीले मेरो मन्दिर भन्दा पनि अति उच्च देगल बनाएपछि सो मन्दिरमा मैले मान्नु पर्ने भवानी स्थापना गरेन भने मैले सहने छैन भनी आज्ञा हुदा सो आज्ञा मुताविक आदि शक्ति मनमानेश्वरी भवानी स्थापना गरी दिएका हुन्; वि० सं० १९९० साल माघ बदी ३० रोज २ मा ठूलो भुकम्प हुदा माथिलो तला १ भत्की झिग्री गयो ॥ ॥

॥ ओं श्री पशुपतिनाथ मखन्टोल कान्तिपुर ॥

श्री राजा महेन्द्रमल्लका पालामा ओं श्री पशुपतीनाथलाई नित्य दर्शन गरी धेरै परिश्रमले गरेको भक्ति देखी ओं श्री ईश्वर खुसि भै हे राजन

अब तिमी यहाँसम्म् आई धाउनु पर्दैन। तमीले जाहाँ आवाहन गर्‍यो ताहाँ म आई बसि दिनेछु भन्ने आज्ञामुताविक दर्वारका उत्तर दिशामा नेपाली सम्वत् ६७४ सालमा श्रीं श्री पशुपतिनाथको जस्तो अनुमान प्रमाण मिलाई देवालय बनाई श्रों श्री पशुपतिनाथ श्री महेन्द्रेश्वरं माहादेव स्थापना गरि दिएका हुन् यिनलाई श्रों श्री पशुपतीनाथ पनि भन्छन् ॥ वि० सं० १९९० साल माघ बदि ३० रोज २ का दिन ठूलो भुकम्प भएकोले मैदान भै भत्की गयो शिवलिङ्ग समेत भाची उत्तर फर्की लडी रह्यो ॥ पछि वि० सं० १९९५ सालमा श्री ३ महाराज जुद्धशम्सेर जं. वा. रा. बाट तल्ला नउठाई देगल मात्र बनाइ दिएका थिए ॥ ॥

॥ श्रों श्री वज्रयोगिनी चिकंमुगल कान्तिपुर ॥

श्री राजा प्रतापमल्लले गुरू लक्ष्मीनारायण लम्बकर्ण भट्ट संग सम्मत गरी तन्त्रोक्तले नेपाली सम्वत ७०५ आषाढ कृष्ण ५ का दिन रहस्य ध्यानले स्थापना गरेका हुन् ॥ ॥

॥ श्रों श्री धन्वन्तरी बाराही ललितपुर ॥

यी देवी नन्दी ग्रामबाशिको रक्षक भै विराजमान भैरहेका थिए पछि नेपाली सम्बत ७०९ साल श्री राजा शिवसिंमल्लका प्रज्यायमा यिनी देवीबाट मलाई बगाई लैजान लाग्यो भनी आज्ञा भयो सो नन्दी ग्रामका दुनियाले नटेरी रहेछ सो आज्ञा प्रमाण भएका चौथा दिनमा चोभारका नागले पानी बघाई यी धन्यन्तरी बाराही देवीलाई बगाई ल्याएछ सो खबर नन्दी ग्राम वासीले केहि नगरी बसेछ सो बाराही बागमति दोभान अलि नाघेपछि लैजान सकेन र अडकेकी हुन् पछि धन्यन्तरी बाराही कहलाई राज भएका हुन् यो देवी बगाई ल्याएपनि दुनियाले केही स्याहार गरेन भनी देवी कोपभै श्राप दिए यी नन्दीग्राम वासी दुनियाहरू कहिले पनि सुखी नभै दुखि हवस भनी श्रापदिदा यी ग्रामका दुनिया दुखी भैगए ॥ ॥ ॥

॥ श्रों ठूलो घण्टा पाटन ॥

श्री राजा विश्णुमल्ल की रानी चन्द्रलक्ष्मी देवीले श्रों श्री तुलजाभवानी

प्रीती गरी नेपाली सम्बत ८५७ सालमा चढाएका हुन् ॥ पछि सो घण्टको निदाल काठ जिर्ण हुदा बि० सं० १९ सालमा श्री ३ महाराज चन्द्रसम्सेरबाट हातिबनदेखी ढुङ्गा झिकाई पिपाहरू २०००।२५० ले घिस्लाई ल्याई पुल्चोक ढोका अगाडि राखी कर्मिबाट बनाउन लगाई १४ जना मानिसले घिरिनी-बाट तानि माथि राखी वडा तमासाबाट जिर्णोधार गरी दिए ॥ ९० सालको भुंकम्पमा पनि केही भएन ॥ ० ॥

## ॥ ओं श्री अग्निमठ पाटन् ॥

श्री राजा बिष्णुमल्लले नेपाली सम्बत ८६५ पौष कृष्ण ७ का दिनदेखी अग्नि होत्री ब्राम्हण द्वारा अग्नीस्थापना गरी यज्ञ गरि सम्पूर्ण गरे तापनि अद्यापि सो यज्ञ मण्डपमा अग्नि होत्री ब्राम्हणले यज्ञ गरी आएकै छ ॥ यस्थानमा सबै दुनियाले सातिक पुस्तीक होम गराउन आउने रीत चलेको छ ॥ ॥

## ॥ ओं श्री वैष्णवीयप्पा ललितपुर ॥

श्री राज्यप्रकासका पालामा साधन तन्त्रमा निपुण भएका बिष्णुदत्त ब्राम्हचारीले राजाको जय जय होस् भन्ना खातिर नेपाली सम्बत ८७२ सालमा यी वैष्णवो पीठमा साधन गरी जगाई स्थापना गरो दिएका हुन् । यो पीठ बहुतै उग्र प्रत्येक्षका हुन् ॥ केहि कालपछि यही राजाका पालामा राजाको जय निमित्त कोही बंगाली ब्राम्हणले मोहनी साधना गरी रहेको थियो त्यस-वेलामा बुबाहालको सोधननाम बाडाले प्रधानहरूको खेलबाट जफतिसंग लुटि ल्याई आफ्नु नवाहालका बाडाहरूले मोहनी लगाई आफु आफै देवता भनी मछिन्द्रनाथका पादुका छत्र लुटि ल्याई आफूले लगाई सजीव बाल्ने देवता भनि सबै देवताको पूजा आफुलें लिई भोजन गरेका छ १ खालचा भन्ने ज्यापुले राजाका सम्मतिले आफु सिंबुको न बोल्न्या देवता भनी जागि देवताभनिजागी देबता भन्ने बाँडाहरूलाई पुजा गरूंला भनी डाकी दरबार पुगनासाथ झुट्ठा देवता भनी १।२ जना मारी दिएर अरू भागीगै सो देवता हुने बन्ध भै गयो ॥ फेरि श्री ५ महाराजधीराज रणबहादुरसाहका पालामा बिक्रम सम्बत १८५४ सालमा काल पुरूष दान गर्दा दान लिने दक्षिन भट्ट अंगारले घसे जस्तो कालो भै गयो र कालपुरुष लोटाउन

पनि सकेन र नील गुरू भट्ट आई यीवैष्णवी पीठमा लगी आफ्नो मन्त्र बलले बस्न र अंठादिनमा कालपुरूलाई लोटाई आफ्नु सिष्यलाई बचाए ॥ पछि यी पीठका पूर्वपट्टिको र दक्षिण पट्टिको धर्मसाला पाटी बिग्रियो र आफ्नु पुर्खाको दत्त हुनाले कान्तिपुर सहर किसिगल टोल बस्ने साहु संकरलालले नयाँ किसिमसंग गुमोज बनाई राम्रो सजीलो गरी जिर्णोद्धार गरी बनाए बि० सं० १८७३ सालमा ॥ वि० सम्वत १९९० सालमा ठूलो भुकम्प हुदा केही गएन ॥ ॥

## ॥ ओं श्री सिद्धपोखरी भक्तपुर ॥

यी पोषरी कसैले बनाएको होइन श्री राजा आनन्द देवकापालामा कलिगत ४१९७ मा भक्तपुरको एक कोही तान्त्रिकवाला मानिसले ठिमिको स्वास्नी विवाह गरी आनन्दसंग वसि आएका थिए एक दिन स्वास्नीले आफ्नो लोग्नेसंग तपाई अनेक रूप हुन सक्छौ र मलाई एक रूप देखाउ भनी साह्रै घिपि गरेछ र लौ हुन्छ तंलाई एउटा रूप देखाउँदछु केही गरी तर्साई तँ डराइस भने यो अक्षताले मलाई हानिदिने काम गरेस भनी मन्त्रका अक्षता स्वास्नीलाई दी आफु तल छेडिमा गै ठूलो भयङ्कर १ नागको रूप भै माथि आउँदा त्यो चण्डालनी दराई मन्त्रको अक्षताले आफ्नो लोग्नेलाई न हानी सो अक्षता यत्र तत्र फाली भागी गएछ र सो नाग रूपले आफ्ना स्वास्नीको पछि पछि लागि जाँदा हाल सिद्ध पोखरी भएका ठाउँमा पुग्दा प्रातकाल हुन लाग्यो र अनर्थ भयो भनि ति नाग रूप त्यसै ठाउमा लोप भै बसेकाले त्यो नाग त्यहीरहेः ॥ ताहापछि पोषरीमै सिद्ध पोखरी भन्ने नाउ प्रचार भयेको हो यस पोखरीमा आजसम्म ठिमीलेहरू कोही जानु हुँदैन गयो भने एकदम पानी बढि अनौठासंग पानी खलमलयाई उत्पात हुन्छ भन्छ पछि बिक्रम सम्वत...सालमा यसै पोषरीलाई श्री ३ महाराज जङ्गबहादुर राणाबाट चारै तर्फ ढोका बनाई भित्र ढुङ्गाले छापी घाट बनाई अति राम्रो गरि दिएको हुन् ॥ ॥

## ॥ ओं श्री जगन्नाथ दर्वार अगाडि कान्तिपुर ॥

श्रीं राजा प्रतापमल्लबाट आफ्ना दरबार बहुतै राम्रो गरी बनाएको

भक्तपुरका राजाले नसही दर्वारको ब्यसोभा गरी आउन सक्नेलाई खेत बिर्ता दिउँला भनी आज्ञा हुँदा १ कोही दुष्टले म गरुंला भनी काठमाडौं सहरमा आई राजा प्रताप मल्लको चाकरी गरि रहँदा राजाबाट जागिर बिर्ता नबक्सदा पनि नलि चाकरी मात्र गरी बस्दा उस बखत राजा अर्काको नोकरी पचाउन नसक्ने हुंदा तिमीले के माग्छौ एक थोक नमागि हुन्दैन लौ माग भनी आज्ञा हुदा मागेको देउला भनी राजाबाट बाचा गराई हजुरबाट यस्तो राम्रो दरबार बनाई बक्से छ बेहान जागा हुने बित्तिकै दर्सन गर्ना खातिर दरबारको अगाडि एउटा मन्दिर बनाई त्यसमा जगन्नाथजी स्थापना गर्छु भनी माग्दा बाचाबाट हारी राजा प्रताप मल्लले हुन्छ बनाउ भनी आज्ञा हुदा भक्तपुरले मजबुत तवरसंग दर्वारको मोहरा छोपने गरी ठूलो मन्दिर बनाई प्रतिष्ठा कर्म गरी स्थापना गरी भक्तपुर गयो र तिनलाई विर्ता बक्से छ सो देवता जगन्नाथ भने तापनि चतुरमुख नारायण मूर्ति दक्षिण दरबाजामा छ ॥ बिक्रम सम्बत १९९० साल माघ बदि ३० रोज २ का दिन ठूलो भुईचालो हुदा माथिलो तलाको उत्तर पट्टि छाना भत्की गयो पछि वि० सं० ९५ सालमा श्री ३ माहाराज जुद्ध शम्सेर जं. बा. रा. बाट तयार गरी दिएका हुन् ॥ ॥

## ॥ ओं श्री महालक्ष्मी थछे ललितपुर ॥

यी पीठ आदिका हुन् स्थापना गर्ने पत्ता छैन अघि मुकुन्दसेन राजाले सूर्यबंसी राजाहरू सखाप गरी आफू फर्के पछि नेपालमा राजा सुन्य हुँदा कलिगत ४३५९ मा नुवाकोटका बैश्य ठकुरीहरू आई टोलै पिछे राजा भै चलाएको थियो यी ठकुरी राजाका पालामा भकु भन्या जात धेरै नेपालमा आई मानिसलाई समाति मारी खपर लिई लैजान्छ र ठकुरी राजाले यस्ता चाल भए ता मेरो प्रजाहरू नास हुन्छ भनी भकुहरू मार्नु पऱ्यो भनी यिनी थछे माहालक्ष्मी पीठमा गै सेवा गरी बर प्रसाद पाई जहाँ जहाँ भकुहरू भेटछ तहा तहा मारी एक एक पीठ जगाई दियो यीनै भकुहरूका राजा चाहिं मारी मुलचोक मध्ये ओं माहालक्ष्मी जगाई स्थापना गरी सबै भकुहरू नास गरी मारिदियो ॥ फेरि नेपाली सम्बत ७५०।५१ सालमा श्री राजा

सिद्धिनरसिंह मल्लबाट ३ तला मन्दिर बनाई प्रख्यात शिवशक्ति स्वरूप ओं श्री मनकामना पीठ प्रकाश गरीदिएका हुन् ॥ वि० सं० १९९० साल माघ वदि ३० रोज २ का दिन ठूलो भुकम्प हुदा केहि भएन ॥ ॥ ॥

## ॥ ओं श्री दत्तात्रयनाथ भक्तपुर ॥

यी परमेश्वर प्राचीन युगमा आफै सिद्ध भएका हुन् यिनका साथमा ओं श्री शंकराचार्य स्वामी र सच्चीतानन्द स्वामी सिद्ध भै दायाँबायामा विराजमान भएका हुन् यी ईश्वर बहुत प्रतक्षका हुन्॥ फेरि श्री राजा शिवसिंह मल्लका पालामा नीजका रानी गंगाराणीबाट नेपाली सम्बत ७०६।१० मा यी देवता ठूला हुंन भनी रमणीय ३ तला ग्रुप्रो मन्दिर बनाई नित्य पुजालाई र पर्व पर्व गुठी चलाउनालाई धेरै खेत गुठी राखी दिए यी परमेश्वरको नित्यार्चन हुन्छ ॥ वि० सं० १९९० माघ वदि ३०।२ का दिन ठूलो भुकम्प हुदा केही भएन ॥ ॥ ॥

## ॥ ओं श्री कुमारी यात्रा कान्तिपुरः ॥

श्री राजा जयप्रकाशमल्ल माथि यिनै परमेश्वरी अप्रशन्न भै तेरो राज्य रहने छैन भनी आज्ञा हुदा ती राजा जयप्रकाश मल्ल बहुतै डराई ईश्वरीमा क्षमार्पणकोटिशासय छाग बलीको पुजा गरी रथयात्रा बनाई दिन्छु भनी मन्मा राखी सुतेका बखत स्वप्नमा हे राजा तले मेरो रथ यात्रा बनाउन आटेछौ बेस फेरि १२ वर्ष तिम्रो राज्य रहने छ भनी स्वप्न वाणि भएको हुँदा नेपाली सम्वत ८७६ साल भाद्र सुदि १४ का दिन काठमाडौं देखी तल्ला टोलमा र भोलीपल्ट पुर्णिमाका दिन माथिल्लो टोलमा आश्विन वदि ४ का दिन नरदेवीबाट भेडासिं भै ईन्द्रचोक ल्याई दरवार पुऱ्याउने गरी ३ फेरा यात्रा गर्ने गरी ओं श्री कुमारीलाई १ ओं श्री गणेशलाई १ ओं श्री भैरवलाई १ जम्मा ३ रथ बनाई तिनै परमेश्वर रथारोहण गरी यात्रा गर्ने रीत चलाई दिएका हुन् यी यात्रा अद्यापि चलेकै छ। फेरि यसै सालमा बहुतै राम्रो वास्तु विधि लक्षणसंयुक्त गरी घर पनि बनाई कुमारी चोक नाम कहलाई दिए ॥ सं ॥ सं. १९९६ साल भाद्र महिना को श्री कुमारी यात्रा तल्लो टोलमा रमाना हुदा रथबाट मानिस १ मरे १ घाइते भयो माथिल्ला

टोलमा सिद्धि सकेपछि आश्विन वदी ४ का दिंनको १ दिन अगाडि १९९६ साल आश्वीन १५ गते रोज १ मा दिनको १२ वज्नलाई ७ मिनेट बाकीमा भुकम्प भएकोले जात्रा ७ दिनपछि हटियाको आश्विन २२ गते १ मा नर्देबीबाट भेडासिंहबाट ईन्द्रचोक लयाई दर्वार पुन्याउने दिन भेडासिंको दोबाटोमा श्री कुमारीको रथ पुगनासाथ कुमारीको रथको बायाँ पट्टिको अगाडिको पाँग्राको बंला जम्मै भाची बिग्री रथ अडकदा ईन्जीनका हलुका पाँग्रा राखी रथ यात्रा चलाउँदा दरवार पुग्नासाथ बेलुकाको तोप चलेको थियो ॥ ॥

## ॥ ओं श्री ठूलाभैरव देगुतले सन्धी कान्तिपुर ॥

श्री ५ महाराजाधिराज रणबहादुरसाहाबाट सके सम्वत १७१६ सालमा ठूलो परिश्रम गरी सुन्को मोलम्वा गरी टाउका मात्रको भैरव मुर्ति वनाई तन्त्रोक्त विधिले वौद्धमतबाट प्रतिष्ठा गरी पर्व पुजा नित्य पुजालाई गुठिराखि दिएका हुन् ॥ वि० सं० ९० साल माघ बदि १०।२ का दिन ठूलो भुकम्प हुदा केहि भएन ॥

## ओं श्री ठूलो घण्टा र ठूलो नगरा कान्तिपुर ॥

श्री ५ महाराजधिराज रणबहादुरसाहबाट ओं श्री दिगुतलेज्यू प्रीति गरी ठूलो परिश्रम गरी साके सम्वत १७१४ सालमा प्रतिष्ठा कर्म गरी ओं श्री दिगुतलेजुका नित्यपुजामा बजाउने रीत चलाई दिएका हुन् यो घण्टा जत्रो ठूलो भाज्याङ भित्र नेपालमा कहिं पनि छैन यिनै राजाले शाक्य सम्वत १७१५ साल मा ठूलो नगरा २ पनि बनाई चढायो यो नगरा उषा कालमा वजाउने रीत चलाई दिए ॥ वि० सं० १९९० साल माघ बदि ३०।२ का दिन ठूलो भुकम्प हुदा ठूलो घण्टको सिखि १ तोडिएको हुनाले दिनको २ फेरा बजाउने बन्द भैरहेको ९१ साल अधिक वैशाक सुदि ७ बैशाक ६ गतेका दिन बजाउने चलायो पछि वनाईदिए ॥ ॥

## ॥ ओं श्री विश्वरूप मृगस्थली-सुवर्णपुर ॥

श्री ३ महाराज जङ्गबहादुर राणाबाट धेरै तन्त्र बटुली ठूलो परिश्रम गरी

ध्यान मिलाई नेपाल भरका कहिं नभएको मुर्ति दुनिया उद्धारहोस् आफू पनि ईश्वरका चरणारविन्दमा भक्ति वृद्धि भै आफू र स्ववंस समेत उद्धार होस् भनी ईच्छाले विक्रम सम्वत १६२० सालमा कोटिहोम गरी प्रतिष्ठा कर्म पुऱ्याई अँगावरण सहित गरी स्थापना गरि दिएका हुन् यी परमेश्वरीमा तंत्रोक्त विधिले नित्य पूजा हुन्छ ।। विक्रम सम्वत १६६० साल माघ बदि ३० रोज २ का दिन ठूलो भुकम्प हुदा केहि भएन ।। ।।

## ।। ओं श्रीरणमुक्तेश्वर कान्तिपुर ।।

श्री ५ महाराजधिराज रणबहादुरसाहा स्वर्गे हुनु भएपछि सोही रणबहादुर साह स्वर्गबास प्राप्ती हवस, भन्ना खातीरक ईनचीफ जनरल भीमसेन थापाले विक्रम सम्वत १८८४ सालमा चौघरा सतल र अनौठा देशी काईदाको सुन्दर देवालय बनाई प्रतिष्ठा कर्म पुर्ण गरी बाणलिङ्ग स्थापना गरी रण- मुक्तेश्वर भनी नाउ प्रख्यात गरी धेरै खेत गुठि राखी दिए वि० सं० १६६० साल माघ २ गते सोमवार औंसीका दिन ठूलो भुकम्प हुदा केही भएन ।।

## ।। ओं त्रिपुरेश्वर कालमोचन घाट ।।

श्री ५ महाराजधिराज रणबहादुर साह स्वर्गे भएपछि श्री बडामाहारानी ललीत त्रिपुर सुन्दरी देवीबाट आफना स्वामी र आफु स्मेत उद्धार हुना खातीर विक्रम सम्वत १८६७ साल मा चौघरा सतल बनाई सुन्दर ३ तला देवल बनाई तिनै तलामा सुनले छाई ठूलो देवालय बनाई ओं श्री माहादेव स्थापना प्रतिस्था गरी ओं श्री त्रिपुरेश्वर नाउ प्रख्यात गरी दिए यसैसाथ कालमोचन घाट र ठूलोकाय हनुमान स्मेत स्थापना गरी दिएका हुन् ।। विक्रम सम्वत १६८···सालमा श्री ३ माहाराज चन्द्रशम्सेर जङ्गबहादुर राणाबाट नयाँ लामो घाट र सतल स्मेत बनाई देसी परदेसीलाई सुविस्तासाथ बस्नु हुने गरी जमाई दिएका हुन् विक्रम सम्वत १६६० साल माघ बदी ३० रोज २ का दिन ठूलो भुकम्प भएकोले ३ तला देवल जम्मै साफ मैदान भै भत्की गयो ।। विक्रम सम्वत १६६३ सालमा श्री ३ महाराज जुद्धशम्शेर जङ्गबहादुर राणावाट नयाँ लामो घाट र सतल समेत बनाई देसि परदेसिलाई सुविस्तासाथ बस्न हुने गरी बनाई दिएका थिए ३ तले देवल पनि बनाई दिए ।। ।।

## ।। ओं श्री सत्यनारायण थापाथली घाट ।।

श्री ३ महाराज जङ्गबहादुर राणाबाट बिक्रम सम्वत १९३१ सालमा कालमोचन देखी माथि पूर्वतिर अति लामो घाट र चौघरा सतल ठूलो देशि काइदाको देवालय बनाई श्रो श्री सत्यनारायण लक्ष्मी सरस्वती स्मेत प्रतिष्टा स्थापना गरी मन्दिरको माथि ४ कुनामा सुनले मोलम्बा गरी सिंहहरू ४ र मन्दिरका पुर्वपट्टि ठूलो लामो सिलाको खम्बा खडा गरी सोही खम्बामा आफूले गरेको किमतको बयान सबै लेखी सुन्को मोलम्वा आफ्नु मूर्ति खम्बा माथि स्थापना गरी फकीर उदासी महन्तहरूको मठ स्मेत बनाई सरावर्त हण्डीलाई गुठीलाई घेरै खेत राखी दिए ।। यस घाटमा उदासीको अखढा १ दशनामिको अखडा १ बैरागीको अखडा १ जम्मा ३ अखडामा बस्ने महन्तहरू उदासि बैरागी दशनामि फकीर रफकडाहरूलाई रोज भण्डार के शिवरात्रीमा आउने जतिलाई समेत भण्डारा के प्रसस्त गुठि राखी दिएकोले यस घाटमा शिवरात्रौ ४।५ दिन अघि ६।८ दिनपछि परदेशी फकीरहरूको ठूलो माहात्मा आई वस्छ ठूलो भण्डारा हुन्छ ।। वि० सं० १९९० साल माघ बदी ३०।२ का दिन ठूलो भुकम्प हुदा देवल ठाउँ-ठाउँ चर्की मर्की सतलहरू समेत भत्की गयो र पछि वि० सं० ९२ साल मा श्री माहाराज जुद्धसम्सेरबाट बनाई दिए ।। ।।

## ।। ओं श्री सुन्धारा टुडिखेल ।।

श्री कम्याण्डर इनचीफ जनरल भीमसेन थापाले १८८३ सालमा ठूलो परिश्रम गरी सुन्धारा ३ बनाई ठूलो परिश्रमबाट पानी लयाई धारा बहाई दिएका हुन् ।। यो पानी अति स्वादिलो अति असल हुन् ।। ।।

## ।। ओं श्री धरहरा काठमाडौं ।।

श्री कम्याण्डर इनचीफ जनरल भीमसेन थापाबाट देशि अंग्रेजहरू आउँदा ईजत खातिर र दुष्टजन लाग्दा हेर्ना निमित्त आपतकालमा पल्टनहरू जम्मा गर्ना निमित्त बिकुलि लाउँना के समेत ठूलो परिश्रमले बडो मजबुतसंत जग राखी विक्रम सम्वत १८८२ सालमा अति उचो धरहरा बनाई तयार गरी घन्ने कहलाया ।। बिक्रमसम्बत १९९० साल माघ बदी

१० रोज २ का दिन को २।१५ बजेका टायममा ठूलो उत्पात भुमिकम्प मै ९ तला भएको ४ तला बाँकी माथिको ५ तला भत्की बिग्रिगयो ईट बज्रको टुका एउटा पनि बाहिर परेन पर्खाल भित्र अनौठा काइदाबाट भत्की आयो ।। विक्रम सम्बत १९९२ साल आश्वीन महिनामा श्री ३ महाराज जुद्धशम्सेर जङ्गबहादुर राणाबाट ४ तला बाँकीमा १ तला फेरि भत्काउन लगाई साबीक बमोजीम ९ तला अत्यन्त परीश्रमसाथ बनाई तयार गरी अघिको गजुर बिग्रेको समेत नयाँ गजुर अघिकै जस्तो बनाई ७ तलामा बारदली पनि राखी अति राम्रो गरी तयार गरिदिए ।। ।।

## ओं श्री भीममुक्तेश्वर कान्तिपुर ।।

श्री ५ महाराजधिराज राजेन्द्रविक्रमका पालामा विक्रम सम्बत १९९५ सालमा भीमसेनथापा माथि श्री राजेन्द्रविक्रमसाहा अप्रशन्न मै भीमसेन थापालाई नेल हाली नीजको सर्वस्व हरण गरी निजको परिवार सबै बन्धन गरी राखदा नीज भीमसेनथापाका पत्नीलाई पल्टनमा छाडी बेइज्जत गर्ने भनी भनेको सुनी रहनु क्रे हेनु अहिले ता जिउनु पनि धिक्कार भनी आफ्नु गला आफैले रेटि बन्धनैमा मरी गयार तिनको लास संस्कार गराउन नदी बिस्नुमतिका तिर कालिमाटिका स्थानमा फाली राख्यो र स्याल र कुकुर गृद्ध काक चिल्हहरूलाई खुवाई दियोः ।। पछि नीज भीमसेनथापाका छोरा माथबरसिं थापा लाहुरबाट फर्की नेपालमा मुखत्यारी जनरल माथबरसिं थापा कलाबाहादुर भनी नाउ दर्जा पाए प्राईमिनिष्टर समेत मैसकेपछि राजा बनगाई आफ्ना बाबु भीमसेनथापाका लास फालेको ठाउँमा बिस्नुमतिका तीरमा विक्रम सम्बत् १९०० सालमा भीमसेन थापा स्वर्ग प्राप्त होस भनी माथबरसिं थापा कलाबहादुरले चौघरा सतलघाट अति सुन्दर देवालय बनाई प्रतिष्ठा कर्म गरी स्थापना गरी ओं श्री भीम मुक्तेश्वर भनी नाउ प्रख्यात गरी धेरै खेत गुठि राखी दिए ।। ।। विक्रम सम्बत १९९० साल माघ बदि रोज ३।०।२ का दिन ठूलो भुकम्प हुदा केहि भएन ।। ।।

## ।। ओं श्री थापाथली बागमती पुल ।।

श्री कम्याण्डर इनचीफ भीमसेनथापाले दुनियाहरूलाई सुविस्ता होस् भनी

विक्रम सम्वत १८७४ सालमा पुल बनाई सो पुलको रक्षा गराउना खातिर पुल भन्ने गाउ बसाई सो गाउमा बस्नेहरूलाई बिर्ता समेत दिई बसाई दिएका थिए ।। पछि सोही पुल बिग्रन लाग्दा श्री ३ महाराज चन्द्रशम्शेर जङ्गबहादुर राणाबाट बि० सम्वत १९६२ सालमा सो पुलभत्काइदेशबाट फलामकासारा मजबुती पुलभिकाई अति मजबुत किसिमसंग जग बसाई फलामको पुल बनाई जिर्णोद्धार गरी दिएका हुन सो पुरानु पुलको थामहरू भिकन मुश्किल हुदा हातिले भिकन लाग्दा पनि उखेलियन र बनचरोले काटि भिकेछ ।। विक्रम सम्वत १९९० साल माघ बदि ३० रोज २ का दिन ठूलो भुकम्प हुदा केही भएन ।। ।।

## ।। श्रो पुलहरू ठाउँ ठाउँको ।।

बिक्रम सम्बत १८६७ सालमा भीमसेनथापाले बनाएको भिमसेनथान बिस्नुमतिको पुल बिक्रम सम्बत १९९० साल माघ बदि ३० रोज २ को भुंकम्पले बिग्रीगयो पछि श्री ३ महाराज जुद्धशम्सेर जङ्गबहादुर राणाबाट

| | |
|---|---|
| वि. सं. ९३ सालमा बनाई दिए | १ |
| श्री १ माहाराज जङ्गबहादुर राणाबाट बनाएको | ९ |
| बिक्रम सं. १९ सालमा भक्तपुर जाने बाग्मति पुल | १ |
| ऐ— १९ सालमा भक्तपुर जाने मन्हहरा पुल | १ |
| ऐ–१९ सालमा भक्तपुर जाने बाटो धोबी खोला पुल | १ |
| ऐ–१९ सालमा ऐ जाने बाटो खासाँखुसु पुल | १ |
| ऐ–१९ सालमा कालिमाटि जाने पुल ८० सालमा फलामको भो | १ |
| ऐ–१९ सालमा बलखुको पूल | १ |
| ऐ–१९ सालमा नर्देबीबाट स्वयम्भु जाने बिस्नुमति पूल | १ |
| ऐ–१९ सालमा साखु जाने बाटो बाग्मति पूल | १ |
| ऐ–१९ सालमा बालाज्यू जाने बिस्नुमति पूल | १ |
| श्री ३ महाराज चन्द्रशम्सेर जङ्गबहादुर राणाबाट बनाएको | ७ |
| बिक्रम सम्बत १९ सालमा ललितपुरबाट सुवर्णपुर जाने बाटो संखमुल बाग्मती पूल | १ |

विक्रम सम्वत १९ सालमा सिंहदरबारबाट बानेश्वर जाने धोबीखोलापुल १
विक्रम सम्वत १९ सालमा श्री पशुपतिनाथ जाने बाटोको धोबिखोलाको अघिको पूल जिर्ण हुदा देशी फलामको पूल १
विक्रम सम्वत १९ सालमा सुन्दरी घाटको देशितार पूल १
विक्रम सम्वत १९ सालमा फरपिङ जाने बाग्मतिमा देशि तारपुल १
विक्रम सम्वत १९ सालमा ५८ सालको बाढीले अघिको पूल बगाई लगे उपान्त देशि तारको पूल चोभारमा १
विक्रम सम्वत १९६४ सालमा नखुको काठको पूल ८८ सालको बाढीले बगाउँदा अनौठा मजबुति देशि फलामको पूल १

श्री ३ महाराज भीमशम्सेर जङ्गबहादुर राणाबाट बनाएका २ विक्रम सम्वत १९८७ सालमा त्रुटि विस्नुमतीको श्री स्वभाभगवति जाने पुल १
विक्रम सम्वत १९८८ सालमा बालाज्युबाट फुलिखेल जाने बाटोका श्री महादेव खोलापुल १

श्री ३ महाराज जुद्धशम्सेर जङ्गबाहादुर
राणाबाट बनाएका............२

विक्रम सम्बत १९९१ सालमा वनकाली जाने पुल १
विक्रम सम्बत १९९१ सालमा तेघुदोभानबाट चोभार जाने पूल १

## ॥ श्री टुडिखेल कान्तिपुर ॥

अघि टुडिखेल सानै थियो श्री ३ माहाराज रणउदिपसिंह राणाबाट हुकुम भै निजका भाई कम्याण्डर ईनचीफ श्री धीर शम्सेर जङ्गबाहादुर राणाबाट बिक्रम सम्वत १९३५ सालमा टुडिखेल बढाई बनाईबक्सी पल्टनको कवायट छाउनीमा हुनेमा टुडिखेलमा कवायेट गराईबक्सेका हुन् सो टुडिखेललाई चाहिने तोपखानाघर बन्दुक राखने टहरा मजबुतसंग बनाईदियो ॥ ॥

## ॥ श्री श्री छाउनी सीलखाना ॥

श्री कम्याण्डर ईनचीफ भीमसेनथापाले पल्टनको कवायेट गराउनाके विक्रम सम्वत १८६७ सालमा बालाबु भन्ने ठाउँमा छाउनी र बन्नी अस-

वावखानालाई शीलखाना भन्ने घर र काठमाडौं लगन टोलमा शीलखाना घर समेत बनाई अस्तबावखाना राखि दिए ॥ ॥

## ॥ ओं श्री नारायणहिटी माथिल्लो दरवार ॥

श्री ५ महाराज धिराज पृथ्वीवीर बिक्रम शाहदेवको राज गराउनलाई देशबाट नमुना तस्वीर भिकाई बडो मेहनत जबरजस्ती साथ श्री ३ महाराज रणउद्विपसिंह राणाबाट बिक्रम सम्बत १६ सालमा बनाईबक्सेको ॥ विक्रम सम्बत १९९० साल माघ बदि १० रोज २ मा ठूलो भूकम्प हुँदा केही भत्की बिग्रीयो ॥ ॥

## ॥ ओं श्री नारायणहिटी तल्लो दर्वार ॥

श्री ३ महाराज वीरशम्सेर जङ्गबाहादुर राणाबाट बिक्रम सम्बत १९ सालमा अँग्रेज अरू मुलुक २ का राजा रजौटाहरू आउँदा मुलाकत गर्नालाई समेत इज्जत थामने गरी देशबाट नमुना तस्वीर भिकाई अतिराम्रो जबरजस्तीसंग दरबार बनाईबक्सेको ॥ बिक्रम सम्बत १९८९ सालमा क्याम्प भित्र मुख्य बैठक सुरशम्सेरको भाग आगलागी भै बिग्री मैदान भै गयो ॥ बि० सं० १९९० साल माघ बदि ३०।२ का दिन ठूलो भूकम्प हुंदा धेरै भत्की बिग्री गयो ॥ ॥

## ॥ ओं थापाथली दरबार कान्तिपुर ॥

अघि यस ठाउँमा थुम्को मात्र थियो महाराज श्री ३ जङ्गबाहादुरबाट बिक्रम सम्बत सालमा सो थुम्को मैदान गरी आफुलाई अंग्रेज अरू राजा रजौटाहरू आउँदा ईज्जत साथ मुलाकात गर्न लायक गरी अति ठूलो धेरै चोक भएका दरबार बनाईबक्सेका हुन् पछि ४२ साल पर्वमा निजको छोराहरू बेपत्ता हुंदा १७ भाईलाई बाँडिदिए ॥ ॥

## ॥ ओं श्री सिंहदरवार कान्तिपुर ॥

अघि यस ठाउँमा पानिधिकी मोहर टक्सारलाई बुढानिलकण्ठवाट थापाथलि दरबारमा लगी राखेको पानिको राजकुलो थियो बिक्रम सम्बत १९५८ सालमा श्री ३ माहाराज चन्द्र शम्सेर जङ्गबाहादुर राणाको

उदय भएका बखत आफु राजगरी बस्नालाइ र पछि प्राईमिनिष्टर हुने पनि यसै दरवारमा बसाउने भनि बहुतै परिश्रम गरी सो राजकुलो मैदान गरी बिक्रम सम्बत १९५९ सालमा बहुतै राम्रो गरी काईदासाथ ९ चोक पुऱ्याई दरवार बनाई सिंह दरवार भनि नाउँ प्रख्यात गरी दिएका हुन् पछी प्राई-मिनिष्टर हुनेलाई यहि सिंहदरवारमा बसाउना खातिर श्री ५ महाराजा धिराजका हजुरमा बिन्त चढाई सिंहदरवार बनाउँदा लागेको खर्च जम्मै आफुले फिर्ता ली जो प्राईमिनिष्टर होला सो यही सिंहदरवारमा बस्नु भनि बन्दोबस्त मिलाई दिए ।। बिक्रम सम्बत १९९० साल माघ बदि ३० रोज २ का दिन ठूलो भुकम्प हुदा ठाउँ २ मा भत्की चिरा २ परी बिग्रेछ ।। श्री ३ महाराज जुद्ध शम्शेर जङ्गबहादुर राणाबाट ठाउँ ठाउँमा भत्की बिग्रेको तयार गरी बनाई झण्डा समाउने सिंह समेत सुन्को बनाई सिंहले झंडा समाई राखि दिए मुलढोका को दायाँ बायाँमा समेत सुन्को २ गजुर राखी बडो सोभाय-मान गरी बनाई दिएका हुन् ।। ।।

## ।। ओं श्री कोटघर सिसामहल कान्तिपुर ।।

पल्टनका बन्दुक नाल निसान राखनालाई कोट घर सिसा महल भन्ने बैठक बिक्रम सम्बत १८६७ सालमा श्री कमाण्डर ईनचीफ जनरल भीमसेनथापाले बनाएका हुन् बिक्रम सम्बत १९९० साल माघ बदि ३० रोज २ मा ठूलो भुकम्प हुदा ठाउँ-ठाउँमा चिरा परी भत्कन लाग्दा भर्ति-हरूलाई लगाई भत्काई दियो पछि जग देखि नयाँ श्री ३ महाराज जुद्धशम्शेर जङ्गबहादुर राणाबाट सिसामहल बनाई दिएका हुन् ।। ।।

## ।। ओं श्री ठूलो घण्टा भक्तपुर ।।

नेपाली सम्बत सालमा श्री राजा भुपेन्द्र मल्लले ओं श्री तुलजा भवानी प्रिति गरी अति परिश्रम कष्टबाट ढलान गरी चढायेका हुन् यो घण्ट-को शब्द अत्यन्त ठूलो राम्रो छ बिक्रम सम्बत १९९० साल माघ बदी ३० रोज २ का दिन ठूलो भुकम्प हुँदा पनि केहि भएन श्री तुलजा भवानी भक्त-पुरको बहुतै प्रख्यातका हुन् ।। ।।

## ॥ श्रों श्री किर्तिपुर सहर ॥

महेन्द्र दमनले बागमती थुनी राख्दा श्रों श्री पशुपतीनाथ मृतिकाले पुरि छोपी रहेको पछि श्रों श्री कृष्णका भक्तले बागमती खोलीदिए पछि यसै किर्तिपुर बनेका डाँडामा बस्ने नेमगोपाल—का गाइले नित्य गै दुध चुहाएको ठाउँमा खनी हेर्दा श्रों श्री पशुपतिनाथ प्रकट भयेको हुँदा पछि श्री राजा सदा शिव देवले त्यस डाँडामा सहर बनाई नाउँ के राख्ने भनी अन्दोल भै अघि भैगएका कुरा समझी नेमगोपालको गाइले ठूलो किर्ति गरेछ र यो सहरको नाउँ किर्तिपुर भनी नाउ प्रख्यात गरी दिएका हुन् कलिगत ३६८१ जादा बसाएको हो यस सहरको मुख्य पीठ ईन्द्रायनी यो पीठ देश देखी पश्चीममा छ ॥ मार्ग शुक्ल ८ मा यात्रा हुन्छ विक्रम सम्वत् १९९० साल माघ बदि ३० रोज २ का दिन ठूलो भुकम्प हुँदा यो किर्तिपुर शहरमा कसैको पनि १ झिंगती पनि खसेन भनी भन्दछन् जमीनमा किर्तिपुर सहर एउटै ढुङ्गा हुनाले कहीं केही भएन ॥ ॥

## ॥ श्रों श्री नन्दीकेश्वर नक्साल ॥

राजा वृषभ देवका पालामा अम्बरसिं बाँडाले विशालनगरमा बसी शिवमत खण्डन गरी धेरै अत्यचार गरेकाले श्रों श्री शंकराचार्य आई बौद्धमत खण्डन गरी बौद्धमार्गीहरू मारि दिएका रीसले श्री शंकर देवका पालामा १ हजार बाँडाहरू मिली ७०० ब्राह्मणहरू मारि दियो र तिनका ब्राम्हणी सातै सय सति बसि बाँडाहरूलाई श्राप दिई सहगामिनी भैसकेपछि ती सतिका श्रापले धेरै बाँडाहरू भस्म भै गए ती सती जाने ब्राम्हणी र ब्राम्हणहरू ब्रम्हपिशाच भै जागी श्रों श्री पशुपती जाने बाटो समेत बन्द भएकाले सो ब्रम्हपिसाच हटाई शान्ति गर्ना खातिर श्री राजा शंकर देवले विद्वान ब्राम्हणसंग सम्मत गरी कलिगत ३७०७ मा स्थापना गरेका हुन् यो शिवलिङ्ग स्थापना गरी सकेपछि ब्रम्हपिशाचहरू साम्य भये ॥ फेरि श्री ५ महाराज धिराज गिर्वाण युद्ध विक्रम शाहाका पालामा विक्रम सम्वत १८५७ सालमा ३ तले ठूलो देवालय बनाई चौघरा सतल समेत बनाई सदावर्ता दण्डीलाई धेरै खेत गुठी राखिदिए विक्रम सम्वत् १९९० साल माघ बदि

३० रोज २ का दिन ठूलो भुईंचालो हुदा जम्मै भत्की बिग्री मैदान भयो पछि श्री ३ महाराज जुद्धशम्सेर जङ्गबहादुर राणाबाट विक्रम सम्वत १९९५ सालमा तल्ला नउठाइ देवालय र चौघरा सतल बनाई दिएका थिए ॥ ॥

## ॥ ओं श्री नवसागर भगवती नक्साल ॥

अघि द्वापर शेष १०५०–१००० वर्ष भित्र राजा विक्रम केशरीका रानी नवसागर महारानीबाट राज चलाई रहेका बखत ओं श्री विश्वकर्माका अवतारी कालिगढले १ भगवतीको मूर्ति बनाई नीज माहारानीलाई चढायो र रानी खुसिमै आफ्ना नाउँ मा मिलाई विशाल नगरका मध्यमा स्थापना गरी नवसागर भगवती भनी नाउ प्रख्यात गरी दिएका हुन् ॥ पछि यी भगवती बहुतै उग्र हुँदा ती भगवतीलाई खादलमा राखी ढुङ्गाले छोपी श्री राजा शंकर देवले विक्रम सम्वत् ६६४ सालमा अर्को मुर्ति बनाई स्थापना गरी प्रेत चतुर्दशिका दिन रथारोहन गरी यात्रा स्मेत गरिदिए ॥ पछि नेपाली राजाले बनाई राखेको ३ तला देवल थिए १९९० साल माघ बदि ३० रोज २ मा ठूलो भुकम्प हुँदा माथिल्लो १ तला गजुर समेत छाना र तल्लोतलाका पश्चिम पट्टिको छाना भत्की गयो ॥ पछि १९९५ सालमा श्री ३ महाराज जुद्धशम्सेर जङ्गबहादुर राणाबाट बनाई दिएका हुन् ॥ ॥

## ॥ ओं श्री स्वभाभगवती कान्तिपुर ॥

अघि द्वापर शेष वर्ष १०५०–१००० भित्र राजा विक्रमकेशरी का रानी नवसागर रानीबाट राज चलाइरहेका बखत ओं श्री विश्वकर्माका अवतारी कालिगढ १ ले १ भगवतिको मूर्ति बनाई नोज महारानीलाई चढायो र श्री विष्णुमती र श्री भद्रमतिका संगममा स्थापना गरी सोभाभगवती भनी नाम प्रख्यात गरिदिए ॥ पछि यी भगवती बिग्रियो श्री राजा शंकर देवले ६६४ विक्रम सम्वतमा जिर्णोद्धार गरी बनाइदिए ॥ पछि विक्रम सम्वत् १८७२ सालमा घाट र पूर्व मोहडाको पाटि दुनियाले फेरि १८८२ सालमा चौघरा पाटी सतल दुनियाले बनाईदिए १९८४ सालमा सर्कारसंग ढुङ्गा मागी पुजाहारी सानु बज्राचार्यले घाट जिर्णोद्धार गरी फेरी १९८४ सालमा नै न्हौखाको गणेश श्रेष्ठले देवालय भोत्र देशि टाईल टॉसी बडो शोभा बढाइदए ॥

बिक्रम सम्बत् १९९० साल माघ बदि ३० रोज २ मा ठूलो भुकंप हुदा केही भएन १९९५ सालमा बिजुली समेत राखी दिएको थियो ॥ ॥

॥ श्रों श्री मदुसतल–मरुसत्तल–काठमाडौं–काष्ठमण्डपकान्तिपुर ॥

श्री राजा लक्ष्मी नृसिंहका पालामा श्रों श्री मत्स्येन्द्रनाथको लगन यात्रामा कोही एउटा बोसेतले हेर्न गएका थिए ती बोसेत ताँत्रिक मन्त्र जान्ने हुनाले कोको हेर्न श्राएको छ भनी विचार गर्दा कल्पवृक्ष नर रूप भैं हेर्न श्राएको देखी ती नररूप कल्प वृक्षलाई समाति कान्तिपुर ल्याई १ वृक्षको काठले ठूलो श्रग्लो सतल धर्मसाला बनाई बसाउन ईच्छाले सो कल्प वृक्षसंग विन्ति-भाव गरी सो कुरा पुऱ्याई दिउँला भन्ने वाचा गराई छाडि दियो र त्यसको ४ दिनका दिन ती कल्प वृक्ष ठूलो १ सालको वृक्ष भै बस्दा राजासँग बक्साई त्यस रूख काटी श्रसंख्य काठ पात जम्मागरी नेपाली सम्बत ७१५ सालमा मदुसतल नाम गरीदिए ई मदुसतल प्रतिस्ठा भएका दिन त्यो कल्पवृक्ष बिदा भै जाने बोलकबोल हुँदा ई मदुसतलको श्राज सम्म प्रतिष्ठा भएको छैन नून र तेलको एकै भाउ भएपछी प्रतिष्ठा गरूँला भनि श्रल्मल्याई ई सतलमा यो साल तेल महँगो नून सस्तो यो सालमा नून महंगो तेल सस्तो छ भनि सुनाउने रीत चलेको छ वि. सं. १९९० साल माघ बदि ३० रोज २ का दिन ठूलो भूकम्प हुदा ई मदुसतलको झिंगती १ टुका पनि केही भएन ॥ ॥

॥ श्रों श्री कान्तिपुर काठमाडौं सहर ॥

श्री राजा शंकर देवले शाक्ये सम्बत ५२७ सालमा वास्तु बिधि पूर्वक पूर्णाबती नाम गरी ३ वर्ष भित्र ५ हजार घरको सहर बसाए त्यस बखत इन्द्रचोकमा बाग्मती र बिष्णुमतिको संगम दोभान थियो सहर बनाएका केहि वर्ष पछि १०० धनु जति दोभान सरि जाँदा श्रों श्री श्वेतमत्स्येन्द्रनाथ स्थापना गरी रथयात्रा समेत बनाई नगरका शोभागरी श्राएका थिए ति शंकरदेवराजाका छोरा श्री राजा बर्धमानदेवले शाक्ये सम्बत् ५४२ सालमा दक्षिण तर्फ सहर बढाई ४००० घर बनाई जम्मा ९०००० घरको सहर बसाई गएकोर इनै राजा बर्धमानदेवका छोरा श्री राजा बलिदेवले ९ हजारको सहरमा दक्षीण तर्फ सहर बढाई राज्य भोग गरेका थिए इनै सूर्यवंशी राजा शंकरदेवका

८ पुस्ताका सन्तान श्री राजा गुणकामदेवले श्रों श्री माहालक्ष्मीको सेवा भक्ति गरी आएको हुंदा श्रों श्री माहालक्ष्मीदेवी प्रशन्न भै स्वप्नमा हे राजा तिमीले अघी परापूर्वमा नेमुनीले तपस्या गरेको स्थानमा वाग्मती र विष्णुमतीको संगम मध्य क्रान्तीश्वर विराजमान भएका स्थानमा श्री लोकेश्वर पनि स्थापीत भएको छन् ताहाँ ईन्द्रादी देवताहरू गुप्त रूपले नित्य आई अनेक पुराण कथा सुनी) जान्छन् त्यो उत्तम स्थानहो खड्गाकारले सहर बनाउ म पनि त्यस स्थानमा बस्दछुँ त्यस ठाउँमा नित्य लाखरूपैञाको चल्ति फिर्ति हुन्छ भन्ने वाणी भए बमोजिम कलिगत वर्ष ३८२५ मा अघी राजा शंकर देव वर्द्ध-मानदेव हरूले बनाई गएका सहरमा जोडी ईन्द्रचोक देखि नेमनारायण सम्म फेरि ६००० घर थपी खड्गका आकारले सहर बसाई १८ हजारको सहर बसाई देशरक्षा खातिर श्रों भद्रकाली श्रों कंकेश्वरी श्रों विजयेश्वरी अष्टमात्रीका पीठ करविर आदि श्मसानहरू बगाई कान्तिपुर भनि नाउ प्रख्यात गरी राज्यभोग गरेका हुन् ॥ विक्रम सम्वत १९९० साल माघ वदि ३० रोज २ का दिन टूलो भूकम्प उत्पात हुँदा सहरका दरवार समेत घेरै बिग्री भत्केको थिए त्यस पछि श्री ३ महाराज जुद्धशम्शेर जंगबहादुर राणाबाट मरूटोल गद्दिदरवार देखि टुँडिखेल सम्म सोझो अतिराम्रो सडक अद्वितिय देशि काईदाको सडक ९२ सालमा बनाई दिए ॥ विक्रम सम्वत १९९६ सालमा सोही जुद्धसडकबाट जुद्धशम्शेर माहाराजको तस्वीर देखि ईन्द्रचोक जानेसडक समेत बनाई चारैतर्फ सडक बिचमा तसबीर बनाई बहुतै राम्रो सडक भँडारखाल बगैचामा बिगारी बनाई दिएका थिए श्री ३ महाराज जुद्धशम्सेर जंगबहादुर राणाबाट ॥ ॥

## ॥ श्रों श्री ललितपट्टन सहर पाटन ॥

श्री राजा अंसुवर्माले देवपट्टनको दरवार छोडी कलिगत वर्ष ११२९ मा हाल लगनखेल भन्ने ठाउमा अघि सुवर्णखार भन्ने बन थियो ती सुवर्णखार बन फारी मतिनगर भनि नाउ राखी सहर बसाई राज्येभोग गरी आएका थिए फेरि पछि बल्खु नगर भन्ने २ बनाई जम्मा तीन नगरको राज्यभोग गरी आफै प्रयाग गै भैरव आवाहन गरी ल्याई

आफ्ना दरबारको बिचको चोकमा स्थापना गरी फेरी आफुलाई यमराजबाट आज्ञा भयेमुताविक मीननाथको मुर्ति बनाई मतिनगरका गुल्खुढोका समीपमा स्थापना गरी राजभोग गरी आएका थिए ईनै राजा अंशुवर्माको ५ पुस्ताका सन्तान श्री राजा बीरदेव देवपट्टनमा बसी राज्य गरेका बखत एक दिन कोही घाँसी कुष्ट भयाको ज्यापु १ आफ्ना दरबार सन्धि नित्य घास काटन आउने थियो घाँस काटन आउँदा सो बेलामा बहुत लक्षणले संयुक्त भै पूर्ण अति राम्रो भएको देख्यो र राजाका मनमा आश्चर्य मानी सोधन लाग्यो हे ज्यापु तेरो शरीर अस्ती सम्मत कुष्ट भयाको थियो आजत बहुत राम्रो भै सबै लक्षणले संयुक्त भै पुर्णभै रहेछ तिमीले केगरी शरीर निर्मल भयो भनि सोद्धा ज्यापुले बिन्तिगर्छन् हे माहाराज म हिजो दिउँसो बागमती पारीको ललितारण्य बनमा घाँस काटन जाँदा तापले प्यास लाग्यो र पानी खान भनि मेरो घाँस बोकनेनोल त्यहाँ भुमिमा गाडी पानि खोजन गए र १ ठाउँमा पानी उम्रीरहेको देखें त्यो ठाउँमागै जलपान गरी आङ्ग सवै धुंदा मेरो सरीर निर्मल भैगएका देख्यो र म आश्चर्य मानी नोल लिन्छु भनि जाँदा नोलपनि झिकन न हुने भैगयो भनी राजालाइ सुनाउदा राजाले हुकुम भयो हे ज्यापु तेरो जन्म धन्य हो त्यस तीर्थका जलले धोई तेरो शरीर शुद्ध भैगयो अब आजदेखि तेरो नाम ललित भयो सो तिर्थ देखाई देउ भन्दा ललितले हवस भनि तिर्थ र नोल सिद्ध भएका पनि देखाई दियो र राजाले यस तिर्थको नाउँ कसरी थाहापाउँ भनि ध्यानगरी बस्दा ई राजालाई स्वप्न भयो हे राजा यस तिर्थको नाउँ गौरिकुण्ड हो ई तिर्थको आग्नेय भाग ८ हात पर सर्वेश्वर शिवलिङ्गछ मेरो शिवलिङ्ग देखि २० हात उत्तरमा नागदह तिर्थछो ह गोठालाका नोल सिद्ध भएको मेरो कामेश्वरहो तिमीले त्यहि श्री यन्त्राकारले गरी ५ थुमका गरी ललितपट्टन नामराखि २४ टोल राखि सहर बसाई तिमी त्यहिं बस तिमीलाई मैले उद्धार गरूँला भनि स्वप्न भए मुताविक ई राजा बिरदेवले कलिगत वर्ष ३६०४ मा ब्राम्हण र बौद्धाचार्यहरू संग सम्मत गरी ललितारण्य वन फारी उत्तर शंखमुल देखि सहर बसाई त्याई मतिनगर सहरमा जोडी २४ टोल गरी २४ हजारको सहर बनाई ललितपट्टन भनि नाउँ प्रख्यात गरी आफू र परिवार सवै त्यहिं बसी सर्वेश्वरीको सेवा

गरी अन्त्यमा कैलाशबास प्राप्त भैगए ।। पछि श्यामसिंहदेवका पालामा नेपाली सम्बत ५२८ साल अधिक भाद्र पद शुक्ल १२ उत्तराषाढानक्षत्र सोमबारका दिन बडो उत्पात संकष्ट भूमिकंप भै देश भरको सबै साफ मैदान भैगयो र पाटनमा मतिकोनगर ईवलानगर ईगल त्यागल नगर मैदान भैगयो ।। यस सहरमा सर्वेश्वरको दक्षिण झटापोल टोलमा ललित ज्यापुको नोल सिद्ध भैगएको कामेश्वर रहनु भएकोले सहर भित्र कामदेव कहिं पनि स्थापना गर्न हुदैन ।। नेपाली सम्बत ८२१ सालमा योगनरेन्द्रका पालामा राजालाई थाहा नपाई दुष्टचित्त भएको भक्तपुरका राजा भूपेन्द्र मल्लले गुप्तीचालबाट सन्तान शून्य हुने क्रिया गरी दरबारका दक्षिण पट्टी ढुङ्गाको देवल बनाई भश्मेश्वर भनि नाउ राखि बलहरी सामुन्ने उत्तर दरबार पारी शिव स्थापना गरीदियो र योगनरेन्द्रमल्लका छोरा रिद्धिनरसिंह मल्ल बालापनैमा परलोक भैगयो योगनरेन्द्र मल्लका शेष पछि निजका छोरी योगमतिका छोरा लोकप्रकाश मल्ललाई भूपतेन्द्र मल्लले राज्याभिषेक दिए त्यस कारण भूपतेन्द्र मल्लको अधिन हुनाले पाटनको लक्षणहरू उल्टाई दियो ।। श्रो श्री कृष्णको मन्दीरको अगाडी सुनको ढोकामाथि १ तल्ला फाँट जम्मै कौसी थियो नैऋत्य कोणको बुर्जामा १ साघनी घण्ट थियो अनावृष्टि हुँदा सोही कौसीमा बसी पुरश्चरण गरी अहोरात्र पुऱ्याई सो साधनी घण्ट बजाई दिंदा वृष्टि हुने यस्ता कौसी थियो सो बिगार्ना खातिर दरबारमा रक्षागर्ने भनि भानपारी कौसी छोपी छाना लगाई धुरीमा पतित लोह राखि हनुमान स्थापना गरी घण्टामा गाह्रोले छोपीदि साघनी बिगाडी दिए घण्ट अद्यापी देखेकैछ फेरि घोल्को भन्ने ठाउमा १ उत्तर बाहिनी धारा दलहिटी भन्ने थियो र भर्नु नपर्ने जलधेनु १ थियो सो उत्तर बाहिनी धाराको पानी जुन जग्गामा दियो उस जग्गामा मल केहि राख्नु नपर्ने गरी सप्रो घेरै अन्न फल्ने र पाटन सहरको माझ माझैबाट उत्तर बाहिनी प्रभावती गङ्गा बगाई राखेको सो बिगार्नाखातिर देश फोहर भै विघ्न लाग्यो भनि भानपारी धाराका मुहानमा गै यन्त्र गाडी पाटन तिरको नाल बिगाडी भक्तपुर तिर नाल बनाइ लगी नपुखु भन्ने नागदह घापाखेल सम्म लगी त्यहि पोखरीमा डुल्याई राखेको हुनाले कमलको पात त्यस पोखरीमा बत्रो सफ को कहिछेन त्यो

पोखरीको कमलको पात २।३ हातको हुन्छ सो ढुङ्गाको धारा घोल्कापाटी पेटीमा राखिएको अद्यापी छँदैछ ॥ ॥ ॥

॥ भक्तपुर सहर ॥

श्री राजा जयदेवले ललित पट्टन कान्तिपुर २ सहरको राज्यभोग गरे पछी आनन्ददेवले अघी ग्राम भैरहेकोलाई साइत पारी श्रों श्री भैरवनाथ-लाई मध्यपारी कलिगत ४१९७ मा १२ टोलको १२ हजारको सहर बसाई देशरक्षा खातिर गणग्वरण देव देवीहरू स्थापना गरी देश बसाई बनेपा खट्पु पनौती साँगा धुलिखेल चौकोट नाला यति ७ गाउँ बसाइ आफुले राज्य चलाई बसेकाहुन् ॥ ॥

॥ फरपिङ् सहर ॥

श्री राजा भीमार्जुनलाई श्रों श्री गोपालेश्वर महादेवबाट स्वप्नमा आज्ञा-भए बमोजिम कलिगत ३८९८ मा सहर बनाई फरपिङ भनि नाउ प्रख्यात गरी दिएका हुन् ॥ ॥

॥ साँखु सहर ॥

श्री राजा शंकर देवले कलिगत ३९२५ मा संखको आकारले सहर बनाई संखपुर भनि नाउ राखि श्रों श्री बज्रयोगिनीलाई चढाई दिएका हुन् ॥ ॥

॥ ठवहील सहर ॥

श्री राजा गुणकामदेवले कलिगत ३८२७ मा ७०० घर बसाई ठवहील नाउँ प्रख्यात गरी दिएका हुन् ॥ ॥

॥ देउपाटन सहर ॥

श्री राजा शिवदेवले कलिगत ३४८९ मा ९ चोकको दरबार बनाई देश समेत बसाई देवपट्टन नाउ प्रख्यात गरी दिएका हुन् ॥ ॥

॥ पनौती सहर ॥

श्री राजा आनन्दे देवले कलिगत ४१९७ मा ७०० घरको सहर बसाई पनौती नाउँ प्रख्यात गरि दिएका हुन् ॥ ॥

## ॥ बनेपा सहर ॥

श्री राजा आनन्ददेवले कलिगत ४१९७ मा ७०० घरको सहर बसाई बनेपा नाउ प्रख्यात गरेका हुन् ॥ ॥

## ॥ चांगु सहर ॥

श्री राजा अमरमल्ललाई श्रीं श्री चागुनारायणबाट स्वप्नबाणी भए बमोजिम नेपाली सम्बत ६०४ सालमा ७०० घरको सहर बसाई दिएका हुन् ॥ ॥

## ॥ पुलचोक सहर ॥

श्री राजा बिरदेवले कलिगत ३९०८।९ मा पुलचोक भनि नाउ राखि सहर बसाई दिएका हुन् यस सहरको संस्कृत बाणीले दानापुर भन्दछ ॥ ॥

## ॥ ठिमि सहर ॥

भक्तपुरका राजा सुवर्णमल्लले नेपाली सम्बत् ६३३ सालमा ७००० को सहर बसाई ठिमी भन्ने नाउ प्रख्यात गरी दिएर यस देशमा मुख्य देवता श्रीं श्री बालकुमारी हुन् प्रतिवर्ष बैशाख २ गते खट यात्रा हुन्छ सो यात्रा अति राम्रोछ ॥ ॥

## ॥ नकदेश सहर ॥

भक्तपुरका राजा सुबर्णमल्लले नेपाली सम्बत ६३३ सालमा ५०० घरको सहर बसाई नकदेश भनि नाउ राखि प्रख्यात गरी दिए यश देशमा मुख्य देवता श्रीं श्री ईनाय गणेश हुन् प्रति वर्ष बैशाख २ गतेमा खट यात्रा हुन्छ ॥

## ॥ बोडे सहर ॥

भक्तपुरका राजा सुबर्णमल्ललाई श्रीं श्री महालक्ष्मी बाट मबसेको स्थानमा सहर बनाई मेरो नाटक प्रकट गर भनि स्वप्नबाणी भए बमोजिम नेपाली सम्बत् ६३३ सालमा ५०० घरको सहर बसाई श्रीं श्री महालक्ष्मीको नाटक बनाई बोडे नाउ राखि दिए यो नाटक अद्यापी चलेकैछ ॥ ॥

## ॥ पांगा सहर ॥

नेपाली सम्वत् ६२६।३० सालमा श्री राजा रत्नमल्लका पालामा भोटको कुंकुं नाम गरेका भोटे देवानले धेरै भोटेहरू साथली रात्री विषे चोरी लुट-पिट गरी दुनियाको बाली खाई ३।४ वर्ष सम्म दुःख दिएका हुनाले ती भोटेको लुटपीट बचाउनलाई चौकी खातिर ३०० घरको सहर बसाइ दिएका हुन् ।

## ॥ खोकना सहर ॥

श्री राजा अमरमल्ललाई श्रीं श्री रुद्रायणीबाट वनाई प्रकट गरी स्वप्न बाणी भएबमोजिम नेपाली सम्वत ६३३ सालमा ७०० घरको सहर बसाई ईश्वरीको मन्दिर खडा गरी तन्त्रोक्त विधिले श्रीं श्री रुद्रायणी गणबरण स्थापना गरी नाटक समेत वनाई प्रख्यात गरो दिएका हुन् ॥ ॥

## ॥ सुनागुठी सहर ॥

नेपाली सम्वत ६३३ सालमा श्री राजा रत्नमल्लका पालामा श्रीं श्री मृगीश्वरीको आज्ञा बमोजिम ३०० घरको सहर बसाई चैत्र सुदि १५ का दिन खटयात्रा र लिंङ्गो उभ्याउने समेत स्थिति बाँधि चलाई दिए ॥

## ॥ लेले सहर ॥

नेपाली सम्वत ६३३ सालमा श्री राजा रत्नमल्लले ३०० घरको सहर बसाई दिएका हुन् यस देशमा मुख्य देवता श्रीं श्री टीकाभैरव हुन् ।

## ॥ चापागाउँ सहर ॥

श्री राजा रत्नमल्लका १ छोरा बाबुले मुख हेर्न नहुने ग्रहगरी जन्मेकाले दरबारमा राखन नहुने हुँदा उमेर नपुगुन्ज्याल बाहिरै राखि पालीराखि उमेरदार भएपछि नेपाली सम्वत ६३२ सालमा बज्रवाराहीको समिपमा ७०० घरको सहर बनाई दरबार समेत बनाईदि ति राजकुमारलाई फालन पठाएको हुनाले नेवारी बोलिले वादेश भन्छ उनि राजकुमारका सन्तानहरू आज सम्म बाबु भन्ने थर ई सहरमा छँदैछ यस देशका मुख्य देवता श्रीं श्री वज्रवाराही र श्रीं श्री टीकाभैरव हुन् ॥ ॥

## ॥ बुग्मति सहर ॥

कलिगत ३६६४ मा श्री सूर्यवंशी राजा नरेन्द्रदेवलाई श्रो श्री मत्स्येन्द्रनाथबाट स्वप्न विषय कटुवाल दहको समिपमा सहर बसाई दक्षणायणीमा मलाई लगी त्यही राख भन्ने वाणी भए बमोजिम ७०० घरको सहर बनाई श्रों श्री मत्स्येन्द्रनाथपुर भनि सहरको नाउ राखि मन्दीर समेत बनाई दक्षणायणीमा श्रों श्री मत्स्येन्द्रनाथलाई यहीं लगी राख्ने र उत्तरायणीमा पाटन ल्याई राखने रीत चलाई दिएका हुन् ॥ ॥

## ॥ साना गाउँ सहर ॥

नेपाली सम्वत ६६३ सालमा श्री राजा रत्न मल्लको पालामा कुंकुं भन्ने भोटे देवानहरूको रखवार खातिर ५०० घरको सहर बसाई दिएका हुन्

## ॥ हरसिद्धि सहर ॥

नेपाली सम्वत ६०२ सालमा सूर्य्यवंशी राजा अमरमल्लले श्रों श्री हरसिद्धि देवी स्थापना गरी ७०० घरको सहर बनाई दिएका हुन् यो सहरमा मुख्य देवता हरसिद्धि देवी हुन् प्रतिवर्ष मार्ग सुदि १५ मा र फाल्गुण सुदि १५ मा नाच र यात्रा हुन्छ ॥

## ॥ ठेचो सहर ॥

नेपाली सम्वत सालमा श्री राजा का पालामा श्रों श्री नवदुर्गा बनाई ७०० घरको सहर बसाई प्रतिवर्ष नव दुर्गाको नाच पाटनमा दशैका टिकाको दिन ल्याई श्री मरिडछेको स्वेष्ट देवतालाई भैरव काली बाराही ई ३ जनाले फुलको माला लगाई पाटनको मुलचोकमा नाच नचाउने समेत रीत चलाएको आज सम्म चलेकैछ ॥ ॥

## ॥ थानकोट सहर ॥

श्री राजा अमरमल्लले नेपाली सम्वत ६०४ सालमा १२०० घरको सहर वसाएका हुन् यो सहरको मुख्य देवता श्रों श्री भैरव श्री महालक्ष्मी हुन् कार्तिक सुदि १५ का दिन यात्रा हुन्छ ॥

## ।। ठैव सहर ।।

नेपाली सम्वत ६२६।३० सालमा नेपाली राजा रत्नमल्लका पालामा कुंकुं नाम भोटे देवानहरूको रखबार निमीत्त ५०० घरको सहर बसाई दिएका हुन् ।। यो सहरको मुलदेवता हरसिद्धि हुन् ।।

## ।। सतुङ्गल सहर ।।

नेपाली राजा रत्नमल्लका पालामा नेपाली सम्वत ६२६।६३० सालमा कुंकुं नाम भोटे देवनहरूको रखवार निमित्त ३०० घरको सहर बनाई प्रजा बसाएका हुन् यो सहरको मुल देवता बैष्णवी हुन् ।। ।।

## ।। वलम्वु सहर ।।

श्री राजा रत्नामल्लका पालामा नेपाली सम्बत ६२६।३० सालमा कुंकुं नाम भोटे देवानहरूको रखवारी निमित्त ३०० घरको सहर बनाई प्रजा बसाएका हुन् यो सहरको मूल देवता बैष्णवी हुन् ।।

## ।। धर्मथली सहर ।।

श्री राजा रत्नमल्लका पालामा नेपाली सम्वत ६२६।३० सालमा कुंकुं नाम गरेका भोटे देवानहरूको रखवारी निमित्त १०० घरको सहर बनाई प्रजा बसाएको हुन् यो सहरको मुख्य देवता श्रीं श्री माहाकाली भैरव हुन् ।।

## ।। टोखा सहर ।।

श्री राजा रत्नमल्लका पालामा नेपाली सम्वत ६२६।३० सालमा कुंकुं नाम गरेका भोटे देवानहरूको रखवारी निमीत्त १०० घरको सहरको बनाई प्रजा वसाएका हुन् यो सहरको मुख्य देवता चण्डेश्वर हुन् ।। ।।

## ।। फुटगाउँ सहर ।।

श्री राजा अमर मल्ललाई श्रीं श्री मनमैजु देवीले मबसेको ठाउँमा सहर बसाई मेरो नाटक पनि प्रख्यात गर भन्ने स्वप्नबाणी भए बमोजिम नेपाली सम्वत ६०१ सालमा ३०० घरको सहर बसाई श्रीं श्री मनमैजु ईन्द्रायणीको नाटक बनाई श्रीं श्री मनमैजु पीठ समेत स्थापना गरी प्रजा बसाएका हुन् ई नाटक अद्यापि चलेकै छन् ।। ।।

## ॥ बुढानिलकण्ठ सहर ॥

श्री राजा विष्णुगुप्तलाई श्रो श्री जलशयन नारायणबाट स्वप्नवाणी भए बमोजिम विशाल नगर छदै द्वापरका अन्त्यमा ३०० घरको सहर बसाई दिएकाहुन् ॥ ॥

## ॥ गोकर्ण सहर ॥

यो सहर अघी द्वापरका अन्त्यमा नेपालमा राज्यगर्ने किराती राजाहरूके पालामा बनाएका हुनाले यो सहर बनाएको साल मिती कही वंशावलीमा लेखेका छैन किरातीहरूको राज्यस्थान यही सहरमा हो भनि वंशावलीमा लेखेको छ ॥ ॥

## ॥ लुभु सहर ॥

पाटनका राजा श्री हरीहरसिंहबाट आफ्ना सन्तानहरू स्थिरभै कल्याण हवस भनि नेपाली सम्वत् ७०६।७०७ सालमा ३०० घरको सहर बनाई प्रजा वसाई लुभु भनि नाउँ प्रख्यात् गरी तामापत्र बनाई श्रो श्री पशुतिनाथलाई चढाई दिएका हुन् केहि वर्ष पछी श्रो श्री महालक्ष्मीको पीठ आवाहन गरी स्थापना गरी बैशाख सुदि २ देखि १० सम्म यात्रा गर्ने रीत चलाई दिए ॥ ॥

## ॥ बुल्हु सहर ॥

पाटनका राजा श्री सिद्धिनरसिंहले नेपाली सम्बत ७३०।३५ सालमा सन्तानहरूको कल्याण हवस भनि ३०० घरको सहर बनाई प्रजा वसाई तामापत्र बनाई श्रो श्री पशुपतिनाथलाई चढाएका हुन् ॥ ॥

## ॥ श्रो गुह्येश्वरीबाट देउपाटन ॥

कलिगत १७९९ मा पहिले नृसिंह थाकुरले श्रो श्री गुह्येश्वरी प्रकाश गरी कुण्डको जल उत्तर बाहिणीबाट बाग्मतिमा आउने गरी बनाई दिएका थिए सो जिर्णभै बिग्रँदा नेपाली सम्बत ७७४ सालमा श्री राजा प्रतापमल्लबाट बहुतै राम्रो गरी ढुंगाले छापी बनाई दिए सो पनि ठाउ ठाउमा बिग्रँदा बिक्रम सम्बत १९०१ सालमा श्री ३ माहाराज जङ्गबहादुर राणाबाट अति रमणीय गरी ढुङ्गाले छापी घाट र पौवा समेत बनाई दिएका हुन्। ॥ यो

घाटमा आश्वीन सुदि १ देखि १० अर्थात् नवरात्री भर ठूलो मेला चल्छ ॥ बिक्रम सम्बत १९९३ सालमा बिजुली समेत राखिदिए ॥ ॥

## ॥ ओं श्री गौरीघाट देउपाटन ॥

आदि युगमा ओं श्री माहादेवबाट मृगस्थली बनविहार गर्न लागीरहेका बखत ओं श्री माहादेवको दर्शन गर्नानिमित्त ओं श्री पार्वती कैलाशबाट पाउलाग्नुभै बाग्मती कीनारका १ ढुँगामा बसी तपस्या गर्नु भएका ठाउँ हुंदा गौरीघाट भनि नाउ रह्यो श्री पार्वती तपगर्नालाई विराजमान भएको ढुँगा अद्यापी छदैछ सो ढुंगालाई आजकल गौरीदेवी भनी पुजा गरेकाछ यो गौरीघाटमा स्नान गरी ओं श्री किराटेश्वर माहादेव पुजा गर्नेलाई कैलाश पदवी प्राप्त होला भनि ओं श्री माहादेवबाट बरदान दिनु भएकोछ ॥ ॥ पछि नेपाली सम्बत ७७४ सालमा श्री राजा प्रतापमल्लबाट घाट बनाई राखेको ठाउँ ठाउँमा भत्की बिग्रँदा बिक्रम सम्बत १९ सालमा श्री ३ माहाराज जङ्गबहादुर राणाबाट मजबुत जग बसाई घाट र बज्र घर सतल र पुल समेत बनाई अत्यन्त राम्रो गरी दिए ॥ पछी सो पुल विग्रदा श्री ३ माहाराज चन्द्रशम्शेर जङ्गबहादुर राणाबाट बि० सं० १९ सालमा फलामको सतरी राखी जिर्णोद्धार गरी बनाई दिए ॥ बि० सं १९९५ सालमा श्री ३ माहाराज जुद्धशम्सेर जङ्गबाहादुर राणाबाट घाटमा बिजुली राखि दिए ॥ ॥

## ॥ ओं श्री आर्यघाट देउपाटन ॥

नेपाली सम्बत ७०५ सालमा श्री राजा लक्ष्मीनरसिंह मल्लले आफ्नै ज्यूले काम गरी आर्यको धनबाट बागमति देखि जग खडा गरी ल्याई ओं श्री पशुपतिनाथको चरणोदक बिरामी मानिस अन्त्यका बखत जलजोग राखदा सो चरणोदक सीरमा परी सकल पाप नष्टभै मुक्त हवस भन्ने मनसायले ब्रम्हनाल र घाट बनाई प्रतिष्ठा गरीदिए श्री राजा लक्ष्मी नरसिंहमल्लले आफैले आर्यको धनले बनाएको घाट हुंदा आर्यघाट भन्ने नाउँ रह्यो ॥ पछि नेपाली सम्बत् ८८८ सालमा श्री ५ महाराज धिराज पृथ्वी नारायण साहदेवको नेपालमा राज्य भए पछी सर्दार रामकृष्ण कवरबाट अघी राजा लक्ष्मीनरसिंह मल्लले बनाई राखेको घाट बाग्मतिले पुरी ठाउँ ठाउँ भत्कीरहेको हुनाले बडो दुःख

गरी धेरै धन खर्च गरी घाट बनाई ढुङ्गाले छापी अति रमणीय गरी बनाई दिएको थियो सो पनि बाग्मतिले पुरी ठाउँ ठाउँमा बिग्री भत्की रहेकाले श्री ३ माहाराज जङ्गबाहादुर राणाबाट बिक्रम सम्बत १९२० सालमा आफ्ना पुर्खा सर्दार रामकृष्ण कवर राणाबाट बनाई राखेको घाटलाई भत्काई बडो मजबुत तवरले घाट बनाई ढुङ्गाले छापी बिरामी राखनालाई घाटको दायाँ बायाँ २ पौवा पाटी समेत बनाई जिर्णोद्धार गरी दिए को थियो ॥ पछि बिक्रम सम्बत १९ सालमा श्री ३ माहाराज चन्द्र शम्सेर जङ्गबाहादुर राणाबाट माथिल्लो पौवा भत्काइ दर्बारी काईदाले बहुतै राम्रो पौवा बनाई सो पौवाहरूमा र दलानमा घाटमा समेत चन्द्रप्रकाश बिजुली राखिबक्सेकाले मानु स्वर्गनै होकी भने भैं सोभायमान भैरहेछ यो घाट जस्तो पुन्य भुमि अन्त छैन वि० सं० १९९५ सालमा घाटमा समेत बिजुली राखिबक्सीयो श्री ३ माहाराज जुद्ध शम्सेर जङ्गबाहादुर राणा बाट ॥ ॥

## ॥ ओं श्री राजराजेश्वरी देउपाटन ॥

यस ठाउँमा पुर्वजन्मको छायाँ देखिने ईनार थियो श्री राजा शंकरदेवले पछिका राजाहरूले आफ्नु छाँया बढिया नदेखि मनमा कष्टहोला भनि सो ईनार छोपी माथि बिराटेश्वर शिवलिङ्ग स्थापना गरी घाट समेत बनाई दिएका थिए त्यस पछि श्री राजा अंशुबर्माले ओं श्री जयवाग्यश्वरीको रहस्य मुर्ति स्थापना गरीसकेपछि ताहा बलिदान गर्न नहुने हुँदा जय वाग्यश्वरीको सट्टा बलिदान गर्नालाई नवदुर्गा रहस्य मुर्ति स्थापना गरी सकेपछी यस ठाउँको नाउ राजेश्वरी घाट भनि घाट समेत बनाई दिएका थिए ॥ बिक्रम सम्बत १९९० साल माघ वदि ३० रोज २ मा ठूलो भुकम्प हुंदा समेत ईनि परमेश्वरी को मन्दीर केहि भएन ॥ ॥

## ॥ ओं श्री शान्तिपुर कान्तिपुर ॥

सुर्यवंशी राजा वृषभदेवका ९ पुस्ताका सन्तान श्री राजा गुणकामदेवले राजकाजको केही विचार नगरी ज्यादा स्त्रीहरूमा रत भै मन्त्रीलाई राज्य छोडीरहेका पापले दुर्भिक्षभै दुनियाँले दुःख पाउदा स्वयम्भूमा बस्ने सामथि शान्तिकर बज्राचार्य छेउ शर्ण जाँदा सुभिक्ष गर्नाखातिर ती शान्तिकर बज्रा-

चार्यले स्वयम्भूमा बसी पुरश्चरण गरी अष्टनागहरू आवाहन गर्दा वासुकी लगायत सप्तनागहरू आयो र विरुप भै लज्जाले कर्कोटकनाग १ नआएकोले शान्तिकर बज्राचार्यले रिसाई मन्त्रयुक्त गरी दुवो समेतको कुण्ड पुष्पदि राजालाई भन्यो हजुर यो पुष्पली कर्कोटक नाग बसेको दहमा गै पानीमाथि फेकी दिनु र पानीले बाटो छाडीदिनेछन् त्यही बाटो गै नागलाई समाति ल्याउ भनि अह्राउदा राजा गुण कामदेवले लौ भनि सो मन्त्रयुक्त पुष्प ली तौदह-मा गै पानी माथि फ्याकी दियो र केहीबेर पछि पानीले बाटो छोडीदिदा सो बाटो गै कर्कोटक नागलाई समाति लछाडी ल्याउदा स्वयम्भूको उकालो आधा पुगेपछी ति कर्कोटक नाग अडी मलाई जोरीको मुख्यंजी ईजत नलि-देउ जो भनेको यहीबाट दिन्छु भनि भनेकोले ती नागलाई तेहीनै फलामको सिक्रिले बाधि राजा माथि गै शान्तिकर बज्राचार्य छेउ सो व्यहोरा वृतान्त गर्दा उसोभए ति नागको रगत मागील्याउ भनि अह्रायो र राजा गै कर्कोटक नाग संग रगत माग्यो नागले आफ्ना छातिबाट रक्त झिकी दि पठायो र अरू सप्तनागहरू संग पनि छातिको रगत मागी सो रगतले ति अष्ट-नागको मुर्ति र मन्त्र लेखि अनाबृष्टि भएमा यो पुस्तक पढे उप्रान्त वृष्टिभै सुभिक्ष होलाभनि वाचा गराई ती अष्टनागहरूलाई बिदा दि सके पछि स्वयम्भूका उत्तर भागमा पातालबिषे शान्तिपुर भन्ने बनाई प्रतिष्ठा गरी राजा फर्कि दरबार आयो र त्यस बखत ठुलो वृष्टिभै सुभिक्ष हुँदा प्रजापालन गरी आनन्द साथ ति राजा बसे ति शान्तिकर वज्रा-चार्य पनि सो पुस्तक ली शान्तिपुर प्रवेश गरी ध्यानागारमा बसी गुप्त भै रहेको अद्यापी सजिवै छ भनि भन्दछ ॥ विक्रम् सम्वत १९९० साल माघ बदि ३० रोज २ का दिन ठुलो भूकम्प हुदा शान्तिपुरको छाना छाना भत्की बिग्री गयो बि. सं. १९९५ सालमा शान्तिपुर वरीपरी बस्ने बज्राचार्यहरूलाई ज्यालादि बनाउन लगाए श्री ३ माहाराज जुद्ध शम्सेर जंगबहादुर राणाबाट ॥

## ॥ ओं श्री चावहील बौद्ध मन्दिर ॥

सुर्यबंशी राजा बृषभदेवले आफ्ना कुलमा चलिआएको शिवमार्ग मत छोडी बौद्धमतमा प्रबिक्त भैरहेका बखत स्वप्न विषय दर्शन दि म लोहशिला

समिप स्थानमा छुँ त्यस ठाउमा तलाउ छ सो तलाउ भित्र धनराखिएको छ सो झिकी चैत्यकार भित्र गर्भ राखि मन्दिर बनाउ भनि बाणी भएबमोजिम लोहशिला स्थापनको समिपको पोखरी सोहरदा असंख्य धन पाएकाले सो द्रव्य गर्भ राखि कलिगत २८१० मा बौद्धचैत्य र मञ्जुविहार भनि बाहाल बनाई ३०० घरको सहर समेत बनाई दिएका हुन् सो चैत्यलाइ धन्दोझ्यो भनि प्रख्यात गरे ॥ बिक्रम सम्बत १९९० साल माघ बदि ३० रोज २ मा ठूलो भूकम्प हुँदा केहि भएन ॥ ॥

## ॥ श्री मैतिदेवी डिल्लिबजार ॥

यस ठाउँमा श्रीं श्री ज्ञानेश्वर महादेवको तीर्थ मधुरतिर्थ छ परापुर्ब देखि भएको सो तिर्थको समीपमा ई ईश्वरी विराजमान भएका श्रीं श्री पन्च-कुमारी हुन् आदि सत्ययुगमै आई विराजमान भएको हुंदा ई ईश्वरी यो ठाउँमा बिराजमान भएको साल मिति कहि लेखेको छैन पछि श्री राजा प्रताप मल्लले नेपाली सम्बत सालमा देवालय बनाई नित्यार्चनलाई गुठी राखि दिएका थिए पछि हाल विक्रम सम्बत १९ सालमा श्री ३ महाराज चन्द्र शम्सेर जङ्गबाहादुर राणाबाट छानामा सुन छाई बनाई दिएकाले बहुतै सोभायमान भएका हुन् ॥ बिक्रम सम्बत १९९० साल माघ बदि ३० रोज २ का दिन ठूलो भूकम्प हुँदा केहि भएन ॥ ॥

## ॥ श्रीं श्री लोकनाथ चोभार ॥

कलिगत ३४०३ मा श्री राजा अंशवर्मालाई श्री धर्मराजबाट मलाई मूर्तिमा प्रकाश गर भन्ने स्वप्न भएबमोजिम बौद्धमत संग समती गरी धर्म-राजलाई आनन्दरूपी लोकेश्वरको मुर्ति बनाई चैत्र सुदि ८ का तिष्य नक्षत्रका दिन चोभारमा प्रतिष्ठा गरी बौद्धाचार्यबाट नित्यार्चन गराएका हुन् अद्यापी बर्षप्रति चैत्र शुक्ल ८ का दिन बर्षबन्धन बागमतिलाई प्रभावतिको संगममा ल्याई स्नान गराई मेला भर्ने रीत चलेकोछ बिक्रम सम्बत १९९० साल माघ बदि ३० रोज २ मा ठुलो भुकम्प हुँदा केहि भएन ॥ ॥

## ॥ बाडागाउ बौद्धचैत्य ॥

श्री राजा वृषदेवले कलिगत २८१५ मा गोदावरीका समिपमा पंचबौद्धका

मन्दिर बनाई ७ सय घरको सहर समेत बसाई वोडेगाउँ भनि नाउँ प्रख्यात गरी दिएका हुन् ।। विक्रम सम्मत १९९० साल माघ बदि ३० रोज २ का दिन ठूलो भूकम्प हुंदा केही भएन ।। ।।

## ।। ओं श्री मरुटोलमा वाडायात्रा काठमाडौं ।।

श्री राजा विक्रमसेनले दक्षिण देशबाट षटशास्त्री महेश्वर थाकुर झीकाई ईनको संमतीले कलिगत २९७३ मा बौद्धमार्गीले श्रावण शुदि प्रतिपदादेखि भाद्र बदि ३० तक बौद्धयात्रा र भाद्र बदि १३ का दिन अन्नदान गर्नु भन्ने स्थिति बाधी दिएका हुनाले सो भाद्र बदि १३ का दिन अन्नदान गर्नालाई मरूटोलमा काठको दलिन बनाई सो दवलीमा बसी अन्नदान गर्ने रीत चलेकोमा पछि वृषमदेवका पालामा गुठी राखि स्थिति बाँधी रीत समेत चलाई दिएका अद्यापि चलेकैछ यस टोलमा काठको दलिन हुंदा काठमाडौं भनि नाउँ प्रख्यात भए ।। अवउप्रान्त श्रावण शुदि प्रतिपदा देखि भाद्र बदि ३० तक बौद्धयात्रा र भाद्र बदि १३ का दिनमा मात्र चौघेरा काठवह्राई सोही काउमा बसाली बाँडाहरूलाई अन्नदान दिने रीत आजतक चलेकोछ ।। ।।

## ।। ओं श्री त्रिशुलयात्रा देउपाटन ।।

श्री राजा अमरमल्लले नेपाली सम्बत ६३४ सालमा ओं श्री वच्छला देवीका पुजाहारी मन्त्र सास्त्र प्रबल भएका मुनि बन्धु आचार्यसंग संमति गरी तन्त्रोक्त विधिले ९ प्रकारको रथ बनाई मुसल सृंषल त्रिशुल खड्ग पाशबलि छुरि हरू २ ईत्यादि संयुक्त गरी कुमार कुमारी ९ जनालाई रथमा चढाई शरीर छिन्न-भिन्न गरी प्रति वर्ष आषाढ कृष्ण ८ का दिन ईसानेश्वर प्रदक्षण गराई यात्रा गर्ने रीत चलाई धेरै खेत गुठी राखी दिएका हुन् ।। केहि वर्ष-पछि यो यात्रा चलाउने मुनि बन्धुदत्त आचार्य मन्त्र सास्त्रमा निपुण भएका हुनाले अमृत संजिविनी पाउना खातिर आफू १ कोठा भित्र गै मलाई ६ महिनासम्म यो कोठामा खोलि नहेर्नु भनी कोठा बन्द गरी भित्र बसी आशन बाधी शरीर मात्र त्यहाँ छोडी हंश अमृत संजीवनी खोजन गएका थिए केही महिना पछि कान्तिपुर सहर बासी कोही एक दुष्टले मुनि आचार्य मऱ्यो भनी झुठा बयान गरी दियो र खोली हेर्दा त्यही दिन मुनि बन्धु आचार्य अमृत

संजिविनी लिइ आउँदा बाटोमा कोही मानिससंग आफ्नु घरको हाल सोझदा मुनि बन्धु आचार्य मऱ्यो र अग्नि संस्कार गरी सक्यो भनी सुनाउँदा ती मुनि बन्धु आचार्य दिक्दार मानी फर्की अलप भैगयो तसर्थ सोहि त्रीसुल यात्रामा मारुत पुष्पको शरीर मृतक तुल्याई यात्रा गर्नेमा कान्तिपुर वासिहरूलाई गालि गर्ने रीत चलाएको छ अरूलाई गालि गर्दैन ॥ ॥

## ॥ ओं श्री तुनालदेवी हाडिगाउँ ॥

नेपाली सम्वत ७०६ सालमा श्री राजा शिवसिंह मल्लका पालमा हाडिगाउको वाराही देवी चोबाहारका नागले रुद्रमतिको बाटो लगाई ल्यायाको बाग्मतिमा अडकेपछि नन्दी ग्रामको रक्षक देवता हुदा देश रक्षा खातिर सहरका उत्तरमा रहेको वैष्णवी पीठ जगाई सुवर्णको मूर्ति बगाई प्रतिष्ठा गरी प्रतिवर्ष यात्रा गर्ने रीत चलाएका अद्यापि चलेकै छ यसलाई आजकल तुनालदेवी भन्छ नेवारी बोलिले तोरोड्यो भन्छ ॥ ॥

## ॥ ओं श्री जगन्नाथ मखनटोल काठमाडौं ॥

नेपाली राजा श्री भास्कर मल्ल परलोक भएपछि तिन्का रानीहरू ४ सती सहगामीनि भएका थिए आधा सरीर जलि सके पछि ज्येठी रानी चित्ताबाट उठी यिनी राजा सजीव छदै घेरै पंछी पाली बन्धन राखी मारेको पापले असंख्य प्वाँखले छोपी राख्तो हामी २ रानीले राजाको सरिरमा प्वाँख बराबर झिकी फाल्दैछु तैपनि उकासन सकेन हामी रानीहरू २ का सजिवमा अति कुकुर पियारो गरी कुकुर छोई हात नधोई सवै वस्तु छोएका पापले मुख सम्म सर्वजातको बिष्टाले भरेको नरकमा गाडी अलिकति चलने बित्तिकै कुकुरले तोक्याइ राख्यो तसर्थ हामीहरू उद्धार निमित्त एउटा ईश्वरको मन्दिर धर्मशाला बनाई देउ भनि फेरी घलि गएकाले नेपाली सम्वत ८१४ सालमा झगल ठाकुर भनि नाउ भएका भास्कर मल्ल र रानीहरू ४ उद्धारहोस भन्ने-खातिर निजको घनैबाट ओं श्री जगन्नाथका मन्दिर बनाई देशको जगन्नाथ बराबर गरी मुर्ति बनाई स्थापना गरी दिएका हुन् नित्यार्चनलाई गुठि समेत राखि दिए ॥ विक्रम सम्वत १९९० साल माघ बदि ३० रोज २ का दिन ठुलो भूकम्प हुँदा भत्की बिग्री मैदान भयो ॥ ॥

## ॥ ओं श्री अष्टमात्रीका पीठ भक्तपुर ॥

श्री राजा आनन्ददेवले बहुत ज्ञानी पुर्षार्थि हुनाले अषि ग्राम भैरद्देका भक्तपुरलाई कलिगत ४१६७ मा ठूलो सहर बनाईसकेपछी देशरक्षा खातिर देश बाहिर फेरामा पीठका देवीहरूको सुनको रहस्य मुर्ति बनाई प्रतिष्ठा गरी देशका टोल टोलमा सजिलो देवालय घर बनाई स्थापना गरी दिएका हुन्

### तपसील

### ॥ ओं श्री माहाकाली ॥

महाकाली थुमकोमापीठ ॥ भोलाछेटोलमा देवालय घरमा मुर्तिं ॥

### ॥ ओं श्री बाराही ॥

मङ्गलतिर्थ पारीमा पीठ ॥ तेखाचोटोलमा देवालमा देवालय घरमा मुर्त्ति ॥

### ॥ ओं श्री ब्रह्मायणी ॥

देशपुर्बमापीठ ॥ टौलाछेटोलमा देवालय घरमा मुर्ति ॥

### ॥ श्री ओं माहेश्वरी ॥

हनुमानघाट देखि पारी चौरमा पीठ ॥ ईनाचोटोलमा देवालय घरमा मुर्ति ॥

### ॥ ओं श्री बैष्णवी ॥

चुपिङ्गालमा योसिंखेलमा पीठ ॥ तिवकछेमा देवालय घरमा मुर्ति ॥

### ॥ ओं श्री कौमारी ॥

भौढोकामा पीठ ॥ क्वाछेटोलमा देवालय घरमा मुर्त्ति ॥

### ॥ ओं श्री ईन्द्रायनी ॥

खौमाढोका बाहिर पीठ ॥ खौमाटोलमा देवालय घरमा मुर्ति ॥

### ॥ ओं श्री माहालक्ष्मी ॥

ईनि देवीको खत बनाई बैशाख १ गतेमा प्रतिवर्ष यात्रा चलाउने स्मेत गरी रित चलाईदिए ॥ ॥

## ॥ श्रों श्री चण्डी भक्तपुर ॥

नेपाली सम्वत ४४४ सालमा सुर्य्यबंसी राजा हरिसिंह देवले श्रों श्री तुजला भवानी स्थापना गरी सकेपछि बडा दसैमा चण्डीमा गर्न पर्ने पुजा कर्म गर्नालाई तंत्रोक्त विधिले स्थापना गरि दिएका हुन् यी ईश्वरी बहुतै प्रत्यक्षका छन् ॥ ॥

## ॥ श्रों श्री धुमावती सुकुल्ढोका भक्तपुर ॥

ई ईश्वरी देशरक्षा खातिर श्री राजा आनन्ददेवले कलिगत ४१६७ मा तन्त्रोक्त विधिले स्थापना गरी दिएका हुन् ई ईश्वरी बहुतै उग्र छन् ईनिलाई आजकाल दुदुपोद्यो भन्दछन् ॥

## ॥ श्रों श्री भक्तपुर दरवार ॥

यो दरवार श्री सुर्यबंशी राजा रणजीत मल्लले धेरै घन खर्च गरी नेपाली सम्वत ७६०-७१३ मा अतिराम्रो गरी बहुतै कालिगढ लगाई ५२ झ्याल राखि रामायणलिला बुट्टा भराई दरवार बैठक बनाएको छ केहीकालपछि मुलचोक जाने बाहिर मोहडा ढोकामा सुनले छाई सुनको ढोका भनि नाउँ प्रख्यात गरी दिएका हुन् यो दर्वारको झ्याल नेपाल भरमा कहिंछैन भनि तारिफ गर्छ बिक्रम सम्बत १६६० साल माघ बदि ३० रोज २ मा ठूलो भूकम्प हुँदा भत्की बिग्री मैदान भैगये ॥ ॥

## ॥ श्रों श्री शंकेश्वरी माहादेव ४ ढुङ्गे नक्साल ॥

श्रों श्री स्वामी शंकराचार्यले नेपालमा आई अम्बरसिंह बाँडालाई मारी बौद्धमा बिध्वंस गरी १००० बौद्धमतिलाई मारी श्रों श्री बज्रयोगीनीको पुजाहारी मार्छु भनि जाँदा बज्रयोगीनीले बुझाई फकाएपछि श्रों श्री पशुपतिनाथमा गै धेरै मानिस मारे सो पाप कसोगरी के गरी नासहोला भनि श्रों श्री पशुपतिनाथ संग बिन्तीचढाउँदा श्रों श्री पशुपतिनाथबाट आज्ञा भयो तेरो १६ अंशमा १ अंश राखि तेरो नामले बिशालनगरमा शिवलिंग स्थापना गर्नु र मेरो दर्शन गरी जो मानिस सो बाटोबाट फर्की ती शिवलिंगलाई दाहिने पारी त्यसको पुण्य सोही सिवलिङ्गमा प्राप्त हुँदै गै तेरो पाप नष्टहोला

भनि आज्ञा भएको हुनाले सो बमोजिम नक्साल पशुपति जाने बाटोमा आफ्ना नामले श्री शिवलिङ्ग स्थापना गरी जानु भएकोले त्यसको नाउँ शंकेश्वर प्रख्यात भए ॥

॥ श्री श्री पाटन दरवार ॥

श्री सुर्यवंशी राजा सिद्धिनरसिंह मल्लले नेपाली सम्वत ७४८ सालमा वास्तुविधिपूर्वक आफू राजा हुनलाई ठूलो दरबार बनाई सुनको ढोका बनाई सोभायमान गरी साहेपालीचोक भनि नाउँ राखि आफु बिराजमान गरे ॥ सोही राजाले नेपाली सम्वत ७६७ सालमा तुशालचोक दरवार बनाई सोही चोकमा बडो लक्षणसाथ अनेक देवहरू ठाउँ ठाउँमा बिराजमान गराई धेरै धन खर्च गरी बनाई ढोकाको दाजा बाजा गणेश नरसिंह हनुमान स्थापना गरी रक्षा र सोभा गरी दिएका हुन् ॥



# उपोद्घात

ई कान्तिपुर पुरका पनि कोशभर्मा ;
प्रख्यात् ललितपुर भनी कहिन्या सहर्मा ।
मत्स्येन्द्रनाथ भनि प्रसिद्ध अति भयेका ;
एक देवता अतिठुला तहिँ छन् रहेका ॥
जसलाई बौद्धमतका जन बुद्ध भन्दछन् ;
विज्ञानि-पण्डितहरू जति सूर्य मान्छन्;
यो लोक पाल्नकन हो अवतार्लियेको ;
श्री लोकपाल इनि हुन् जनले कहेको ॥
जैन् मत् लिन्या पनि सबै जिनलाई मानी;
पूजन् गरे सब मिलीकन सत्यजानी ।
जो दक्षिणायन भये पछि बुग्मतीमा ;
फेर् उत्तरायण भयेपछि पाटनैमा ॥
यात्रा गरी रथ चढ़ी इनि जाइजान्छन् ;
तस्कालमा नुन न खानु भनी कहन्छन् ।
यै रित् छ वर्षदिनमा इनको सदाकाल् ;
संक्षेपले गरी म लेख्तछु आज यो हाल् ॥
चक्रपाणि-चालीसे ।

—: ❀ :—

वितरतु शिवं जगद्धात्री

# श्रीमछिन्द्रनाथको कथा

लोकेश–विष्णु-हरले अति सेवियाकी;
विद्वान्–महर्षिहरुका मनमा रहेकी।
कालीजिका चरणमा म परी रहन्छु;
नेपालको अति पुरानु कथा कहन्छु ॥

गोरखनाथजिका इ सिद्ध गुरु हुन् नेपालका बीचमहाँ;
क्यै कारण परि आउँदा हुनगया यो येति लेख्छु यहाँ।
तिन् हज्जार् छसये छहत्तर (३६७६) वरष् बित्ता कलियूगमा;
प्रादुर्भाव भये मछिन्द्र[1] प्रभुजी नेपाल् ललित्पूरमा ॥

एक्दिन् गोरखनाथजी लहडले नेपालमण्डलमहाँ;
आया छन् अति-वृद्ध भिक्षु-रुपले भिखमागि जाहां तहाँ ॥
भिक्षा काहिं मिलेन कोइ जनले दीयेनछन् क्यै पनि;
तिन्का भोक उठेछ तेस् समयमा क्या मूर्ख चाला भनी ॥

---

१ कथाका अनुक्रमले इनको शुद्ध नाम "श्री मत्स्येन्द्रनाथ" हुनू पर्छ परन्तु आजकल प्रायः यहीं नामको प्रचार छ।

इन्को दण्ड म केही गर्छु, अहिले मन्त्या इरादा धरी;
नेपाल्का सब नागलाइ रिसले बाँधी लिया तेस्परी।
जम्मापारि मृगस्थली बिचमहाँ नाग्माथि आसन् गरी;
क्यै दिन् ताँहि बिताउँदाकन भया क्रोधका बसमा परी॥
जुन् दिन् नाग्हरु बाँधिया उहि दिनै देखी बहुत् दिन् तहाँ;
बृष्टी बन्द भई परेछ अनिकाल् नेपाल देशमहाँ।
हाहाकार परी दुखी हुनगयो सारा दुनीयाँ सबै;
राजा मन्त्रि बसी विचारगरिलिया लागेन पत्ता कसैट्॥
तान्त्रिक्, पण्डित, ज्योतिषी र अगिका बूढा र धामीहरू;
ज्ञानी, सिद्ध, तपस्वि, अक्कलि र फेर बान्या बतीसन् अरू।
सब् जम्मागरि येहि साधनि गऱ्या केहो सनीचल् भयो ?;
एक बुँद् पानी परेन अाब दुनिञा मर्ने दशामैगयो॥
यस्तो बात नरेन्द्रदेवनृपको सुनी लियाप्या सबै;
कोई बाट मिलेन उत्तर कुनै खल्बल् पऱ्यो चुप् तबै।
यो कारणकन बुझ्नलाई नृपती खान् पिन् र निद्रा सबै;
छोडी रात्दिन् घुम्दथे मनमहाँ संताप् अती ली तबै॥
घुम्दा एक्दिन कान्तिपुर्नगरमा घुम्दा भए रात्महाँ;
ताहीं ती नृपती सहरबिच कुनै एक सिद्धको पर्महाँ।
बन्धुक् दत्त अचार नाम बसको प्रख्यात् छ लोक्मा पनि;
पैल्हे शैव थिए पछी हुनगये बौद्धमार्गवाला तिनी॥
स्त्रीका साथमहाँ बसी यति कुरा गर्दा भवे तेस्परी;
गोरखनाथजिलाइ भीख न दिदा तिन्का रिसैले गरी।
बाँधीया सबनाग् मृगस्थलिमहाँ सान्ने अनिकाल् भयो;
तिन्लाई यदि को उठाउँछ भने यो कष्ट सब्को गयो॥
राजा येति सुनेर खुशिमनले भाग्गार्डे फर्की गया;
भोलीपल्ट ति बन्धुलाई चिठी एक् भेजेर डाकीलिया।
आए बन्धुक बब एकान्तबिचमा राखेर सोधा भवे;
यो हाल् सब् बुझि मन्त्रिवर्ग प्रति सब् प्रख्यात् गराई दिबे॥

थापी लगन् ठीक् ठहराई यो बात्; भन्दामये बन्धुक भूपका साथ् ।
गोरखजि आयेर मृगस्थलीमा; नागासनै बाँधि बसे रिसैमा ॥
बन्दै भयो वृष्टि पनि महाराज; कष्ट भयो सब् दुनिआकनै आज ।
इन्का गुरू कामरूपीठमाहाँ; मत्स्येन्द्रनाथछन् तिनलाइ आहा ॥
तिन्लाइ कैल्याइ दिन्या भयेता; हून्याछ बर्षा यति काम् गरेता ।
मत्स्येन्द्रनाथ्लाइ प्रणाम गर्न; पाऊमहाँ शीर झुकाइ धर्न ॥
उठ्नन् जसै नागहरु, फुत्किजानन्; साह्रा दुनिआ सुख पाँउन्या छन् ।
यती भनी बन्धुक चुप् भया जब्; आश्चर्य भै भूपति भन्दछन् तब् ॥

भनन भनने बन्धुक् ! कौन हुन् ई कसोरी;
जनम पनि लियाछन् मर्त्यलोकमा यसोरी ? ॥
यति सुनि नृपका बात् भन्दछन् बन्धु फेरी;
अघिसरि सब भार्दाहेरुका तर्फ हेरी ॥
अमृत मथिलिया जब् देवता–दानवैले;
गडबड परिगो तब् बाड्नका निम्ति पैले ।
उस वखत हरीले मोहिनीरुप् लियामा;
दरशनगरुँ भन्दा शम्भु मोहित् भयामा ॥
जमिनबिच बहूतै वीर्य त्याग् गर्दिया छन्;
असल असल सुन्का खानि पैदा भया छन् ।
रतिमजिल न पुग्दा वीर्य गीर्दै रह्याको;
विफल पनि न होओस् शम्भुले छोडियाको ॥
मन मन यहि ठानी विष्णुले हात थापी;
ग्रहणगरि लिनूभो बाँकि केही न राखी ।
शिवजिकन म पुत्रै पाउँ भन्न्या मनैले;
तप गरिकन बस्थिन् दिन्दिनै अञ्जनीले ॥
तिनि उपर कृपा भै केसरीनाम वानर्;
उहिवखत नगिच्मा डाकि, भन्छन्, सरासर् ।
लगिकन शिव–वीर्यै पत्निका गर्भमाहाँ;
खुसिसँग तिमीले गै राखियौ जल्दि ताहाँ ॥

यति भनिकन वायु डाकि हे वायु ! तिम्ले;
जतनगरि ठगान्मा राखियो खुसि मन्ले ।
यति भनि मथि वीर्य केसरीलाई दीया;
खुसि भइ कपिराज्ले हातमा थापि लीया ॥
लगिकन निजपत्नी अञ्जनीका त कान्मा ।
खुसिसँग जब राख्या वायुले फेर् ठगान्मा;
उहि बखत पुग्याया, गर्भ भो अञ्जनीको;
गरभ बिच बढूतै वर्ष त्यो वीर्य ल्हेगो ॥
तेसबाट जन्म हुनगो हनुमानजीको;
इच्छा पुरा हुनगयो तिनि अञ्जनीको ।
बाबू भया तिन् हरि, वायु, बानर;
तीनै जनाका हनुमान् बराबर ॥
सङ् नै नभैकन जनम् हुनगो जसैता;
बाल् ब्रह्मचारि हनुमान भया तसैता ।
राम् भक्त भै अफ़तलक् तिन लोकमाहीं;
फैलिन्छ कीर्ति जसको कति लेख्नु आहीं ॥
जो बाँकि वीर्य शिवको, करमा रह्याको;
श्री विष्णुले नदिविषे लगि धोइयाको ।
एक् मत्स्यले उही बखत् जब खाइ हाल्यो,
एक् माझि ताँहि गई जाल फुकाइ फाल्यो ॥
तेस जालमा परिगयो जब मत्स्य ताहीं;
पक्डीलिएर गइ कामरुपीठ माहीं ।
सौगात् गराइ नृपलाई चढाइदीयो;
जुन् मत्स्यका उदरमा उहि वीर्य थीयो ॥
जुन् रानी हुन नृपतिकी तिनले त खाइन्;
गर्भै रहेर पछि पुत्र समेत पाइन् ।
यै हेतु पुत्रकन नाम् पनि राखिदीया;
मत्स्येन्द्रनाथ भनि, प्रसिद्ध गराइलीया ॥

उत्तर्फ फेर्हेरिजिका पनि हातमाहाँ;
निखने वीर्य शिवको जब केहि ताहाँ
गोबर् लिइकन त धोइ दिया जसैता;
उत्पत्ति गोरखजिको भइगो तसैता ॥

दाज्यू गुरू पनि त गोरखका इनै हुन्;
प्रख्यात् मछिन्द्र भनि कामरुपीठमा जुन् ।
येति कथा नृपतिलाई सुनाइ बन्धक;
चुप् भैगया सकललाइ बिचार् पऱ्यो खुप् ॥

सोधीलिया नृपतिले गरिलीनु पऱ्यो;
जुन् हो उपाय भन लौ सब कष्ट टऱ्यो ।
यस्तो हुकुम् नृपतिको भइगो जसैता;
भन्छन् ति बन्धुक इ बात् खुसि भै तसैता ॥

हे राजन् ! मनमा न गर्नु रतिभर् शोक यो, म छू सब कुरा;
गऱ्याछू सबको भलाई मैले बाँकी न राखी पुरा ।
यस्मा कोइ सहाय लीकन गई मत्स्येन्द्रनाथ् ल्याउँला;
गोरख् नाथ् उठनन् र नाग फुकनन् ता पानि बर्षाउँला ॥
कर्कोट् नाग र फेर् ललीतपुरको ज्यापु ललीते समेत्;
आवाहन् गरि ल्याइ त्यै विचमहाँ सब् यो बतायेर भेद् ।

योगीरूप नरेन्द्रदेव, ललिते, बन्धुक् र कर्कोट् बनी;
निस्क्या चारजना मिलेर निशिमा भाद्गाउँदेखी पनि
जल्दी गैकन कामरूपिठमहाँ मत्स्येन्द्रका बाबुका;
पेट्मा गैकन नाग् प्रवेश् गरिदियो सल्लाहले बन्धुका
शूल् भो कामरुपीठका नृपतिका पेट्मा बहुतै गरी;
आराम् केहि भएन, औषधि अनेक् गर्दा पनी तेस्घरी ॥

धामी, वैद्य र ज्यौतिषीहरु र फेर् तान्त्रिक् र सिद्धै अनी
झार्फूके र टुनामुनाहरु अनेक पूजा र पाठ्ले पनि ।

क्यै पत्ता नहुँदा निराश हुन गई बस्थ्या ति राजा तहाँ;
तिन् जाना परदेशि झट् पुगिगया दर्वारका बिच्महाँ ।।
राजाले पनि औषधी इनिहरू गर्लान् अवश्यै भनी;
बोलाएर नगीचमा लगिकनै भन्दाभये यो पनि ।
हे परदेशिमनुष्य हो !!! सुन सबै यो रोग् छुटायौ भन्या;
जो माग्छौ उ दिन्या छु सत्य बुझिलयौ; यो छैन झूटो हुन्या ।।
बाचाबन्धन भूपको जब भयो झार्फूक् गर्‍या दूइले;
बन्धुकले पनि औषधी गरि दिया छोडिदियो नागले
आराम् भो नृपको शरीर् उहिबखत् उत्सव् बहूतै भयो;
यो सुन्दा दुनियाइरूकन पनी आनन्द खुप् भैगयो ।।

राजा अती खुसि भई तिनिहेरुलाई; के माग्दछौ भनन हे ! परदेशिमाई ?
यो मर्जि पाइ नृपको सबसामुजाई; माग्या, "मछिन्द्र" कन बक्सनु हामिलाई
यो बात् सुनी नृपतिलाई त हर्ष-शोक; पर्दो भयो, अलि अली उठिगो त झोक ।
क्यारुन् अघी न बुझि येहि करार गर्दा; साऱ्है कठिन् हुनगयो सुत दीनु पर्दा ।।
लैजाउ पुत्र, भनि येहि हुकुम दीया; चार् आझि खुस् भइ मछिन्द्रजिलाई लीया
एकान्तमा लगिकनै सब भेद खोल्या; मत्स्येन्द्रले सकल भेद् बुझि चल्दि बोल्या ।।
लौ हुन्छ जान्छु तर यो रुपले म जान्न; शोक् गर्दछिन् जननि, मुस्किलपो छ मान्न ।
यो देह छोडि भुमरो भइ गुप्त ताहाँ; जान्याछु हे नरपते ! नयपालमाहा ।।
यस् रीत का वचन मत्स्यजिका सुनेर; नेपाल फर्कि कटुवालदहमा गयेर ।
यौटा सुवर्णकलसै तहि छोडि दीया; आफ्नू किनारविच आसन बाँधि लीया ।।
दिग्बन्धनै गरि ति बन्धुक भूपलाई; भन्छन् रुमाल दिइ, एक् यति बात् जनाई ।
जप् गर्दछू म नृपते !, जब यो कलस्मा; पस्ला भ्रमर्नभुलि ढाकनु त्यै बखतमा ।।
येती भयेन त भन्या प्रभु उर्मूकि जानन्; हाम्रो परिश्रम निरर्थ हुन्या छ राजन् !

होस् राख्नु होस्भनि ति जप्कन गर्न थाल्या;
मत्स्येन्द्रनाथ भ्रमररूप् गरि आई हाल्या ।।
तेस्कालमा नृपतिलाई परे छ निद्रा;
होस् बयै भयेन बहुतै परिगो र तन्द्रा

काम् बिग्रला भनि ति बन्धुकले उठाई;
एक् लात मारि दिएछन् जब भूपलाई ।।
न्यूँ मन्या नजर् सब तरफ्कन क्यै फिराई;
उम्क्या भ्रमररुप मछिन्द्रजि ताँहि आई ।
यस्तै गरी दुई पटक् बितिगो जसैता,
तेस्रा पटक् भ्रमर पक्डिलिया तसैता ।।
सुन्का कलस् भितर छोपिदिया रुमाल्ले;
भूप्ले ति बन्धुक तपस्विजिका प्रभाव्ले ।
तेही कलस् लिई ति बन्धुक, भूप्, ललीते;
फर्क्या ललित्पुर तरफ् बहुतै खुशीले ।।
विश्राम् गराई दुइचार्दिन बुग्मतीमा;
त्या या जसै सब मिलेर ललित् पुरीमा
कर्कोट् अलप् भई गयो ललिते र बन्धुक्;
भूप्हेरुको परिगयो झगडा तहीं खुप् ।।
बोल्यो ललीतपुरको ललिते म जाही;
राख्छु प्रभूकन लियेर न जाउँ काही ।
भन्छन् ति बन्धुक पनी नकराउ जाहाँ;
लैजान्छु कान्तिपुर तर्फ म बस्छु जाहाँ ।।
भन्छन् नरेन्द्र नृपती पनि भादगाऊँ;
लैजान्छु राख्न प्रभुलाई उही छ ठाउँ ।
यस्तो पऱ्यो बहुत गड्बड जब् तिन्हेर्को;
यौटा बुढो तहिं खडा भइ भन्छ आर्को ।।
हे भाई ! गड्बड तिमीहरु क्यान गर्छौ;
व्यर्थै बिरोधकन गर्न अगाडि सर्छौ;
यौटा उपाय भनि दिन्छु तिम्हेरुलाई;
बुझन्या छ चित्त सबको गरिलेउ जाई ।।
जुन् ठाउँमा सहज ओखल सात गड्नन्;
मत्स्येन्द्रनाथकन राख्नु उहीं रहन्छन् ।।

भन्दा बुझ्यो सकलका पनि चित्त ताहाँ
आफ् आफना सहर ओखल गाड्नमहाँ ॥
माइगाउमा गयर ओखलगाड्न लाग्या ;
यौटा गडेन जब कान्तिपुरै फिराया ॥
ताहाँ पनी रति गडेन र हारमानो;
फर्क्या ललित्पुर तरफ् यहिसत्य जानी ॥
लगन्खेल् भन्याका जगाबीचमाहाँ ;
गडाई दिया एक ओखल् र ताहाँ ।
गडीगो जसै येहि रित सात ओखल्
गड्या एक् जगामा हरायो सबै फल् ॥
तसै ठाउँमा मङ्गलै घेगराई ;
सबैले मिली एक चौका बनाई ।
प्रजाहेरु साहा तहाँ दौडि आई ;
जमा भै गया वेर केही न लाई ॥
सात् ओखलै अझ तलक् तहि छन् रहेका ;
सात् ओखले भनि सबै जनले कहेका ।
एक् धातुको असल मूर्ति बनाउ तेस्मा ;
साल्या कलस् भइगयो सइकाल वेशमा ॥
वैशाखमा पशुपति प्रभुलाई जाई ।
श्रीआर्यघाट बिचका जलले नुहाई ।
यद्री लगाउनु र कष्ट छुटेर जानन् ;
साहा प्रजाहरु पनी सुख पाउन्या छन् ॥
भन्या मछिन्द्रप्रभुको पनि मर्जि पाई ;
त्यै रित् गऱ्या नृपतिले पशुनाथलाई ।
यै कालमा पनि ति गोरखनाथजीले ;
दर्शन् गरूँ गुरुजीको भनि ठानि मन्ले ॥
नागासनेकन त छाडि दिई अलप् भै ;
पाटन् तरफ् हिंडि मछिन्द्रजिका नजिक्गै ।

## मछिन्द्रनाथको कथा ।

नम्र भई गरि प्रणाम फिरेर फेरी ;
आया मृगस्थलिमहाँ न गरेर देरी ।।
उस्तर्फ नाग् फुकिगया सहकाल भैगो ;
पानी पऱ्यो मुलुक भर अनिकाल गैगो ।
येती गरीकन त मन्दिर एक् बनाई ;
राख्या मछिन्द्रप्रभुलाई खुसी गराई ।।
बन्धुकआचार्य दुइमार्ग लिन्या हुनाले ;
द्वैत्मार्ग नै चलिरहोस् भनि यै हिसावले ।
राख्या मछिन्द्रकन पुज्न पुजारि बाँडा ;
राखीदिया नृपतिले सुनका त भाँडा ।।
ई देव हुन् मुलुकभर् सहकाल गर्न्या ;
सब् लोकका उदरलाइ त पूर्ण गर्न्या ।
यात्रा चलोस् अब ललित्पुर-बुग्मतीमा ;
कैल्हे पनी अब न होस् अनिकालदेश्मा ।।
यै हेतु गुठ्हरु पनी नृपले त राख्या;
नेपालमा प्रभु मछिन्द्रजिलाइ थाप्या ।
यात्रा गराइ रथका बिचमा बसाइ;
उत्सव् ठुलो गरि ललित्पुरभर् घुमाई ।।
यैती भये पछि ति बन्धुक भूपलाई ;
भन्छन् इ बात कर जोरि नगीच आई ।
राजन् ! हजूरकन लात दिञा मञीले ;
माफहोस् रिसानि, अपराध गरिस् तञीले ।।
भन्न्या न होस्, म अपराधिहुँ आज खासा;
यो दण्ड पाउँ भनि लाग्दछ एहि आशा ।
राजाकनै जउनले अपमान गर्छ;
ज्यान् सम्मका फजितिमा उ अवश्य पर्छ ।।
काटी दिनोस् मकन योग्य सजाञि यै हो;
सब् धर्मशास्त्रहरुमा कहिन्या पनि हो ।

बन्धूकका यति वचन् सुनि भूप मन्दछन्;
उस्कालको सकल दोष् सब तुच्छ गन्छन् ॥
कत्रा पराक्रम गरी अनिकाल् छुटायौ;
नैपालवासि दुनियाँकन सुख् लुटायौ ।
कस्तो भरोस् दिइ गऱ्यौ उपकार् मलाई;
तिम्री कृपा हुनगई बिपती हराई ॥
मारूँ कसोरि तिमीलाइ म आज आहाँ;
यस् पापले म पऱ्ला कति नर्कमाहाँ ।
यस्ता गुणी पुरुषलाइ कसोरि मारूँ ।
यो पाप कौन् धरमले गरि फेरि टारूँ ॥
क्यै छैन रिस् तिमिउपर् रति शोक् नलेउ;
फिक्रो न राख मनमा हठ छोडि देऊ ।
एती वचन् नृपतिका सुनि दिक्क मानी;
भन्छन् ति बंन्धुक तपस्वि बहूत ज्ञानी ॥

मेरो ज्यान् लिनलाई आज नृपते ! सान्है कठिन् भो भन्या;
यौटा युक्ति म बिन्ति गर्छु सुनियोस् यो दोष् सबै मेटिन्या ।
पीठाले गरी रूप् बनाउनु हवस् नाम्मात्र मेरो धरी;
काट्नूहोस् तसलाई एति कहँदै सब्का अगाडी सरी
काट बन्धुकलाई हेर सबले यस्ता मलाई अघी;
लात् हान्यो तिन बाजि तक् बल गरी कट्वाल् दहैमा लगी ।
त्यै पाप्ले गरि काटियो सकल पाप् यस्का छुटी गैगयो
यै युक्ती गरि बक्सिया हजुरको शङ्का समेत् दुर् भयो ॥
बन्धूक्का यति बात सुनेर नृपले लौ हुन्छ गर्छु भनी ।
पीठो ल्याई बनाई बन्धुकजिको रूप् काटि दीया पनि ।
पीठाका रुपमा समाधिबलले बन्धुक् पस्या छन् तहाँ;
पीठो काटिदिदा त बन्धुक मरे आश्चर्य भो लोकमहा ॥
सन्ताप् भो ति नरेन्द्रदेव नृपतीलाई अती मनमहाँ;

के गनूं अब बाँचि आज मइले प्राण् छोडिदिन्छु यहाँ ।
मन्मा येहि विचार् गरी नृपतिले जल्दी समाधी घरी;
प्राण् छोडीकन गैगया परमधाम् संसार्समुद्रै तरी ॥
दूबै मुक्त भया मछिन्द्रप्रभुका दृढ् भावनाले गरी;
सुन्ला येति चरित्र जौन जनले त्यो जान्छ संसार्तरी ।
यो यात्रा अभ्रतक् ललीतपुरमा चल्दै छ रथ्को गती
चार् पाङरा विच चार भैरव र नाग् बस्छन् म लेखूं कति

श्रीमछिन्द्रकथामाश्रीमछिन्द्रनाथप्रादुर्भाव-
वर्णनको पहिलो कथा समाप्त भयो

---

एक् दिन् भक्तपुरी विषे अति गरिप् एकबृद्ध ज्यापू पनि;
हिड्यो खेत्विच जान हत्पत गरी खेतो गरूँला भनी ।
बाटैमा पनि एक ब्राह्मण बुढा हिड्दा माहा भेट् भया ।
तिनले तेस्कन डाकि, हाँसि मुखले एकान्तमा ली गया ॥
भन्छन् औषधि नेत्रको तिमी अती गर्छौ भन्याको सुनी ;
आफ्नी पत्नि बिरामि भै दुख हुँदा आशा मनैले गुनी ।
लौजाऊँ हिड औषधी गर तिमी जो माग्दछौ दीउँला ;
आराम् भो यदि पत्निलाइ त भन्या तिम्रो विपत टारुँला ॥
यस्ता बात् सुनि ज्यापु भन्छ, "टिमिले मेडो बयान् ढेड् गडि
जाएणया हैन म टा टठापि हिर लौ मेडा भडैमा पडिस्" ।
भन्न्या यति सुनेर ब्राह्मणजिले तेस्लाइ साथ्मा लिई ;
श्री भक्तपुरिदेखि टौदह पुगी खुप् हर्ष मन्मा भई ॥
हे वैद्य ! सुन, नाग हूँ म जहिको एक् बृद्ध ब्राह्मण् बनी ;
त्याँहा औषधि गर्नलाई अहिले भादगाउ देखी पनि ।
एती मात्र भनेर नाग हा भै तेस् ज्यापुलाई लिई ;
जल्भित्रै पशि, आफना घर लगी, मिष्टान्न भोजन् दिई ॥

भोजनले गरि ज्यापुलाई बहुतै खुस् पारि एकान्तमा;
राखी, अग्नि समान नागिनिकनै त्याई दिया साथका।
लौ भाई! गर औषधी, जब भन्या औषध् दियो ज्यापुले;
खुस् भै नागिनिका दुवै नयनमा लाई दिया आफूले॥
आँखा नागिनि का खुले सकल शोक् एकछीनमा गैगयो;
यो देख्दा हुँदि नागका मनमहाँ आश्चर्य खूपै भयो।
नाग् नागीनि दुवै अती खुशि भई रत्नै असंख्यै दिया;
भोटो एक हिरामणी जडित को पैन्हाइ दीदा भया॥

यति गरी वरि ज्यापू लाई भादगाउँ माहाँ;
लगिकन पहिले भेट् भै गयेथ्यो त जाहाँ।
उहि रित उँहि छाडी नाग् पनी फर्कि आया;
धन बहुत हुँदामा ज्यापुका दुख् हरांया

नागराज्देखि असंख्य दौलत मिली पूर्णै गियो ता पनि
ज्यापूको त स्वभाव छुट्छ कहिले उत्रो महाजन् बनी।
खेती धाउँदथ्यो गरिप् भइ उही भोटो लगाईकनै;
एक् दिन् खेत् बिचमा त एक भुतले पक्डेछ तेस्लाइनै॥
भोटो दे तँ मलाई भन्छ भुतले, "जा डिन्न भोटो मटा;
थ्याठै डुःख डिडो रहेछ छोरि ड्यौ जाऊ न आऊ यटा"।
ज्यापू यै कँहदा रहेछ, उ सुनी भूत् भन्छ फेरी अनी;
झन् यो ज्यापु त छोरिद्यो भनिकनै लागेछ माग्नै पनी॥
भोटो दीनु कता छ गम्किकन ता यो छोरि खोज्न्या भयो;
भूतका बात् सुनि भन्छ ज्यापु रिसले "क्या भन्दछन् भूट यो
अट्ठो लाउँदछन् उसै म ट कुडा चान्डैन यौता पनि;
धेरै सेखि नगड् अछाडि हिरुला गंडैन भुट् सुट भनी"॥
एक् दिन् यै गडबड् गरी भुतकनै तेस्ले हटाई दियो;
भोलीपल्ट सरक्क आइ भुतले लुक्न्या जगा एक् लियो
नेवार् हुस्सु हुँदा त खेतबिचमा राखेर भोटो पनि;

गर्मी भो भनि, काम गर्न तिर त्यो लागेछ काल्हा मनी ॥
त्यै औसर्कन पारि भुत् उहिं थियो भोटो लिई कूच भयो ;
ज्यापूको तडि तुम्बडी उडिगयो बौल्हा समान् भैगयो ।
देख्ता देख्तै भुत अलपभै गयो नेवार निराशै भई ;
फर्क्यो घर् तिर के गरी, कसरि त्यो पाइन्छ खोज्नै गई ?
यस्तै रित्सित केहि दिन् बिति गया एक् दिन् मछिन्द्रै जिको;
रथ्यात्रा गरदा पुजा हुन गयो भारी ललित्पूरको ।
तेस्मा पाटन वासिले भुतवली दियेनछन् अन्नको;
त्यै रिस्ले भुतहेरु भक्तपुर गै ल्यायेर फौज् भूतको ॥
नैवेद्ये जति लाउँछन् उती उति खाई दिया छन् सबै;
कोटी मूरि "छुस्वामुस्या" उडिगयो पत्ता कँही क्यै न भै;
हाहाकार परिगो सबै सहरमा क्या यो अचम्मै भयो;
नैवेद्ये यतिको लगाई सकियो त्यो सव् उडी गैगयो ॥
त्यै बिच्मा पनि एक तान्त्रिक बुढो आई विचारै गऱ्यो;
खाया छन् भुतले सबै तब यांहाँ सङ्कस्त यस्तो पऱ्यो ।
यस् निम्ती भुतको सबै फउज यो बाँधेर जम्मा गरी;
देखाऊँछु म आज हेर सबले, इन्को तमास् यस् घरी ॥
येती मात्र भनी फुकेर अछता चारै दिसामा छऱ्यो;
भुत्को फौज खुरू खुरू उहि बखत् तेस्ले त जम्मा गऱ्यो ।
भोटो चोर् भुत सोहि फौज बिचमा आई मिल्याको थियो;
मानिस्का त फऊजले सकल त्यो फौज् भूतको देखियो ॥
जुन् मानिसहरुका त लस्करमहाँ नाग् टौदहैका पनि;
मानिस् रुप् लिई आउँदा कन भया यात्रा म हेर्छु भनी ।
भाद्गाऊँ बिचको त ज्यापु पनि त्यो ताँही गयाको थियो;
त्यो भोटोकन देखि भूतहरुका फौज् मा दगुड्दो भयो ॥
फेरी मानिस रूप नाग् पनि गयो दङ्गा ठूलो भैगयो;
लस्कर मानिसको जमा उहिं हुँदा घऱ्चा बहुतै भयो ।
भोतो ले भनि भन्छ ज्यापु, भुतले जा दिन्न भन्दै थियो;

मानिस्को रुप नाग् गई भुतकने मुडको चलाई दियो।
नागको मुड्कि पऱ्यो जसै भुत पनी केही डराई तहीं
लाग्यो भन्न, चिन्ध्या तलाई मजिले, घेरै भनू क्या अझै।
यो भोटो तजि माग्दछस् यदि भन्या दिन्छू म राजी भई
ज्यापूलाई दिन्या तँ हास् यदि भन्या जा बस् घरैमा गई॥

यस्ता बात् सुनि भूतका रिस उठी नाग् भन्दछन् फेरि यो;
पैले ज्यापुकनै दिञा त मजिले फर्काउनू व्यर्थ हो।
ज्यापूलाई न दी हुंदैन मजिले तैंले न दीन्या भने;
तेरो दुष्ट स्वभाव् रहेछ तब पो चोरेर तैंले लगिस्
के गर्नु सबलाइ चित्त बुझन्या गर् युक्ति, लौ तैं अहो;
सबका चित्त बुझास् कदापि नपरोस् यो रीस भोटामाहां।
नागका एति बचन् सुनेर भुतले एकछिन् बिचारे गरी;
यो बात् ठिक् ठहराइ भन्छ सबका साम्ने अगाडी सरी
यो भोटो इ मछिन्द्रनाथ्कन दिनू नासो इनैमा रहोस्;
यै यात्राबिच वर्ष वर्ष दिनमा देखन्या सबैले इओस्
मेरो बास छ भक्तपुर् नगरिका एक् कोश बिच्मा तहीं;
श्री साक्षात "सुशील भैरवजि" का स्थान् का कठोज्येमहीं
तैंले फर्कि मलाई वर्ष दिनमा एक् पल्ट देखाउनू;
भाद्गाऊ तिर फर्कि ज्यापुकन फेर् देखाउनै लाउनू।
नैरित्यै तिर फर्कि टौदह बिषे नाग्लाइ देखाउनू;
जौला खेल्बिच वर्ष वर्ष दिनमा यात्रा चलाई दिनू॥

भुतका एति वचन सुनेर सबको मञ्जुर् यसैमा भयो;
पूजा पूर्ण भयो मछिन्द्रप्रभुको फर्केर लस्कर् गया।
तान्त्रिकले पनि छोड् दियो भुतहरू त्यै दीन देखी पनी;
यो यात्रा चलिगो छदै छ अभ्कतक् सक्तीन विस्तार् भनी।
यो यात्रा बिच जाइ जौन जनले मत्स्येन्द्रनाथ्कौत फेर्
भोटो को दरशन् गर्‍या यदि भन्या डर् भूतको हुन्न केर्॥

तेस्का घर् बिचमा कदापि अनिकाल् पर्दैन घेर् क्या भनूं;
पुण्यै अक्षय हुन्छ, फल् यति भनी मैले कहाँतक गनूं ॥
मेरो आज लहड् यही चलिगयो मत्स्येन्द्रनाथ्को कथा ;
लेख्याँ श्लोक बनाइ, मेरि कविता निष्फल् न होस् यो वृथा ।
चालीसे थरहो घरै छ बुझ्नू गाऊँ कटौंज्येमहाँ ;
मेरो नाउँ छ चक्रपाणि म त छू श्रीकान्तिपुरमा जहाँ ॥

मछिन्द्रनाथयात्राको बनाइ श्लोक ई सबै ।
प्राभाकरीकम्पनीमा चढाया अति खूसिभै ॥
माफ् राख्नू हे सज्जन हो ! मलाई ; केही अशुद्धै छ भन्या सच्याई ॥
घोडा चढो हिड्दछ ? जो, उ लड्छ ; कैले कँहीं भूल् सब लाई पड्छ ।

श्रीमछिन्द्रकथामा श्रीमछिन्द्रनाथको
उत्पत्तिवर्णनको दोस्रो कथा
समाप्त भयो

## श्रीमछिन्द्रनाथको कथा समाप्त भयो ।



